जनमुक्ति

# अभियान

## महत्वपूर्ण राजनैतिक शब्दहरू



विश्वास सुब्बा

सम्पादक

प्रकाशक

**जनमुक्ति अभियान समूह**

काठमाडौं

# नेपालको केन्द्रीय संगठन तालिका



जनमुक्ति

# अभियान

## महत्वपूर्ण राजनैतिक शब्दहरू


विश्वास सुब्बा (विश्वास दीप तिगेला)

सम्पादक



प्रकाशक

जनमुक्ति अभियान समूह

काठमाडौं

| | | |
|---|---|---|
| २०५६ | – | संस्करण |
| लेखकमा सुरक्षित | – | सर्वाधिकार |
| जनमुक्ति अभियान समूह, काठमाडौं | – | प्रकाशक |
| ५०० | – | छपाई प्रति |
| रु. ।– | – | मूल्य |
| इमेज कम्प्युटर सर्भिस<br>डिल्लीबजार, काठमाडौं | – | लेआउट |
| लक्ष्मी अफसेट प्रेस<br>डिल्लीबजार, काठमाडौं | – | मुद्रक |

# समर्पण

जब-जब जातीय शोषण, अन्याय अत्याचार चल्छ, तब यस देशका मुक्तिगामी योद्धाहरू संघर्षमा उत्रन्छन् । समर्पण मेरो वहाँहरूलाई जो जातीय मुक्ति र राष्ट्रिय स्वाधीनताको निम्ति संघर्षरत छन् । जसले युद्धरत् मुक्तियोद्धाहरूलाई बाटो चिनाइदिनुभयो ।

# राजनैतिक चेतनाको लागि

परिवर्तन निरन्तर हुन्छ, परिवर्तन अवश्य छ। आज विश्वको राजनीतिमा देखापरेको प्रतिस्पर्धात्मक राजनैतिक समाजवाद, वर्गीय चरित्रका राजनैतिक साम्यवाद र समान प्रतिनिधित्वको राजनीतिक समानुपातिकवाद, आ-आफ्नो क्षेत्रमा महत्वपूर्ण बन्दै आएको छ। यी तिनैवटा सिद्धान्तका निम्ति आ-आफ्ना आधारहरु अवश्य छन्। तर हाम्रो मुलुकमा धार्मिक विषमता, सांस्कृतिक विषमता, भौगोलिक विषमता, आर्थिक विषमता, जातीय विषमता, सांस्कृतिक विषमता, ऐतिहासिक विषमता भएको कारण समानुपातिकवादको सिद्धान्त अत्यन्तै आवश्यक एवं उपयोगीसिद्ध देखिन्छ।

नेपालमा धेरै पार्टीहरु छन्। कुनै पार्टी आमूल परिवर्तन चाहन्छ। कुनै पार्टी यथावतवादी भई वर्तमानको राजनैतिक प्रक्रियालाई निरन्तरता दिन संघर्षरत छन्। हाम्रो अनुभवमा केही व्यक्तिहरु सिद्धान्तविहीन राजनीतिमा अल्मलिएको देखिए पनि सैद्धान्तिक राजनैतिक शुरु भईसकेको नकार्न सकिन्न।

कोही नेता, कोही कार्यकर्ता, कोहीराजनैतिक चिन्तक, कोही नास्तिकवादी व्यवहारिक व्यक्ति समग्रमा ठूलो जमात, जमातमा धेरै व्यक्ति, धेरै व्यक्तिका आ-आफ्नै स्वतन्त्र धेरै विचार हुन्छ। कोही भन्छन् Politice is Dirty Game तर यथार्थमा राजनैतिक ज्ञाताहरु भन्नुहुन्छ, जोकोही पनि राजनीतिबाट अछुत रहन सक्दैनन्। साधारण व्यवहार गर्नु पनि राजनीति हो। यसर्थ नेपालको भनौं या विश्वको ऐतिहासिक राजनैतिक पृष्ठभमिको आधारमा हामी यो निष्कर्षमा पुग्न सक्छौं कि- "राजनीति सक्रियता नै होइन, तर राजनैतिक चेतना, राजनैतिक चिन्तन चाहिं प्रत्येकसँग हुनु जरुरी छ।" किनकि विश्वका कतिपय जाति आदिवासीहरु आज जनजाति अवस्थामा पुगेका छन्, उत्पीडित जाति र दलित जातिमा रुपान्तरित भएका छन्। यो अवस्था नेपालको मात्र होइन विश्वभरकै समस्या हो। यसको मुख्य कारण हिजो राजनीतिक चेतनाको अभावमा राजनैतिक संलग्नता नहुनु हो। हुन त वर्ण, श्रेणी र समस्या विनाको समाज सोभनीय नहोला तर अझै पनि राजनैतिक चेतना आउन नसके, हाम्रो समाज समुदाय पुनः शिकार बन्दै जानेमा द्विविधा छैन।

राजनैतिक विसंगति समस्याको बावजुद धेरैको सल्लाह र सहयोगमा यो पुस्तक तयार भएको छ। आशा छ, अद्योपान्त सूक्ष्म सुक्ष्म अध्ययन गरेर केही मात्रामा भए पनि राजनैतिक शब्द ज्ञान एवं चेतना लिनुहुनेछ भन्ने आशा राखेको छु।

अन्तमा, विज्ञ पाठक वर्गहरु, अभिभावक ज्यूहरु र शुभचिन्तकहरुबाट गल्ती पत्ता लगाइ दिनुभई स्वस्थ सल्लाह प्रतिक्रिया एवं सुझावको आशा राख्दछु।

जय मुक्ति।

– विश्वास सुब्बा
पाख्रीबास-३ बजार
धनकुटा, नेपाल

## अर्ध उपनिवेश (Semi-colony)

साम्राज्यवादीहरूको दवावमा परेर कुनै पनि देशको शासन सञ्चालन हुन्छ भने त्यसलाई "अर्ध-उपनिवेश" भनिन्छ। यसमा साम्राज्यवादी देशहरूले अर्को देशको सरकारलाई विभिन्न दवावमा राखेर आफ्नो पिछलग्गु बनाउँदछ। यस्तो पिछलग्गु अवस्थालाई अर्ध-उपनिवेश भन्न सकिन्छ।

## अर्ध सामन्ती (Semi Feudal)

तेस्रो विश्वका प्रायः जसो देशहरूमा अर्ध-सामन्ती अवस्था भएको भेटिन्छ। पुँजीवादको विकासले गर्दा अचेल सबै देशका दवावले गर्दा ती देशको उद्योगमा विकास पनि हुन सकिरहेको छैन। सामन्ती अर्थ व्यवस्थाको सट्टा कलकारखानाको विस्तारमा जोड दिन खोजिएको अवस्था अर्ध-सामन्ती अवस्था हो। यसमा सामन्तवाद पूरा मात्रामा पनि देख्न सकिँदैन, उद्योग-धन्दाको विकास पनि राम्रोसँग भइसकेको हुँदैन।

## अध्यात्मवाद (Spiritualism)

अध्यात्मवाद अवैज्ञानिक र तर्कहीनवादको रूपमा लिइन्छ। अध्यात्मवादले आत्मा, चेतनालाई पहिलो र भौतिक पदार्थलाई दोस्रो मान्छ, ईश्वर या कुनै महान् अलौकिक शक्तिले नै ब्रम्हाण्डको श्रृष्टि गरेको हो, पालन पोषण सञ्चालन र संहारकर्ता पनि उही नै हो भन्दछ। उसको इच्छा बिना केही हुन सक्दैन, भन्ने कुरालाई अध्यात्मवादले अगाडि सारेको छ। यसले पूर्वजन्म, स्वर्ग, नर्क, परलोक, भाग्य, जातिभेद, ठूला, साना, गरीब, धनी जस्ता कुरामा विश्वास राख्छ। यसले शोषकवर्गको सेवा गर्छ र धर्मको प्रचार-प्रसार गर्दछ।

## अध्यादेश (Ordinances)

अध्यादेश राज्यको अथवा देशको कार्यपालिकाले विशेष परिस्थितिको सामना गर्न केही समयका लागि जुन कानुन पारित गर्दछ त्यसलाई अध्यादेश भनिन्छ। यो खासगरी सङ्कटको समयमा हुन्छ। बाह्य आक्रमण भए अथवा हुने सम्भावना भए, विधान अनुसार कार्य हुन नसक्ने अवस्थामा, आर्थिक सङ्कट देखापरे प्रायः यो कानुन पारित गरिन्छ। खास गरी यस्तो कानुन छ महिनासम्मको निम्ति हुन्छ संसदको बैठकले फेरि यसलाई बढाउन वा रद्द गर्न सक्दछ।

## अधिकार (Right)

"अधिकार मुनष्यको त्यो क्षमता हो जसले अरू मानिस वा मानिसहरूबाट बलपूर्वक विशेष प्रकारको काम गराउन सक्छ।"

- आस्टिन

"अधिकार ती माग हुन् जसलाई समाजले स्वीकार गर्दछ र राज्यद्वारा लागू हुन्छन्।"

- बोसांके

"विशेष कार्य गर्ने स्वतन्त्रताको उचित माग गर्नु अधिकार हो।" - बिले

"अधिकार मनुष्य जीवनका ती शर्तहरू हुन् जसको अभावमा कुनै पनि मानिसले आफ्नो सर्वाङ्गीण विकास गर्न सक्दैन ।" - लास्की

"अधिकार एउटा व्यक्तिले समाजको मत र शक्तिद्वारा अर्को व्यक्तिको कर्तव्यलाई प्रवाहित पार्न सक्ने क्षमता हो ।" - हलैण्ड

## अन्तर्राष्ट्रिय कानून (International Low)

राष्ट्रिय कानून एउटा राज्यको भू-भागसम्म मात्र सीमित रहन्छ भने अन्तर्राष्ट्रिय कानून सर्वव्यापी हुन्छ । अन्तर्राष्ट्रिय कानून "विश्व एक हो" भन्ने धारणाबाट प्रभावित भएको देखिन्छ । यस कानूनले राज्यहरू बीचको पारस्पारिक सम्बन्धको व्याख्या गर्दछ । राजनीति शास्त्रका ज्ञाता ओपेनहाइभरका अनुसार- अन्तर्राष्ट्रिय कानून अथवा राष्ट्रहरूको विधान यस्ता रूढीजन्य तथा परम्परागत नियमहरूलाई भन्दछन् सभ्य राज्यहरूले एक अर्कासँग व्यवहारमा बन्धनकारी मान्दछन् ।"

अन्तर्राष्ट्रिय कानूनलाई नमान्ने विद्वानहरू पनि पाइएका छन् । राष्ट्रिय कानून सरह अन्तर्राष्ट्रिय कानूनको पछाडि त्यस्तो कुनै सम्प्रभु शक्ति छैन जसले आदेश दिन सकोस् र जसको आज्ञा सबैलाई मान्य होस् । राष्ट्रिय कानून झैं अन्तर्राष्ट्रि कानूनको व्याख्या तथा प्रतिपादनको लागि अन्तर्राष्ट्रिय न्यायलय पनि छ ।

## अन्तर्राष्ट्रिय राजनीति (International Politics)

विश्वका विभिन्न राष्ट्रहरूको आपसी सम्बन्ध क्रिया, अन्तर्क्रिया एवं प्रतिक्रियामा आधारित हुन्छ । यो प्रक्रिया द्विपक्षीय एवं बहुपक्षीय दुवै सम्बन्धमा कायम रहन्छ । सामूहिक चासोका विषयहरूमा राष्ट्रहरूले देखाउने उक्त क्रिया, प्रतिक्रिया एवं अन्तर्क्रियालाई समष्टिगत रूपमा अन्तर्राष्ट्रिय राजनीति भनिन्छ । अन्तर्राष्ट्रिय राजनीति अन्तर्राष्ट्रिय सम्बन्धसँग ज्यादै सम्बन्धित हुन्छ ।

## अन्तर्राष्ट्रिय सङ्गठन (International Institutions)

तीन वा तीनभन्दा बढी राष्ट्रहरूद्वारा स्थापित गरिएको त्यस्तो सङ्गठनलाई अन्तर्राष्ट्रिय सङ्गठन भन्दछन् जसको वैधानिक अस्तित्व त्यसको स्थापना गर्ने राष्ट्रहरूभन्दा भिन्न र स्वतन्त्र हुन्छ । साधारणतया: अन्तर-सरकारी सङ्गठनलाई नै "अन्तर्राष्ट्रिय सङ्ठन" भन्ने प्रचलन छ । अन्तर्राष्ट्रिय सङ्ठनको स्थापना अन्तर्राष्ट्रिय सन्धिको आधारमा गरिन्छ र सङ्ठनका निश्चित उद्देश्यहरू हुन्छन् ।

## अन्तरविरोध

दुई विपरित तत्वहरूबीच अन्तर्विरोध हुन्छ । अन्तर्विरोध नभएको कुनै पनि चिज छैन र अन्तरविरोध नभै कुनै पनि चिज टिकिरहन सक्दैन । सबै किसिमका अन्तर्विरोधहरूका आ-आफ्नै विशिष्टहरू छन्, त्यसै हुनाले तिनीहरूलाई एउटै तराजुबाट जोख्न सकिदैन । यतिमात्र होइन हरेक अन्तर्विरोध दुवै पक्षहरूको पनि आ-आफ्नो विशिष्टताहरू हुन्छन् र त्यसै हुनाले तिनीहरुलाई पनि एउटै मान्न सकिदैन ।

नेपालको सन्दर्भमा राजनीतिमा विशेष गरी जातीय र वर्गीय अन्तरविरोधहरू

रहेका छन् । बहुसंख्यक रूपमा रहेका विभिन्न जाति र अल्पसंख्यक जातिबीचको वैमनश्यता वा खिचातानलाई अथवा एक जाति विशेषबाट शासन हुनु र अन्य जाति शासित भइरहनुलाई जातीय अन्तर्विरोध भनिन्छ । आर्थिक दृष्टिकोणले सम्पन्न र विपन्नबीच हुने, धनी र गरीवबीचको मतभेदलाई वर्गीय अन्तरविरोध भनिन्छ ।

यस अर्थमा नेपालमा दुईवटै अन्तरविरोधहरू कायमै छ । तथापि आज मुलुक ब्राम्हणवादी जातीय अहंकारवाद लादिएको परिस्थितिमा जातीय अन्तर्विरोध नै प्रमुख समस्या हो । मुठ्ठीभर जाति छन् जसले सयौं वर्षदेखि सत्ता कब्जा गरेर राज्यको कानून आफ्नो अनुकूल निर्माण गरी अन्य जातिको बाँच्न पाउने अधिकार खोसेका छन् अर्थात भाषा, लिपि, धर्म र संस्कृतिमा आफ्नो जातीय अहंकारवाद लादेका छन् र राज्यसत्ताको आडले शासन, शोषण र उत्पीडन चलाएका छन् । त्यसबाट अन्य जाति/जनजाति, दलितहरूले मुक्ति पाउनु नै आजको समस्या हो ।

नेपालका कम्युनिष्टहरू वर्गीय दृष्टिकोणले एकपक्षीय सोचाईबाट ग्रसित छन् तसर्थ सत्यलाई ठम्याउन नसक्दा असफल भइरहेका छन् र भइरहने छन् । एउटै जातिबीच धनी र गरीव वर्ग हुन्छ, मालिक र नोकर हुन्छन् तर त्यस जातिको भाषा, धर्म र संस्कृति एउटै भएकोले उनीहरूको जातीय सम्मान एउटै हो । उदाहरणका लागि एउटा ब्राम्हणको धर्म मेटीए सबै ब्राम्हणको धर्म मेटिन्छ, एउटा नेवारको भाषा लोप भयो भने सबै नेवारको भाषा लोप हुन्छ, एउटा मगरको संस्कृति समाप्त भए सबै मगर जातिको संस्कृति समाप्त हुन्छ ।

भाषा, धर्म र संस्कृति नै जातिको जातीय पहिचान हो यस अर्थमा जातीय अस्तित्वका निम्ति वर्गीय अन्तरसम्वन्ध गौण भएर जान्छ । नेपालको वर्तमान सन्दर्भमा जातीय अस्तित्व रक्षाका लागि जातीय मुक्ति आन्दोलन अनिवार्य छ । जातीय अन्तरविरोधलाई वा जातिगत अन्तर्विरोधलाई समाप्त गर्न नसके अन्तरविरोध समाप्त गर्न सकिन्न ।

## अवसरवाद र प्रतिक्रियावाद (Oppertunism & Reactionism)

समय, परिस्थिति, अवसर अनुसार फाइदा उठाउन अघि सर्नु अवसरवाद हो । बेफाइदा हुने भए पछि हट्नु यसको विशेषता हो । कामको प्रतिक्रिया हेरेर आफ्नो पनि जालसाजी फिजाउनु प्रतिक्रियावाद हो ।

## अराजकतावाद (Anarachism)

राज्यसत्ताको आवश्यकता नठान्ने विचारधारालाई अराजकतावाद भन्न सकिन्न । यो मजदूरवर्गको घेरामा, पेरिस कम्यून र त्यस पछि पनि बेला बखतमा देखापरेको भड्काउ थियो । अराजकतावादले सर्वहारावर्गले क्रान्ति गरिसकेपछि राज्यसत्तालाई अन्मूलन गरिहाल्नु पर्छ भन्ने व्यवहारिक सोचाई राख्दछ । मार्क्सवादमा विश्वास राख्नेहरूसँग यसबारे यिनीहरूको ठूलो मतभेद छ । अराजकतावादीहरू राज्यसत्ता तुरुन्तै हटाई हाल्नुपर्छ भन्दछन् भने मार्क्सवादीहरू यो विस्तारै वर्गहरूसँग हराउँदै जान्छ भन्छन् ।

## असंलग्न परराष्ट्र नीति :

विश्वका कुनै पनि महाशक्ति राष्ट्र वा शक्ति राष्ट्रको पक्षमा संलग्न नभई आफ्नो स्वतन्त्र र सार्वभौमिक अधिकारको आफैद्वारा सुरक्षा गरी विश्व समुदायका प्रत्येक राष्ट्रसँग मधुर सम्बन्ध राख्नु असंलग्न परराष्ट्र नीति हो। संयुक्त राष्ट्रसंघको बडापत्रमा उल्लेखित आधारलाई पञ्चशीलको आधार पनि भनिन्छ।

## अति पछौटे जाति

जुन जातीय समुदाय वर्तमान राज्यव्यवस्थाबाट समेटिन सकेका छैनन् साथै कुनै सभ्यता, प्रणाली वा पद्धतिबाट टाढा रहेका छन्, जसले भाषा, धर्म र लिपि विकास गर्न सकेका छैनन्, ती जातीय समुदाय राष्ट्र वा राज्यको सम्पूर्ण क्षेत्रबाट ओझेल परेका छन् र लोप हुने अवस्थामा पुगेका छन्। त्यस्ता जातिलाई अति पछौटे जाति भनिन्छ।

## आम माफी (General Amnesty)

देश विरूद्धको अपराधमा सजायँ हुने वा भएको व्यक्तिलाई सजायँबाट मुक्त गरिनुलाई आम माफी भनिन्छ। आम माफी राजा वा राष्ट्राध्यक्षबाट दिइन्छ।

## आदिवासी

सामान्यतया आदिमकालदेखि प्राकृत श्रोत र त्यसको उपभोग गर्दै भू-आधारबाट जीविका चलाउँदै बसोबास गर्ने जाति वा त्यस्ता जातीय समुदायका मानिसहरूलाई बुझाउँछ। तर निम्न मौलिक पहिचान राख्ने जातीय समुदायलाई नेपालका समाज शास्त्रीहरूले आदिवासीको परिभाषा दिएका छन्।

(क) जुन जातीय समुदायको तथाकथित, राष्ट्रिय समुदायको मूल प्रवाहको भन्दा भिन्न उत्पत्ति, आफ्नै मौलिक एवं विशिष्ट सांस्कृतिकतथा भाषिक परम्परा छ र जसको वर्तमान धार्मिक विश्वास प्रकृतिवादमा आधारित छ अथवा जसले वर्तमान राज्यद्वारा स्थापित हिन्दू धर्मलाई आफ्नो परम्परागत मौलिक धर्म भनी दावा गर्दैनन्।

(ख) जुन जातिको समुदायका पूर्वजले आधुनिक नेपाल अधिराज्यको सीमानाभित्र पर्ने कुनै एउटा भूभागमा आफूलाई पहिलो वा पहिलो मध्येको वा मूल वासिन्दाको रूपमा स्थापित गरेका थिए र जसको आफ्नै लिखित अथवा अलिखित ऐतिहासिक निरन्तरताा छ।

(ग) जुन जातीय समुदायहरू विगत लगभग चार शताब्दीदेखि र विशेषतया आधुनिक नेपाल विस्तार क्रममा आफ्नै मूल थलोमा विस्थापित भएका छन् र त्यहाँको प्राकृत श्रोतहरू (कृषियोग्य जमिन, पानी, खानी, जङ्गल) माथिको आफ्नो परम्परगत अधिकारबाट बञ्चित हुन पुगेका वा भएका छन्।

(घ) जुन जातीय समुदायहरू जो नेपालको राजनीतिक शासन व्यवस्थामा निर्णायक भूमिका खेल्नबाट वञ्चित छन् र जसको प्राचिनतम संस्कृति, भाषा र धर्म उपेक्षित अवस्थामा छ र उसको सामाजिक मूल्य र मान्यता अवहेलित भएको छ।

(ङ) जुन जातीय समाजको समुदाय समानतावादी संरचनामा आधारित छ अर्थात जात प्रथा वा वर्णाश्रम धर्ममा आधारित श्रमको विभाजन र लिङ्ग भेदलाई आफ्नो समाजको आवश्यक शर्त (नियम) मान्दैनन्।

## आध्यात्मिक दर्शन

आध्यात्मिक दर्शनलाई आस्तिक दर्शन पनि भनिन्छ । त्यसबेलाका विचारक, चिन्तनकर्ताहरूले अहिलेको जस्तो वैज्ञानिक अनुसन्धान, खोज र उपकरणको अभावमा एक अनुमानित तरिकाबाट रचना गरिएको विचार हो । यसमा ईश्वरको अस्तित्वलाई कायम गरिएको छ । ईश्वरको उत्पत्ति शून्यबाट भएको बताएको छ । संसारको सृष्टिकर्ता भनेको ईश्वर हो । ब्रह्माले संसारको जीवको उत्पत्ति गर्नुभयो, विष्णुले पालन गर्ने काम गर्नुभयो र शिवले संघार गर्ने काम गर्नुभयो भन्ने गलत अवधारणाको सृजना गरियो । राजा-महाराजा भनेका ईश्वरका दुत हुन्, उनीहरूलाई शासन गर्न ईश्वरले पठाएको हो, त्यसैले राजाको बोली ईश्वरको बोली जस्तै हो भनी सर्वसाधारण जनताको विचारलाई भक्ति र स्तुतिवाददतिर लगाइदिए । गरीब र धनी हुनु भनेको पूर्वजन्मको फल हो । मानिस मरेपछि पाप गर्ने नर्क जान्छ, धर्म गर्ने स्वर्ग जान्छ भनी स्वर्ग र नर्कको पकिल्पना गरे । यतिसम्म कि पछि पछि त सर्वसाधारण जनतादेखि राजा महाराजा सामन्त समेतलाई जसले ब्राह्मणलाई दान दक्षिणा प्रशस्त मात्रामा दिनेछ उनीहरूले मोक्ष प्राप्त गरी स्वर्ग जानेछ भनी अन्धभक्त र आडम्बरी विचारलाई जन्माए । यस कुराबाट के स्पष्ट हुन्छ भने आध्यात्मिक दर्शन भनेको त्यस समयमा शासक जाति वा वर्गलाई शासन सत्ता चलाउन सहयोग पुगोस् भनी बनाइएका विचार मात्र हो ।

## आत्म-निर्णयको अधिकार

आत्म-निर्णयको अधिकार भन्नाले कुनै पनि व्यक्तिले आफ्नो भाग्य र भविष्यको बारेमा आफैले निर्णय गर्न पाउने अधिकार आत्म-निर्णयको अधिकार हो । राजनीतिमा यसको अहम् भूमिका हुन्छ । आजसम्म नेपालका बहुसंख्यक आदिवासी/जनजातिहरूको भाग्य र भविष्य एक जातीय सत्तासिन अभिभाज्य वर्गले निर्णय गर्दै आएका छन् । राष्ट्रको राजनीतिक, आर्थिक, सामाजिक तथा सांस्कृतिक विकास पद्धति छान्ने र निर्णय गर्ने अधिकार आत्म निर्णयको अधिकार अन्तर्गत पर्दछ ।

आत्म निर्णयको अधिकार (Right to the salf Determination) तीन प्रकारका हुन्छन्–

(क) व्यक्तिको आत्म निर्णयको अधिकार

(ख) जाति वा समुदायको (श्वशासन वा स्वायत्त शासनका लागि) आत्म निर्णयको अधिकार

(ग) राष्ट्र वा राज्यको आत्म निर्णयको अधिकार ।

(क) व्यक्तिको आत्म निर्णयको अधिकार : कुनै पनि व्यक्तिले अर्काको दवाव/हस्तक्षेप वा करकापमा नपरी स्वतन्त्र या स्वाधिन भएर निर्णय गर्ने अधिकार व्यक्तिको आत्म निर्णयको अधिकार हो र कुनै पनि व्यक्तिले आफ्नो स्वविवेकले आफ्नो भाग्य र भविष्यको निर्णय आफैले गर्न पाउने अधिकारलाई आत्म निर्णयको अधिकार भनिन्छ ।

(ख) जातिहरूको आत्म निर्णयको अधिकार भन्नाले अन्य जातीय समुदायबाट राजनीतिक पृथकता वा अलगांव वा छुट्टै स्वतन्त्र राज्य वा जातीय राज्यको निर्माण ।

(ग) कुनै पनि बाह्य हस्तक्षेप विना आफ्नो राज्य वा राज्यको भाग्य निर्माण गर्ने निर्णयलाई राष्ट्र वा राज्यको आत्म निर्णयको अधिकार भनिन्छ।

साम्यवादी सिद्धान्त बोकेका राजनीतिक पार्टीले नेपालमा विभिन्न तरिकाले जातीय मुक्तिका निम्ति जातिको आत्म निर्णयको अधिकारको व्याख्या गरेका छन् । तर जातिको नाउँमा स्वतन्त्र सार्वभौमसत्ता सम्पन्न राज्य प्राप्तिका लागि आत्म निर्णयको अधिकार स्वीकार हुँदैन । जातीय अहंकारवाद र जातीय दाशत्वका संचालकहरू विरूद्ध एकात्मक शासनको अवधारणा अन्त्य गरी संघीय सरकार अन्तर्गत प्रान्तीय राज्यभित्र जातीय स्वशासन वा स्वयत्त शासन दिने आत्म निर्णयको अधिकार सुरक्षित हुने गर्दछ ।

## आदिम साम्यवाद (Initial Communism)

मानव समाजको प्रारम्भिक अवस्थातिर उत्पादनका साधनहरू (जङ्गल, शिकार, फलफूल, माछा, गुफा ओडार आदि) सबै साझा ठानिन्थे । कुनै पनि साधन एउटा परिवार र व्यक्तिको निजी हुँदैनथ्यो । उत्पादनका साधनहरू कसैको पनि व्यक्तिगत हुँदैनथ्यो । यसरी मानव सभ्यताको विकासको प्रथम चरणमा बाँच्नको लागि प्रकृतिले निःशुल्क उपलब्ध गराएको स्रोतलाई सामूहिक उपयोग गर्ने व्यवस्थालाई आदिम साम्यवाद भन्न सकिन्छ ।

## उग्रवाद (Ultraism)

जुनसुकै समस्यालाई आफ्नो देशको परिस्थिति अनुसार मूल्याङ्कन नगरी आतङ्क मात्र सिर्जना गरेर समाधान गन खोज्ने प्रवृत्तिलाई उग्रवाद भनिन्छ । आफ्नो शक्ति तथा समूहको मात्र बढी मूल्याङ्कन गरी कुनै पनि कुरालाई लिएर आतङ्क मच्चाउन खोज्नु उग्रवाद हो ।

## उग्र राष्ट्रवाद (Ultra Nationalism)

कुनै विशेष जाति, भाषा, भाषी, धर्मावलम्बी समुदाय वा नागरिकहरूको श्रेष्ठता एव विशिष्टता एवं विशिष्टता प्रदर्शन गर्दै आफ्नो हैकमका लागि अन्य जाति, भाषा भाषी, धर्मावलम्बी समुदाय वा व्यक्तिहरूको अवमूल्यन गर्ने, शोषण गर्ने एवं निषेध गर्न उत्प्रेरित गर्ने दृष्टिकोण वा दर्शनलाई उग्रवाद भनिन्छ । यस अनुसार विभिन्न समुदाय बीच शत्रुतापूर्ण सम्बन्ध रहने हुनाले यसकोहल्को रूपमा लडाई देखापर्दछ । यस प्रकारको लडाई अन्यायपूर्ण रहने हुन्छ । शुरूमा यो सामान्य राष्ट्रवादी गतिविधिबाट शुरू हुन्छ र समयको अन्तरकालमा उग्र राष्ट्रवादमा पतन हुन्छ । हिटलरले जर्मनीमा यहुदी माथि चलाएको दमन एवं जर्मनद्वारा अन्य राष्ट्र माथि थोपरिएको विश्व युद्ध यसै उग्र राष्ट्रवादका परिणामहरू हुन् । राज्यको स्तरबाट चलाइएको वा अपनाइएको उग्र राष्ट्रवादले अन्तमा फासिवादमा पतन गराउने उदाहरणहरू प्रशस्त देखिन्छन् ।

वर्गीय समाजमा जाति, भाषा, धर्म, लिङ्ग तथा राष्ट्र समेतलाई उचनीचको व्यवहार गर्दै "ठूला" वा धनी भनिने "सानो" लाई शोषण गरिरहेको हुन्छ । यसक्रममा यस्तो असमानताको विरूद्ध वा वकालत गर्दै न्याय, समानता तथा उचित स्थानको माग गर्नेलाई उग्र राष्ट्रवादीको संज्ञा भिडाइने गरिन्छ । तर यो नितान्त गलत हो । यो वास्तविक अर्थमा राष्ट्रवादी क्रियाकलाप हो ।

## उग्रवामपन्थी (Ultra Leftism)

कुनै पनि परिस्थितिको मूल्याङ्कन नै नगरी क्रान्तिकारी विचारलाई हतारिएर जबरजस्तीपूर्वक आफ्नो शक्तिको बढी मूल्याङ्कन गर्दै त्यसलाई लागू गर्न खोज्ने व्यक्ति विचार अथवा प्रवृत्तिलाई उग्र वामपन्थी विचार भनिन्छ । शत्रु पक्षको सबल पक्षलाई नहेरी दुर्बल पक्षको मात्रै मूल्याङ्कन गर्ने र आफ्नो सबल पक्षलाई मात्रै हेरी तमतयारी विना हतारिएर हतियार उठाई जबरजस्ती सत्ता हात लगाउन सकिन्छ भन्ने विचार राखी कार्यवाही शुरू गरिहाल्ने प्रवृत्तिलाई उग्रवामपन्थी भनिन्छ ।

## उदारवाद (Liberalisaton)

कुनै राजनैतिक दलको अनुशासनलाई वास्ता नराखी गल्ती गर्नेहरूप्रति वेवास्ता गरिरहनुलाई नै उदारतावाद भन्न सकिन्छ । राजनैतिक अर्थमा "उदारतावाद" शब्दलाई सबै ठाउँमा राम्रो मानिएको छैन ।

## उपनिवेशवाद (Colonialism)

विश्वको साम्राज्यवादी देशहरूले अर्को देश वा क्षेत्रलाई आर्थिक सामाजिक, सांस्कृतिक र राजनैतिक रूपले आफ्नो अधिपत्य जमाई त्यस देशको सार्वभौमसत्ता नै खत्तम गरिदिन्छन् । सानातिना देशलाई बल, धाक, त्रास, डर, भय जस्ता दमनकारी नीति अपनाएर आफ्नो अधिकार भित्र ल्याई सकेसम्म आर्थिक शोषण गर्छन् । सैनिक नाका बन्दी गर्छन् र स्थानीय नागरिकहरूलाई राजनैतिक अधिकारबाट वञ्चित गरिएको हुन्छ । यसरी राजनैतिक अधिकारबाट वञ्चित गरिएको अवस्थालाई उपनिवेशवाद भन्न सकिन्छ ।

## उत्पीडित जाति

एक जातिले राज्यसत्ता वा शासन व्यवस्थाको माध्यमबाट अन्य जाति एवं उनीहरूको समुदायलाई अधिकार विहीन बनाई शोषण वा शासन गर्दछन् भने ती शोषित वा शोषित जातिहरूलाई उत्पीडित जाति भनिन्छ ।

## उत्पीडित वर्ग

एउटै जातिभित्र जसले पुँजी आफ्नो कब्जामा राखी आफ्नै जातीय समुदायलाई कज्याउँछ वा शोषण गर्छ त्यस्ता शोषणमा परेका तथा पुँजीपतिवर्गले पुँजी विहीन किसान, मजदुरहरूलाई कज्याउँछ, दाश बनाउँछ वा शोषण, उत्पीडन गर्दछ भने त्यस्तादेखि शोषित, प्रताडित भएकालाई उत्पीडितवर्ग भनिन्छ.

## एकात्मक सरकार (Unitary Government)

१. एकात्मक सरकारमा एउटा मात्र सरकार हुन्छ ।

२. राज्यभित्रका प्राप्त तथा क्षेत्रका प्रशासन केन्द्रीय सरकारसँग नछुट्टिने आवद्ध रहन्छन् । एकात्मक सरकारमा प्राप्त अथवा क्षेत्रको छुट्टै अस्तित्व हुँदैन ।

३. एकात्मक सरकारमा सबै शक्ति केन्द्रमा रहने भएकाले शक्तिको विभाजन हुँदैन । एकात्मक सरकारमा शासनको केन्द्रीकरण हुन्छ ।

४. यसमा संविधानको सर्वोच्चता कायम रहँदैन । केन्द्रीय सरकारले आफ्नो नीति बमोजिम राज्यको आन्तरिक सिमानामा थपघट वा स्थानीय प्रशासनको ढाँचामा परिवर्तन गर्न सक्दछ । केन्द्रले प्रान्तलाई समाप्त पार्ने योजना पनि बनाउँन सक्दछ ।

५. एकात्मक सरकार भएको देशमा नागरिकले एउटा मात्र नागरिकता लिन पुग्छ ।

६. सम्पूर्ण देशमा एउटै कानून हुन्छ ।

७. यो शासन प्रणाली प्रायः साना राज्यका लागि उपयुक्त ठानिन्छ ।

८. एकात्मक सरकारमा प्रशासनिक खर्च कम भई मितव्ययिता हुन्छ ।

९. यसमा स्थानीय स्रोत, साधन एवं स्वयत्तताको विकास हुन पाउँदैन ।

१०. एकात्मक सरकारमा राष्ट्रिय भावनाको धेरै विकास हुन्छ । सिङ्गै देश एउटै सरकारप्रति आवद्ध रहन्छ ।

## एक जातीय हैकमवाद

एउटै मात्र जातिका मानिसहरूले राज्यसत्ता कब्जा गरी आफ्नै जातिको अनुकूल राज्य व्यवस्था कायम गराई आफ्नै जातिलाई राज्य व्यवस्था वा राज्य प्रशासनमा प्रभुत्व जमाउन विशेष व्यवस्था गर्दछ भने त्यसलाई एक जातीय हैकमवाद भनिन्छ ।

## एक राष्ट्र दुई व्यवस्था (One Nation Two Systme)

चीन एक राष्ट्र भएतापनि हङ्कङ्गमा छुट्टै व्यवस्था गरिने भएकाले यसलाई एक राष्ट्र दुई व्यवस्था भनिएको हो । चीनको मुख्य भू-भागमा समाजवादी व्यवस्था अपनाइनु र हङ्कङ्गमा पूँजीवादी व्यवस्था नै यथावत रहन दिनु यसको तात्पर्य हो । एक राष्ट्रमा दुई व्यवस्था भएको देश चीन नै हो ।

## ऐक्यवद्धता (Solidarity)

आज विश्वका प्रत्येक देश एवं घटनाहरू एक अर्कासँग सम्बन्धित रहन्छ । कुनै एक देशमा भएको कुनै घटनासँग आज पूरै विश्व नै मुछिन पुग्दछ । वर्गीय रूपमा विभाजित विश्वका घटनाहरूमा राष्ट्रिय वा अन्तर्राष्ट्रिय रूपमा हुने समर्थनका क्रियाकलापलाई ऐक्यबद्धता भनिन्छ । पेशा, जाति, भाषा, धर्म, वर्गगत समर्थन, सहयोग एवं सद्भाव राखिने कार्यले कुनै पनि पेशा, जाति, भाषा, धर्म वर्गका मानिसप्रति हुने शोषणका विरूद्धमा उक्त समुदाय वा वर्ग सजिलै उत्रन्छ । यो नै अन्तर्राष्ट्रियवादको उदाहरण हो । अहिले नारामा नै "विश्वका ...... एक हौं" उल्लेख हुन थालेका छन् ।

नेपाली जनताहरू क्यूवाली जनताले अमेरिकी साम्राज्यवाद विरूद्ध लिएको अडानलाई ऐक्यबद्धता प्रदर्शन गरिरहेका छन् । पेरू लगायतका जनताका मुक्ति आन्दोलनले विश्वव्यापी ऐक्वबद्धता पाइएको छ ।

## ऐतिहासिक भौतिकबाद (Historical Meterialism)

समाज तथा सामाजिक चेतनाको विकासको बारेमा वस्तुगत नियमहरूको अध्ययन गर्ने सिद्धान्तलाई ऐतिहासिक भौतिकवाद भनिन्छ । मावन जातिको विकासलाई कुनै दैवी शक्ति, अलौकिक अवतार, ऋषि एव महापुरूषले नगराएर यो क्रमिक विकासको उपज हो, भौतिक साधनको उत्पादन हो । यो सँधैं चलिरहने प्रक्रिया हो भन्ने विचारलाई ऐतिहासिक भौतिकवाद भनिन्छ ।

## कम्युनिजम् (Communism) शब्दको उत्पत्ति :

साम्यवादलाई अंग्रेजीमा "Communism" भनिन्छ । कम्युनिजम् शब्द ल्याटिन (Latin) भाषाबाट उत्पत्ति भएको मानिन्छ । ल्याटिन भाषा Communis बाट उत्पत्ति भएको यो शब्दमा दुई शब्दांशहरूको संयोजन देखिन्छ, जसमा "Com" र "munis" । यहाँ "Com" को अर्थ सँगै (together) र "munis" को अर्थ सेवा (serving) भन्ने बुझिन्छ ।

हुनत पुरानो फ्रेन्च शब्दमा Comuner भन्ने शब्द पनि पाइन्छ जसको अर्थ "to share" (बाँड्नु) भन्ने लाग्दछ । कुनै कुनै भाषाशास्त्रीहरूले यो पुरानो फ्रेन्च शब्दबाट नै कम्युनिजम् शब्दको उत्पत्ति भएको हो भन्ने राय दिएका छन् । यसको शाब्दिक व्याख्याबाट के बुझिन्छ भने कम्युनिजमले एउटा यस्तो विचारको प्रतिनिधित्व गर्दछ जहाँ सँगै बसेर (Living Together) सबैका लागि काम गरेको होस् । यो विचार हेर्दा सन् १९६० दशकको हिप्पी (Hippy) आन्दोलनसँग मेल खान्छ जसको आदर्श माया (Love) र समानता (Equality) साथै सँगै बस्ने र काम गर्ने थियो । हिप्पीहरूले आफ्नो नाम Flower children राखेका थिए भने जहाँ उनीहरू काम गर्दथे, त्यसलाई Commune भनिन्थ्यो ।

## कट्टरतावाद या जडसूत्रवाद (Dogmatism)

जुनसुकै सिद्धान्त समय, देश, काल, परिस्थिति, अनुसार प्रयोग नगरी सिद्धान्तमा, पुस्तकमा जे लेखिएको छ त्यो मात्रै प्रयोग गर्न खोज्नुलाई कट्टरतावाद अथवा जडसूत्रवाद भनिन्छ । कट्टतावादी अथवा जडसूत्रवादीहरूले धेरै देशका क्रान्तिमा ठूला-ठूला हानी नोक्सानी पुऱ्याएका छन् । यसलाई कठमुल्लावाद पनि भन्ने गरिन्छ ।

## कम्युनिष्ट घोषणा-पत्र (Communist Manifesto)

विश्वभरका कम्युनिष्ट पार्टीको मूल कार्यक्रम "कम्युनिष्ट घोषणा-पत्र" हो । घोषणा-पत्रको शुरू प्रकाशन सन् १८४८ फेब्रुअरीमा लण्डनबाट भएको थियो । यसलाई कम्युनिष्ट लिगको तर्फबाट कार्लमार्क्स, फ्रेडरिक एङ्गेल्सले तयार गर्नुभएको थियो । कम्युनिष्ट घोषणा-पत्रमा सबभन्दा पहिले "विश्वका मजदूर एक होऔं !" भन्ने नारा लेखिएको थियो । यो अति नै सरल भाषामा चार मुल्य भागमा लेखिएको थियो । यो अति नै सरल भाषामा चार मुल्य भागमा लेखिएको दस्तावेज हो । संसारका सबै भाषाहरूमा सबभन्दा बढी प्रकाशित हुने मुल्य पुस्तकहरू मध्ये यो पनि एक पुस्तक हो ।

## कमिन्फर्म (Com in form)

दोस्रो विश्वयुद्ध हुँदा सन् १९४३ मा तेस्रो अन्तर्राष्ट्रियको विघटन भएको थियो। दोस्रो विश्व युद्धको अन्त्य भएपछि विश्वभरका कम्युनिष्ट पार्टीहरूमा सम्पर्कको खाँचो महसुस भयो यस खाँचोलाई पूरा गर्न "कम्युनिष्ट इन्फर्मेशन व्यूरो" नामक कम्युनिष्ट सूचना केन्द्र सन् १९४७ मा पोलैण्डमा स्थापना गरियो। यसको सदरमुकाम पहिले बेलग्रेड र पछि बुखारेष्टमा सऱ्यो।

## कानून (Law)

कानूनको सम्बन्धमा राजनीति शास्त्रका ख्यातिप्राप्त विद्वान लेखकहरूले विभिन्न दृष्टिकोणबाट परिभाषा-प्रस्तुत गरेका छन् जो निम्नानुसारका छन्:-

प्राध्यापक सालमोण्डको परिभाषा अनुसार- "ऐन-कानून नियम, उपनियमहरूको त्यो संग्रह हो जसलाई राज्यद्वारा मान्यता प्रदान गरिएको हुन्छ र न्याय व्यवस्था प्रशासनमा लागू गरिएको हुन्छ।"

लास्कीका अनुसार- "कानून सम्प्रभूको आदेश मात्र होइन, त्यो त व्यक्तिको चेतनामा अन्तर्निहित एउटा तत्व हो।"

उडरो विल्सनको भनाई अनुसार- कानून स्थिति, विचार तथा स्वभावको त्यो अंश हो। जसलाई समान नियमहरूको रूपमा विशिष्ट नियमानुसार स्वीकृति प्रदान गरिएको हुन्छ र जसलाई सरकारको शक्तिद्वारा लागू गरिन्छ।"

रूसोको भनाईअनुसार- "कानून सामान्य संकल्पको एउटा उत्पादन हो। यो समस्त व्यक्तिहरूको प्रस्ताव हो।"

आष्टिनको परिभाषा यस प्रकार छ- "कानून कुनै स्वतन्त्र राजनैतिक समाजको शासक या शासक-वर्गको आदेश हो।"

डुग्बीको परिभाषाअनुसार- "कानून समाजको आवश्यकता मात्रको अभिव्यक्ति हो।"

प्राध्यापक होल्याण्डले कानूनको पूर्ण परिभाषा दिने प्रयास गरेका छन्। उनका अनुसार "कानून आचरणको त्यो साधारण नियम हो जो केवल बाह्य आचरणलाई मात्र चिन्दछ र कुनै निश्चित सत्ताद्वारा लागू गरिएको होस् र यो सत्ता मानवीय हो तथा मानवीय सत्तामा पनि त्यो हो जसलाई राजनैतिक समानता सर्वोच्च मानिएको होस्।" प्राध्यापक होल्याण्डले संक्षेपमा कानूनको परिभाषा यस प्रकारले दिएका छन्- सर्वोच्च र राजनैतिक शक्तिद्वारा लागू मनुष्यको बाह्य जीवनसँग सम्बन्धित सामान्य नियम नै कानून हो।

## कानूनको शासन (Rule of Law)

कानूनको सर्वोच्चताको सिद्धान्तलाई स्वीकार गरी कार्यान्वयन गर्नु नै कानूनको शासन ठानिन्छ। जुनसुकै देशको शासन व्यक्तिको स्वेच्छामा आधारित नभई कानूनमा आधारित हुनुपर्छ भन्ने कुरालाई यसले पुष्टि गर्दछ। कानूनको शासनमा कानूनको सर्वोच्चता हुन्छ, प्रत्येक व्यक्तिले कानूनको पालना गर्नुपर्ने हुन्छ।

न्यायको शासन भन्नाले एने, नियम, कानून अनुसार चलाइएको भन्ने बुझिन्छ।

न्यायको शासनमा कानूनभन्दा माथि कोही हुँदैन । कानून नै सबभन्दा माथि ठानिन्छ । न्यायको शासनमा ठूलो, सानो, गरीब, धनी, जात, लिङ्ग भनेर कुनै प्रकारको भेदभाव गरिँदैन । कानूनको अगाडि सबै बराबर ठानिन्छ । यसबारे विभिन्न राजनीतिशास्त्रीहरूले आ-आफ्नै प्रकारले परिभाषा प्रस्तुत गरेका छन् । प्राध्यापक डायसीले प्रस्तुत गरेको परिभाषा नै सबैले मान्दै आएका छन् । प्राध्यापक डायसीले न्यायको शासनको निम्नानुसार तीन तर्क अगाडि ल्याएका छन् ।

१. सरकारसँग कुनै निरंकुश शक्ति हुँदैन ।
२. कानूनको अगाडि सबै बराबर हुन्छन् ।
३. संवैधानिक कानून साधारण कानूनको नतिजा हो ।

## कामरेड (Comrade)

साथी, मित्र, दोस्त, पासा आदिलाई कामरेड भनिन्छ । मार्क्सवादी लेलिनवादीहरूले शब्द प्रयोग प्रायः गर्छन् ।

## कार्यक्रम-कार्यनीति र रणनीति (Programme-Tactice & Policy)

"कम्युनिष्ट पार्टीको घोषणा-पत्र" लेखेर कार्ल मार्क्स र फ्रेडरिक एङ्गेल्सले कम्युनिष्टहरूको कार्यक्रम पेश गर्नुभयो । कुनै पनि राजनैतिक दल, गुट वा व्यक्तिले समाजमा एक लक्ष्य लिएर जाने कामको विवरणलाई कार्यक्रम भनिन्छ । यस्तो कायएंक्रमको दुई भाग हुन्छ । (१) कार्यनीति (२) रणनीति । यिनमा कार्यनीति तुरून्त लागू गरिन्छ, रणनीति पछि लागू हुन्छ । कार्यनीतिले रणनीतिलाई सघाउनु पर्दछ । कार्यनीति र रणनीति दुवैको भेटघाट नै कार्यक्रम हो ।

## काल्पनिक समाजवाद (Utopian Socialism)

पूँजीवादी शोषण तीब्र हुँदै गएपछि मजदूर मात्र होइन केही उदार र भलादमी पूँजीपति हरू पनि ज्यादै दुःखित भए । उनीहरूले समाजवादको प्रयोग पनि गरे । यस्ता प्रयोग मध्ये पहिलो प्रयोग काल्पनिक समाजवाद हो । ब्रिटेन र फ्रान्सका उदार पूँजीपतिहरू रबर्ठ ओवेन, सेन्ट साईमन र चार्ल्स फुरिएरहरूले समाजवादको प्रयोगहरू गरे । उनीहरूकै प्रयोगलाई काल्पनिक समाजवाद भनिन्छ । काल्पनिक समाजवादीहरूले पूँजीवादी उद्योगहरूमा मजदूर वर्गको दुर्दशा देखेर समाजवादी ढाँचाको काम गर्न थाले । उनीहरूले आफैं उद्योग-धन्दा खोलेर त्यहाँ समाजवाद लागू गरे । तर पनि उनीहरूको सम्पत्ति सकिँदै गयो, मजदूरका समस्या पनि समाधान हुन सकेनन् । उनीहरू आखिरमा असफल भए । फेरि सबै पूँजीपति उनीहरू जस्ता दयालु पनि छैनन् । सबैले यस्तो समाजवाद रूचाउने कुरामा पनि सम्भव देखिएन । यसप्रकार व्यक्तिगत दयाको भरमा समाजवाद चल्न सक्दैन भन्ने कुरा यस प्रयोगले प्रष्ट भयो । वर्ग संघर्ष चलिनै रह्यो । यो समाजवाद व्यवहारमा प्रयोग हुन नसक्ने तर कुरामा राम्रो देखिने हुनाले यसलाई काल्पनिक समाजवाद भन्न थालिएको हो ।

## कार्यपालिका (Fxecutive)

व्यवस्थापिकाद्वारा तयार पारिएको नियम कानूनहरूलाई सही रूपमा कार्यन्वयन गर्ने, देशको दैनिक प्रशासनको काम सुचारू रूपले सञ्चालन गर्ने तथा आन्तरिक राज्य व्यवस्था एवं अन्तर्राष्ट्रिय जगत्सँग सम्बन्धमा जोड्ने र नीति निर्धारण गर्ने अंगलाई कार्यपालिका भन्दछन् । नेपालको कार्यपालिकाको अधिकार श्री ५ र मन्त्रिपरिषद्मा रहने छ ।

## क्रान्तिकारी र प्रतिक्रान्तिकारी (Revolutionary & Reactionary)

पुरानो, अन्याय, अत्याचारी शासन व्यवस्थालाई खत्तम गरी नयाँ न्यायपूर्ण व्यवस्था स्थापना गर्न आफ्नो निजी स्वार्थ र जीवनलाई समेत वास्ता गरी क्रान्तिको बाटोमा लाग्नेलाई क्रान्तिकारी भनिन्छ । क्रान्तिले ल्याएको हक, हित, अधिकार खत्तम गरेर पुरानै शासन व्यवस्था स्थापना गर्न षड्यन्त्र गर्नेलाई प्रतिक्रान्तिकारी भनिन्छ ।

क्रान्तिकारी र प्रतिक्रान्तिकारीको अर्थ समय बेला अनुसार फरक फरक पनि हुनसक्छ । जस्तो सामन्तवादको समयमा पूँजीवादीहरू क्रान्तिकारी बन्छन् । तर समाजवादको समयमा पूँजीवादमै फर्कन षड्यन्त्र गर्ने प्रतिक्रान्तिकारी हुन्छ । तानाशाही व्यवस्था भएको समयमा प्रजातन्त्र चाहने क्रान्तिकारी हुन तर तानाशाही नै ल्याउन चाहने भने प्रतिक्रान्तिकारी हुन् ।

## कुलीनतन्त्र (Aristocracy)

यूनानीहरू केही चुनेका व्यक्तिहरूको शासनलाई कुलीनतन्त्र भन्ने गर्दथे । गार्नर भन्दछन्- "कुलीनतन्त्र, शासनको त्यो स्वरूप हो, जसमा सार्वजनिक पदाधिकारीहरूको निर्वाचन तथा सार्वजनिक नीतिहरूको निर्धारणमा नागरिकहरूका केही सस्थाको मात्र हात रहन्छ ।" जेनीनेक भन्दछन्- "कुलीनतन्त्रमा एउटा वर्ग, भलै सैनिक वर्ग होस्, धर्माधिकारीहरू अथवा भूस्वामीहरू जसलाई साधारण जनताबाट केही विशेष अधिकार प्राप्त हुन्छन्, आफ्नो हितहरूलाई सामुन्ने राखी राज्यमाथि शासन गर्दछन् ।" कुलीनतन्त्रले संख्या भन्दा बढी गुण तथा चरित्रमाथि महत्व दिन्छ । कुलीनतन्त्र समाजको सर्वाधिक योग्य व्यक्तिहरूको शासन हो । अतएव यसले प्रतिभालाई आकर्षित गर्दछ र अनुभव एवं योग्यतालाई पुरस्कार दिन्छ । कुलीतन्त्र रूढीवादी हुन्छ । यसले प्रजातन्त्रवादी आवेशलाई सम्यमित गरी राजतन्त्रका निरंकुश प्रवृत्तिलाई नियन्त्रण राख्दछ ।

## खुल्ला शहर (Open City)

अन्तर्राष्ट्रिय कानूनमा प्रचलित मान्यता अनुसार "खुल्ला शहर" युद्धको समयमा कुनै पक्षबाट संरक्षित नहुने गरी घोषणा गरिएको शहर हो, जहाँ युद्ध सम्पन्न गर्न वा बम विष्फोटन गर्न वा अन्य सैनिक द्वन्द कायम रहन सक्दैन । सांस्कृतिक, ऐतिहासिक वा अन्य कारणद्वारा कुनै शहरमा सैनिक गतिविधि नचर्काउने गरी घोषणा गरी युद्धरत पक्षद्वारा स्वीकारिएको शहरलाई "खुल्ला शहर" भनिन्छ ।

## गन बोट डिप्लोमेसी (Gun Boat Diplomacy)

ठूलठूला शक्तिशाली राष्ट्रहरूको सैनिक प्रभुत्वबाट प्रभावित भई कुनै अर्को थोरै शक्तिशाली राष्ट्रले तय गर्ने परराष्ट्र नीतिलाई Gun Boat Dipomacy भनिन्छ ।

## गुरिल्ला युद्ध (Gurilla War)

स्थानीय शासन वा विदेशी हस्तक्षेप विरूद्ध वा स्वेच्छाले संगठित रूपमा लड्ने व्यक्तिलाई "गुरिल्ला" भनिन्छ । गुरिल्ला युद्ध एक संगठित संस्थाको नामबाट तर प्रत्येक व्यक्तिले अलग अलग रूपमा लडिने युद्ध हो । "गुरिल्ला" शब्द गुरिल्ला नामको एक केतूबाट आएको हो, जो एक्लै हिड्छ । गुरिल्ला युद्धको शुरूवात उन्नाइसौं शताब्दीको शुरूदेखि नेपोलियनयको दिग्विजय विरूद्ध अष्ट्रिया, रूसी जनताले लडेका थिए ।

## गुप्तचर संस्था (Intelligence Agency)

कुनै पनि मुलुक अथवा संस्थाले आफू विरूद्धका वा कुनै पनि घटनाको पृष्ठभूमि, कारकतत्त्व, प्रक्रिया, संलग्नता, परिणाम वा जुनसुकै पत्रको पनि विस्तृत अध्ययन गरेर जानकारी, प्रमाण आदि राख्ने र सम्बन्धित निकायमा प्रतिवेदन पेश गर्न, तयार गरेको गोप्य व्यक्तिहरूको संस्थालाई गुप्तचर संस्था भनिन्छ । प्रायः प्रत्येक देशले यस्तै प्रत्येक देशले यस्तो व्यवस्था गरेको हुन्छ । के.जि.बि., सि.आई.ए. जस्ता कुख्यात नामहरू हुन् जसले गुप्तरी कार्यमा कुनै सीमा बाँकी राखेका छैन । नेपालमा अपराध अनुसन्धान विभाग (CID) अर्न्तगत सो काम सम्पन्न हुन्छ ।

## ग्लासनोस्त र पेरेस्त्राईका (Glashnostch & Perestraica)

सोभियत रूसमा मिखाइल गोर्वाचोभ सत्तामा आएपछि विग्रदो रूसी अर्थतन्त्र र समाजलाई सुधार्ने भनेर यो नीति लागू गरियो । रूसी भाषामा 'ग्लासनोस्त' भनेको खुल्लापन हो । यसरी नै रूसी भाषामा 'पेरोस्त्राइका' भनेको पुनः निर्माण हो । ग्लानोस्त र पेरेस्त्राइका नीति आएपछि यूरोपमा ठूल-ठूला परिवर्तन भए । रूसमै पनि यसको असर पऱ्यो । तर यो अझै विवाद र प्रयोगकै चरणमा देखिएको छ ।

## चार्टिष्ट आन्दोलन (Chartist Movement)

चार्टिष्टहरू १८३० देखि १८५० को मध्यसम्म राजनैतिक क्रियाकलापमा लागेका वृद्धिस कामदारहरू हुन् । लेनिनको भनाईअनुसार चार्टिष्टवाद विश्वको पहिलो बृहत राजनैतिक सङ्गठित सर्वहारा क्रान्तिकारी आन्दोलन हो । सन् १८३६ मा लण्डनका मजदूरहरूले 'लण्डन मजदूर संघ' नामक एक मजदूर संगठन खोले । यसले एक वर्षपछि आफ्ना ५वटा माग राखी सरकार समक्ष मात्र पत्र प्रस्तुत गऱ्यो । यस माग पत्रलाई 'चार्टर' भनिन्छ । यही 'चार्टर' लिएर आन्दोलनमा उत्रने मजदुरलाई चार्टिष्ट भन्न थालियो । यो आन्दोलन झण्डै १६ वर्षसम्म चल्यो । आन्दोलनको क्रममा मजदूरहरू जोशिला गीत र नारा लगाएर जुलुस प्रदर्शन गर्दथे । चार्टिष्टहरूले सरकारहरूले

सरकार समक्ष पेश गरेका माग पत्रहरूमा एउटामा चारलाख पचास हजार मानिसको हस्ताक्षर (सही) भएको एक अत्यन्त लामो दरखास्त पनि थियो । एकपटक र मजदूरहरूको वर्मिङ्घम शहरै पनि कब्जा गरेका थिए । चार्टिष्टहरूले जम्मा चारवटा दरखास्त प्रस्तुत गरेका थिए । पहिलो दरखास्तमा दुई लाख भन्दा बढी मानिसको हस्ताक्षर थियो । यस आन्दोलनले मजदूर वर्गको आर्थिक र राजनैतिक अधिकारको माग गरेको थियो । यस आन्दोलनको नेतृत्वले सही मार्गदर्शन गर्न नसक्दा आन्दोलन नै सेलाउँदै गयो । आन्दोलनका धेरै जसो नेताहरू काल्पनिक समाजवादी थिए । यही आन्दोलनबाट मजदूरहरूको काम गर्ने समय दश घण्टा भएको थियो । मार्क्सवादको जन्म हुनुमा चार्टिष्ट आन्दोलनको ठूलो हात रहेको थियो ।

## जनता (People)

जनता भनेको मानिस हुन् । साँच्चै भन्ने हो भने शोषित पीडित मानिसहरू नै जनता हुन् । अन्याय, अत्याचारको विरोध गर्ने अर्थात् उनीहरूको शोषणबाट मुक्त हुन चाहने, क्रान्तिको पक्षमा उभिने मानव समुदाय नै जनता हुन् ।

## जनजाति

हुन त नेपालको सन्दर्भमा अधिकांश आदिवासीहरू नै जनजाति देखिन्छन् तर आदिवासी र जनजाति शब्दहरू एक अर्काका पर्यायवाची होइनन् ।

जनजातिहरू वास्तवमा समाजको विकास वा आधुनिक सभ्यता भन्दा बाहिर तर जङ्गली अवस्था पार गरिरसकेका जातीय समुदायलाई लिन सकिन्छ र निम्न अनुसारको परिभाषामा पर्दछन् ।

(क) घुमन्ते (फिरन्ते) जनजाति ।
(ख) भू-आधारित जनजाति ।

घुमन्ते जनजाति- यी जनजातिहरूको बसोबासको निश्चित स्थान हुँदैन । आहाराको खोजीका निम्ति वन, जङ्गलमा यताउता डुलिरहने हुन्छन् वा आजभोलि वन विनासका कारण सडकमा किनारामा अस्थायी रूपले डेरा हाली बसेका पाइन्छन् । यिनीहरूको मुख्य पेशा केही नभएको माछा मार्नु, पासो थापी शिकार खेल्नु वा कन्दमूल खोजी खानु नै मुख्य पेशा हो ।

घुमन्ते जनजातिहरू - विषेशतया अन्य मानव जातिको सङ्संर्गबाट टाढै रहन्छन् र आधुनिक सभ्यता, उत्पादन पद्धति र जीवनशैलीबाट अलग छन् ।

भू-आधारित जनजाति-यी जनजातिहरू पहाडका दुर्गम स्थान या भिरालो पाखामा घर बनाई हालमा बस्न थालेका छन् । उर्वर तथा खेतीयोग्य जमिनको अभाव अथवा खेती लगाउने प्रविधिको कमी वा उचित संरक्षणको अज्ञानता र आहारको पूर्ति गर्ने आवश्यकता जस्ता समस्याहरूसँग जुद्धै कन्दमूल र शिकारको माध्यमले जीविका चलाउने जनजातिलाई भू-आधारित जनजाति भनिन्छ ।

यो अवस्थाबाट पनि उक्लिसकेका अर्थात भूमि, खेती वा श्रमको आधारले आधुनिक सभ्यतासँग परिचित कतिपय जातिहरू छन् तर तिनको भूमिका राष्ट्रिय राजनीतिमा देखापरेको छैन । अथवा स्थानीय निकायमा सहभागिता छ त्यस्ता जातीय समुदायलाई जो नश्ल, वर्ण र जातिगत रूपमा आदिवासी देखिन्छन् । तिनीहरूलाई जनजाति भनिन्छ ।

## जननीति (People's Policy)

चीनका माओत्सेतुङ्गले चीनको क्रान्तिका चिनियाँ कम्युनिष्ट पार्टीको कार्यशैलीको रूपमा जननीतिलाई विकास गर्नु भएको हो । जनताका इच्छा, चाहनालाई बुझेर जनताकै भलो गर्न सक्ने नीतिलाई नै जननीति भनिन्छ । माओत्सेतुङ्गको विचारमा जनतामा छरिएर रहेका विचार, सोचाई र समस्यालाई बटुलेर तिनका सही कुरालाई लिँदै गलत कुरालाई सच्चाएर फेरि जनतामै प्रचार गर्ने कार्यशैलाई नै जननीति भनिन्छ ।

## जनवादी केन्द्रियता (Demecratic Centralism)

मार्क्सवादी-लेनिनवादी पार्टीहरूको सङ्गठन सञ्चालन गर्ने तरिकालाई जनवादी केन्द्रीता भनिन्छ । यसमा समस्या आइपर्दा पक्ष विपक्षबाट तर्क वितर्क, वाद-विवाद गर्न पाउनु, नेताहरूको आलोचना र निर्वाचन गर्न पाउनु, जस्ता अधिकारलाई जनवाद भन्न सकिन्छ । पार्टीभित्र अल्पमत, बहुमतको अधिनमा रहनु, तर अल्पमतको कदर गर्नु, तल्लो कमिटीले माथिल्लो कमिटीको आदेश मान्नु, तर तल्लो कमिटीको रायमा ध्यान दिनु, सम्पूर्ण सदस्य केन्द्रीय कमिटीको मातहतमा रहनु जस्ता कामलाई केन्द्रीयता भनिन्छ । जनवाद र केन्द्रीयता दुवै भएकालाई जनवादी केन्द्रीयता भनिन्छ ।

## जनमत (Public Opinion)

जनमतको अर्थ विभिन्न विद्वानहरूले विभिन्न प्रकारले प्रस्तुत गरेका छन् । जनमतको अर्थ बुझ्नलाई हामीले विभिन्न विद्वानहरूले दिएको परिभाषालाई हेर्नुपर्दछ । विद्वानहरूले पेश गरेका जनमत सम्बन्धि परिभाषाबाट जनमतको अर्थ प्रष्ट बुझिन्छ । प्राध्यापक लिण्डसले लेखेका छन्- "प्रजातन्त्रमा जनमत एउटा यस्तो वस्तु हो, जसको अस्तित्व सँधै विद्यमान रहन्छ, यो समस्त देशका नागकिरहरूको अदृश्य सभा, जसको कार्यकाल सदैव रहन्छ, त्यसलाई प्रभावित गर्दछ र स्वयं प्रभावित हुन्छ ।" विलोवी तथा रोगर्सले जनमतको अर्थ वारे यसरी लेखेका छन्- "जनमत ती व्यक्तिहरूका विचारहरूको परिणाम हो, जो सामान्य हितसँग सम्बन्धित निर्णयतर्फ अग्रसर हुन्छन्" प्राध्यापक गिन्सवर्ग जनमतको अर्थ यसरी लेख्दछन्- "जनमतको अभिप्राय: समाजमा प्रचलित ती विचारहरू तथा निर्णयहरूको समूहसँग हुन्छ, जो लगभग निश्चित रूपमा प्रतिपादन हुन्छन् र जसमा केही स्थायित्व हुन्छ र जसलाई मान्ने व्यक्तिहरू यस अर्थमा सामाजिक सम्झिइन्छन् कि ती अनेक मस्तिष्कहरूद्वारा एकसाथ विचार गर्ने परिणाम हुन् ।" लर्ड ब्राइसले जनमतको अर्थ यसप्रकार लेखेका छन्- "समाजमाथि प्रभाव पार्ने अथवा त्यसका हितहरूसँग सम्वनिधत प्रश्नहरूका विषयमा मनुष्य जो धारणा बनाउँछन्

तिनीहरूकै योगको अर्थमा साधारणतया यो शब्द (जनमत) को प्रयोग गरिन्छ। यस अर्थमा यो सबै प्रकारका भ्रान्त धारणाहरू, विश्वासहरू कल्पनाहरू, अरू बीचहरू तथा आकांक्षाहरूको एउटा सम्मिश्रण हो ...... तर यस विभिन्नता र अव्यवस्थाका बीचमा जुनसुकै प्रश्नले महत्व प्राप्त गर्न थाल्दछ, त्यसका साथै संग्रहीकरण तथावर्गीकरणको एउटा प्रकृयाको प्रयोग प्रारम्भ हुन्छ र यो तबसम्म हुन्छ जबसम्म केही धारणाहरू अथवा सम्बन्धित धारणाहरूको श्रृङखला, एउटा निश्चित रूप धारणा गरी प्रस्फुटित हुँदैन र ती प्रत्येक धारणा नागरिक समुदायद्वारा स्वीकृत तथा प्रतिपादित हुन्छन्। जब हामी भन्दछौं जनमतको फलानो सिद्धान्त अथवा प्रस्तावको समर्थन वा विरोध गर्दछ र यसप्रकार एउटा निययन्त्रणकारी शक्ति बन्दछ तब हाम्रो तात्पर्य नागरिकहरूको एउटा स्पष्ट बहुमतद्वारा स्वीकृत यस्तै प्रकारका कुनै धारणाहरूको प्रभावबाट हुन्छ। अथवा हामी भावनाहरूका धारणहरूबाट निर्मित कुनै एउटा राष्ट्रको एउटा यस्तो मतको कल्पना गर्न सक्छौं जसमा राष्ट्रको प्रत्येक भावना कुनै कारण, सिद्धान्त अथवा व्यावहारिक प्रस्तावको सूचक अथवा समर्थक होस्। दिनमा केही धारणाहरू केही बढी शक्तिशाली हुन्छन। किनकि यिनीहरूहरूका पछि समर्थकहरूको बढी संख्या अथवा विश्वासको बढी गहनता हुन्छ र जब यिनीहरूमध्ये एउटा स्पष्ट रूपलेप्रबल हुन जान्छ तब त्यसलाई जनमतको संज्ञा दिइन्छ, र त्यसलाई धारणाहरूको सूचक मानिन्छ जो अधिकांश जनताद्वारा स्वीकृत सम्झिन्छ।

## जनमत संग्रह (Referendum)

राज्यका प्रतिनिधिहरू सँधै संविधान, ऐन, कानुन अन्तर्गत सञ्चालन हुनुपर्दछ। सार्वभौमसत्ता सम्पूर्ण रूपमा जनतामा निहित भएको खण्डमा संविधान, ऐन र कानूनबाट नै राज्य सञ्चालन गर्दा सरल र सहज हुने गर्दछ। यदाकदा जनमत बेग्लै रहने र सत्ताधारीहरूको बेग्लै क्रियाकलापको हुँदा जनमत संग्रहको आवश्यकता पर्दछ।

त्यसै गरेर सत्ताधारीलाई कुनै विषयमा आम जनताको राय लिन आवश्यक भएमा जनतालाई मत गराउने प्रचलन रहेको छ। यसैलाई जनमत संग्रह भनिन्छ। जनमत संग्रहलाई एउटा चलाखिको रूपमा पनि प्रस्तुत गरिन्छ। आफ्ना समर्थकहरूको मात्र मत सङ्कलन गरेर जनताको मतको नाममा जनतालाई नै ठग्ने प्रक्रियाको रूपमा जनमत संग्रह कुख्यात भएको छ। प्रत्येक निर्वाचनमा हुने धाँधली, अनियमितता पनि यस प्रकियामा निर्णायक हुने हुँदा जनमत संग्रहले सकारात्मक भूमिका निर्वाह गर्न सकेको देखिँदैन। २०३६ सालको आन्दोलनपछिको जनमत संग्रह र पंचायतको 'जित' सोभियत संघको विघटना आदि यस्ता जनमत संग्रहका उदाहरणहरू हुन्।

## जनयुद्ध (People's War)

जनताहरूले अन्याय, अत्याचार, शोषण, दमनको विरूद्ध खुशी राजीसँग लड्ने युद्धलाई जनयुद्ध भनिन्छ। युद्ध दुई प्रकारका हुन्छन्- (१) न्यायपूर्ण युद्ध (२) अन्यायपूर्ण युद्ध। अन्यायको, अत्याचारको विरोधमा कुराकानी शान्ति, छलफल जस्ता कुनै पनि उपाय काम नलागेपछि बाध्यतावश गरिने युद्धलाई न्यायपूर्ण युद्ध भन्न सकिन्छ। जनतालाई नोकर बनाउन, अर्को देशमाथि थिचोमिचो गर्न जनताको वैधानिक सरकार र व्यवस्था

विरूद्ध केही अन्यायी, अत्याचारीहरूले गर्ने युद्धलाई अन्यायपूर्ण युद्ध भन्न सकिन्छ। न्यायको निम्ति अन्यायलाई हटाउन जनयुद्ध भन्न सकिन्छ। न्यायको निम्ति अन्यायलाई हटाउन जनयुद्ध लडिन्छ। मार्क्सवादीहरू शान्ति प्रगति चाहन्छन् तर अशान्ति मच्चाउनेहरूले युद्ध गरे भने जनयुद्ध लड्न पनि पछि पर्दैनन्। मार्क्सवादीहरू युद्धलाई सँधैंको निम्ति हटाउन जनयुद्धको सहयोग लिन्छन्।

## जातीय मुक्तिर वर्तमान विश्व

आफ्नो मुलुकमा भएका प्रमुख समस्याहरू समाधान गर्न राष्ट्रको साथै विश्वका सम्पूर्ण स्थिति, घटना र अवस्थाकाको अवलोकन गर्न आवश्यक हुन्छ। विश्वका कुनै पनि स्थानमा घटेको प्रिय वा अप्रिय घटनाको परोक्ष वा अपरोक्ष रूपमा अन्तरसम्बन्ध अथवा असर प्रत्येक राष्ट्रमा परेकै हुन्छ तसर्थ केही पार्टीले अंङ्गिकार गरेको राजनैतिक कार्यक्रम उचित वा अनुचित भन्ने सवाललाई विश्वका प्रत्येक घटनासँग दाँजेर हेर्न सक्नु वास्तविकता ठहर्छ। विश्वका बहुलाय राष्ट्रहरूमा जातीय अहंकारवाद विरूद्ध जातीय-मुक्ति आन्दोलन, जातीय अस्मिता र रक्षाको निम्ति जातीय रूपले जातिको आत्मनिर्णयको अधिकार साथै जातीय अस्तित्वका लागि जातीय स्वाभिमान प्राप्त गर्न अनेकन शान्तिपूर्ण वा हिंसात्मक आन्दोलनहरू संचालन भइरहेका छन्। जातीय असमानता अर्थात जातीय अन्तर्विरोध मूलतः यसका कारकतत्वको रूपमा रहेको छ।

हिजोको सामाजिक साम्राज्यवादी सोभियत संघमा सत्तारूढ कम्युनिष्ट पार्टीको ७४ वर्ष शासन अन्त्य हुनासाथ जातीय स्वाधिनताका संघर्ष भइरहेको छ। साम्यवादी लक्ष्य लिएको कम्युनिष्ट सरकार भन्दा बढी प्रजातान्त्रिक भन्न रूचाउने वर्तमान यल्तशिन सरकारले जातीय-मुक्ति आन्दोलनलाई सैनिकद्वारा दमन गरिरहेको छ। चेचेन जातिका मुक्ति आन्दोलन सैनिक दमनमा परेको सत्यलाई अवलोकन त्यही प्रष्ट हुन आउँछ। चेकोस्लोभाकियामा चेक र स्लोभाग जातिको छुट्टै गणतान्त्रिक राज्य स्थापना हुनु, युगोस्लाभिया पनि आज त्यही स्थितिबाट गुज्रनु, रूवाण्डा र बुरूण्डीमा हुतु र तुत्सीबीच जातीय अन्तरसंघर्ष भइरहनु र इथियोपियामा कम्युनिष्टहरूको सरकार ढलेर सर्वजातीय सरकार गठन गरिनु आदि जातीय असमानतालाई समाप्त गर्न नसक्नु प्रमुख कारण भएकोले मुक्ति आन्दोलन भएका हुन्। यिनै घटनाबाट के प्रष्ट हुन्छ भने वर्गीय संघर्ष वा वर्गीय सत्ता प्राप्त हुनाले मात्र जातीय समस्याको सही समाधान हुन सक्दैन।

विश्वका समाजवादी वा पूँजीवादी सरकार हुन तिनीहरूले जातीय समस्यालाई गौण ठानेका छन्। वर्गीय सत्ताको चेतना र प्राप्तिले मात्र जातीय समस्यालाई समाधान गर्न नसक्दा प्रजातान्त्रिक राष्ट्रमा पनि जातीय मुक्ति आन्दोलन चरम उत्कर्षमा पुगेका छन्। जातीय समस्या गौण ठान्ने अर्थात सहज रूपमा लिन कुनै पनि राजनीतिक पार्टीले आफ्नो सरकार स्थायित्व तुल्याउन सकेका छैनन्। यस अर्थमा मार्क्स भन्नुहुन्छ- जुन समस्या मुलुकमा तडकारो हुन्छ अन्य समस्यालाई थाती राखेर पहिले त्यसको समाधान गर्नु पर्दछ। किनकी मावन सभ्यताको शुरूआत गोत्र, कविला र गणबाट विकास हुँदै जातको उदभव भएको हो यसर्थ ऐतिहासिक रूपबाटै वर्गीय समस्या भन्दा जातीय समस्या जेठो ठहर्छ अझ बहु-जातीय मुलुकमा यो समस्या प्रवल रूपमा उठ्दछ तसर्थ जातीय समस्यालाई हल गरिनु आवश्यक हुन्छ।

विश्वका केरै राष्ट्रहरूमा जातीय समस्या तथा सामाजिक विशिष्ठतालाई उपेक्षात्मक दृष्टिकोण अपनाउँदा धेरै राजनीतिक पार्टीका सरकारहरू धाराशाही भएका छन् । अत्यन्त विकसित संयुक्त राज्य अमेरिका जस्तो राष्ट्रमा पनि जातीय समस्या विकराल रूपमा चर्किरहेको छ । रेड इण्डियनहरू अमेरिकामा आफ्नो जातीय अस्तित्वबाट लोप हुने अवस्थामा पुगेका छन् भने त्यहाँका काला जातिहरू जातीय रूपमा अस्तित्वमा रहे पनि सामाजिक अवस्थामा शोषित, उत्पीडित र अपहेरित भई दोस्रो दर्जाका नागरिक बनाईएका छन् तसर्थ समृद्धशाली राष्ट्र भएर आर्थिक प्रगति गरे तापनि जातीय समस्याबाट मुक्त हुन सक्दैन । प्रजातन्त्रको मशीहा भन्ने अमेरिकी सरकार र शासनसत्ता अन्य जातिलाई उत्पीडन, दमन गर्न कहिल्यै पछि परेको छैन ।

दक्षिण अफ्रिकाका ८०% काला जातिहरूमाथि २०% गोरा जातिले निरन्तर शासन र शोषण गरिरहे । जातीय आधारबाट त्यहाँका काला जातिको मुक्ति आन्दोलनलाई कम्युनिष्टहरूले पनि जातीय मुक्ति संघर्षमा समाहित भएर उचित राजनीतिक बाटो अपनाएका थिए । केही वर्षयता त्यहाँ बहुसंख्यक काला जातिले अल्पसंख्यक गोरा जातिको एक जातीय हैकमवाद समाप्त गरेर राजनीतिक सम्मान साथै सत्ता प्राप्त गरी सर्वजातीय सरकार बनाएका छन् । यहुदीहरूसँग लामो समयसम्म संघर्ष गरेर प्यालेस्टिनी मुसलमानहरूले जातीय-मुक्ति आन्दोलनबाट आफ्नो गुमेको भूमि पुर्नप्राप्त गरी आफ्नो राज्य पुनर्स्थापना गराएका छन् । दक्षिण पूर्व एशियामा श्रीलंकाली ८१% तामिल मूलका जातिहरूमाथि १९% सिंहालीहरूले आफ्नो जातिवादी शोषण र शासन थोपरी रहेको विरोधमा तालिमहरूले जातीय मुक्ति आन्दोलन संचालन गरी हिंसात्मक संघर्ष गरिरहेका छन् । भारतीय भूमिभित्र बसोबास गर्ने विभिन्न जातीय समुदायले आफ्नो जातीय अस्तित्वका लागि जातीय स्वाधिनताका आन्दोलन जारी राखेका छन् । भूटानी मूलका र नेपाल मूलनका भूटानी जनताको जातीय अन्तरविरोधकै कारण लाखौं भूटानी नागरिक नेपालमा शरणार्थी भएका छन् र भूटानमा जातीय मुक्ति आन्दोलन चर्को रहेकै छ । जातीय अस्तित्व र आत्मसम्मानका लागि लडिने जातीय स्वाधिनताको संघर्ष मूलतः राष्ट्र विरूद्धको लडाई होइन त्यो केवल आफ्नो बाँच्न पाउने राजनीतिक अधिकार प्राप्तिका लागि जातीय अस्तित्वको संघर्ष हो ।

जातीय मुक्तिको सवालमा लडिने लडाई धेरै किसिमले लडन सकिन्छ । पृथकतावादी र विखण्डनवादी ढङ्गले जातीय मुक्ति आन्दोलन अगाडि बढाउन मिल्दैन । राष्ट्रिय एकता र अखण्डता प्राण भन्दा प्यारो हुन्छ । यसको रक्षाको निम्ति जातीय मुक्ति आन्दालन अनिवार्य भएको छ । एकात्मक शासन प्रणालीबाट भइरहेको अनियमिततालाई अन्त्य गरी संघात्मक शासनअन्तर्गत प्रान्तीय राज्यको अवधारणालाई विकसित गर्नु मुलुकलाई जातीय विखण्डनबाट बचाउनु हो । एकात्मक राज्यभित्र राष्ट्रिय भावना कुण्ठित हुन गई आत्मसम्मान प्रस्फुटित हुन सक्नाले फुट वा विखण्डनको सम्भावना विद्यमान हुन्छ । जनताको प्रत्यक्ष सरोकारको साथै सार्वजनिक महत्वका विषयमा विभिन्न विकास, निर्माण जस्ता सवेदनशीलपक्षहरू एकात्मक शासन प्रणाली अन्तर्गत केन्द्रीयकृत भइरहनाले जनताको प्रत्यक्ष संलग्नता हुन नसकी सम्पूर्ण जाति वा व्यक्तिको समान ढङ्गबाट विकास हुन सक्दैन भन्ने यथार्थ नेपालको एकात्मक शासन व्यवस्थाले प्रष्ट पारेको छ ।

संघात्मक शासन अन्तर्गत प्रान्तीय राज्यको अवधारणाभित्र प्रत्येक व्यक्ति वा

जातीय समुदायका मानिसले राज्यप्रशासन वा राज्ययन्त्रमा प्रत्यक्ष सहभागिता उपलब्ध गराउन सक्दछन् र राष्ट्रियता सबल हुन सक्दछ । जनताको जागरूकताबाट मात्र देश निर्माण हुन सक्दछ र जनतालाई जागरूक, परिश्रमी बनाउन राष्ट्र या राज्यको कर्तव्य हो । जनतालाई परोक्ष रूपमा राज्ययन्त्र र राज्य प्रशासनमा सहभागी गराउन प्रान्तिय राज्य र प्रान्तिय राज्यभित्र स्थानीय स्वशासन आवश्यक हुन्छ । यही अधिकारले मात्र राष्ट्रलाई विखण्डनको विरूद्ध दह्रो आधार निर्माण गर्न सक्दछ । सम्पूर्ण जातीय समुदायलाई समानुपातिक आधारमा राजनीतिक प्रतिनिधित्व, आर्थिक समानता उपलब्ध गराउन ठोस आर्थिक कार्यक्रम, प्रत्येक समुदायको धर्म स्वछन्द पालन गर्न पाउने धर्म निरपेक्ष राष्ट्र र सबै भाषालाई राष्ट्र भाषाको रूपमा अधिकार सम्पन्न गराउँदा प्रत्येक जातीय समुदायका समग्र नेपाली जनतालाई राष्ट्रले उपेक्षा नगरेको आत्मविश्वास बढ्दछ र देश तथा माटोको माया प्रत्येक व्यक्तिको हृदयमा पलाउँदछ । यही राजनीतिमा मान्यता अनुसार केही पार्टीप्रति सम्पूर्ण नेपाली जनताको माया, उभार बढेको छ । आज विश्वको घटनाचक्रले पनि यही राजनीतिक कार्यक्रमलाई समय सापेक्षा, सान्दर्भिक र सठीक हो भन्ने प्रमाण साथ थप बल प्रदान गरेको छ ।

## जातीय मुक्ति र जातीवाद

बहुसंख्यक अवस्थामा रहेको शोषित उत्पीडित जनजाति, जाति तथा दलित जातिका जनसमुदायमाथि राज्य शासन व्यवस्थामा रहेका विशेष अधिकार र सुविधा प्राप्त जातिहरूद्वारा गरिएको निर्मम शोषण उत्पीडन र भेदभावपूर्ण व्यवहारको विरूद्ध, समान अधिकारको निम्ति उठाएको न्यायपूर्ण आवाज र संघर्षलाई नै जातीय मुक्ति भनिन्छ । छोटो अर्थमा भन्ने हो भने जातीय मुक्ति भनेको आत्मनिर्णयको अधिकार प्राप्त गर्ने संघर्ष हो ।

राज्य शासन व्यवस्थामा रहेर शासन गर्ने शासक जातिहरूले आफ्नो स्वार्थ रक्षा गर्न र आफ्नो पिछलग्गुहरूको पक्षपोषण गर्न सधैंभरि आफ्नो पिछलग्गुहरूको पक्षपोषण गर्न सधैंभरि आफ्नो रजाइको शासन टिकाइ राख्न विभिन्न जातिको बीचमा चाहे धर्मको नाममा होस् चाहे एकै जातिको नाममा होस्, फुट ल्याउने काम गर्दछन् साथै एक जातिको विरुद्ध अर्को जातिलाई भड्काएर उठाउँदछन् भने त्यसैलाई जातिवाद (साम्प्रदायिकता) भनिन्छ । त्यसैले हामीले भन्नु पर्दछ जातिवाद भनेको शासक जाती या वर्गद्वारा जन्माइएको गलत दृष्टिकोण हो । त्यसैले यो समाज वा राष्ट्रको लागि ज्यादै खतरनाक विचार हो ।

## जातीय मुक्ति र वर्गीय मुक्ति

जुन राष्ट्रमा बहुजाति, बहुभाषी, बहुधार्मिक तथा बहुसाँस्कृतिक जनता रहेका छन् । यस किसिमको राष्ट्रिय परिस्थितिमा शासन सत्तामा रहेका शासक जातिले आफ्नो जनसमुदायमा शोषणका पञ्जा जकडे तापनि मूलतः अन्य शासित जातिका भाषा-लिपि, धार्मिक स्वतन्त्रता र साँस्कृतिक पहिचानका कुरालाई संरक्षण र विकास गर्ने कुरा त परै जाओस्, उनीहरूको बाँच्न पाउने जीविकाका सवाल, जनतान्त्रिक र

मानवअधिकारका सवाल, न्यायपूर्ण आवाज समेतलाई बेवास्ता गरी शासक जातिहरूले पूर्ण दमन उत्पीडन गरिरहेका हुन्छन् । यस किसिमको राष्ट्रिय परिस्थितिमा जातीय मुक्ति र समानताको सवाल अगाडि बढ्ने छ । छोटो अर्थमा भन्ने हो भने बहुसंख्यक जाति रहेको मुलुकमा वर्गीय अन्तरविरोध भन्दा जातीय अन्तरविरोध प्रमुख रूपमा रहेको हुन्छ । यस किसिमको समाज र मुलुकको राष्ट्रिय परिस्थितिमा जातीय मुक्तिको सवाल मूल रूपमा अगाडि बढ्नेछ ।

जुन मुलुकमा पूँजीको विकास भएको छ साथै सम्पूर्ण राष्ट्रका उत्पादनका साधन स्रोतमाथि अभिजात वर्गका शासकहरूको प्रभुत्व र एकाधिकार रहेको हुन्छ साथै आफ्नो जाईको शासन सत्तामा रही आम जनसमुदायमाथि निर्मम शोषण र दमन चलाइरहेको छ भने त्यस्तो राष्ट्रिय परिस्थितिमा जातीय अन्तरविरोध भन्दा वर्गीय अन्तरविरोध प्रमुख रूपमा रहेको हुन्छ । त्यसकारण यस किसिमको समाज र मुलुकको राष्ट्रिय परिस्थितिमा वर्गीय मुक्तिको सवाल मूल रूपमा अगाडि बढ्नेछ ।

## जाति र वर्ग

हामी मानव समाजको इतिहास र विकास क्रमलाई हेर्दा जब मानिसमा चेतनाको विकास भयो । उसले हरेक कुरा चिन्ने, जान्ने र थाहा पाउने भयो । यसैले गर्दा ऊ जंगली युगदेखि संक्रमण गर्दै सभ्य युगतिर अग्रसर भयो । त्यस बेलादेखि उसले आफूलाई गण (समूह) मा आवद्ध गऱ्यो । त्यही क्रममा त्यस गणको नाइकेको नामबाट गोत्र (जातीय उपनाम) को शुरूवात भयो यसरी मानव समाजको लामो संक्रमण कालमा संसारका विभिन्न भू-भागमा मानिसको थुप्रै गण, उप-गणमा विभाजित भए, यति मात्र होइन उनीहरूका थुप्रै जातीय उपनाम पनि विभाजन भयो साथै उनीहरूका शारीरिक रङ्ग, रूप र भाषिक रूपमा पनि अन्तर भयो । त्यसैले हामी स्पष्टसाथ भन्न सक्छौं कि संसारका पहिलो पटक जातिको उत्पत्ति भयो ।

जब मानव समाजमा जंगली युगदेखि संक्रमण गर्दै सभ्य युगतिर उन्मुख भयो । त्यस संक्रमणकालीन समयमा मानिसभित्र थुप्रै विचारहरूले जन्म लिए । त्यही सिलसिलामा पहिलो पटक एकै समूहका जातिभित्र निजी सम्पत्ति र निजी परिवारको उत्पत्ति भयो । त्यसभित्र विभिन्न जातिका समूह (गण) बीचमा पनि प्राकृतिक श्रोत र सम्पदा (नदी नालाका माछा, जंगलमा रहेका जंगली जनावर र जंगली फलफूल, (कन्दमूल) माथि आ-आफ्नो समूहको नियन्त्रण राख्न एक जातिका समूहले अर्को जातिका समूहमाथि हमला, घात, प्रतिघात गर्न शुरू भयो । त्यस किसिमको लडाईमा जुन जातिका समूह पराजित हुन्थे, उनीहरूले जिताहा जातिका समूह अगाडि कि त दासता स्वीकार्नु पर्दथियो कि त मृत्यु स्वीकार्नु पर्दथियो । एवं रितले जिताहा जातिहरू शासक र पराजित जातिहरू शासित हुने परम्पराको थालनी मानव समाजमा हुन गयो र वर्गको उत्पत्ति भयो । अझ भन्ने हो भने अब मानव समाजमा निजी सम्पत्ति र परिवारको उत्पत्ति साथै राज्य र राज्यसत्ताको उत्पत्ति भएपछि त झन् वर्गीय अन्तरविरोधको विकास भएर वर्गीय संघर्षले उच्चतम रूप लियो ।

## जातीय समुदायमा हुने भावना

समाजमा बसेका कुनै पनि जातीय समुदायहरूभित्र जातीय भावना विद्यमान हुन्छ त्यस भावनालाई वर्गीकरण गर्दा दुई भागमा विभाजन गर्न सकिन्छ जस्तै–

(क) जातिवादी र (Casteisim)

(ख) अतिजातिवादी (Chouvnism)

(क) सबै जातिहरूमा आफ्नै जातिलाई मात्र व्यवहारमा प्राथमिक दिइने प्रचलन छ त्यसप्रकारको आफ्नो जातिप्रतिको निष्ठालाई जातिवाद भनिन्छ ।

(ख) कुनै जातिय समुदाय वा जातिमा आफ्नै मात्र जातिको वर्श्चश्व यथावतै कायम गरिरहन जे जस्तो प्रतिक्रिया सहनु परे पनि गर्न किञ्चित लाज नमानी आफ्नै जातिको भलो मात्र चाहनुलाई अतिजातिवाद भनिन्छ । अतिजातिवादलाई पनि दुई प्रकारले विभाजन गरिएको छ ।

(क) अन्तरनिहीन क्रिया (Inter Ethnic Action)

(ख) अन्तरभूत क्रिया (Intra Ethnic Action)

अन्तरनिहीत क्रिया भन्नाले आफ्नो जातीय हीतको निम्ति आफैभित्र सीमित राखी अन्य जातिलाई जे जसरी अस्तित्व समाप्त गर्न सकिन्छ त्यही गर्नु अथवा गराइनु अन्तरनिहीत क्रिया हो र त्यसलाई जातीय अहंकारवाद High-Caste Chouvinism भनिन्छ ।

अन्तरभूत क्रिया भन्नाले अर्को जातिको विरोधमा आफ्नो स्वार्थ त्यागेर आफ्नो जातिको पक्षमा जे जस्तो सघाउ पुऱ्याउन सकिन्छ त्यसो गरिने अवस्थालाई अति जातिवादभित्रको अन्तरभूत क्रिया भनिन्छ ।

## जिरो-नेट एड (Zero-Net-Aid)

जिरो-नेट एडले राज्यको आर्थिक अवस्थालाई संकेत गर्दछ । कुनै राज्यको अर्थव्यवस्था आत्मनिर्भर भई विदेशी सहयोग आवश्यकता नपर्ने स्थितिमा पुग्नुलाई 'जिरो-नेट एड" भनिन्छ ।

## जुछे विचारधारा (Juche Thought)

कोरियामा जुछे विचाराधारा पाइन्छ । जुछे विचारधारा अनुसार कोरियामा विकास हुँदैछ । कोरियाली श्रमिक पार्टीले आफ्नो देशमा मार्क्सवाद-लेनिनवादलाई लागू गर्दा आफ्नो देशको विशेषता अनुसार प्रत्येक क्षेत्रमा आत्मनिर्भर हुने नीति अपनायो । यस आत्मानिर्भर हुने नीतिलाई जुछे विचारधारा भनिन्छ ।

## ट्राटस्कीवाद (Trotskyism) :

साम्यवादी इतिहासमा एउटा सशक्त क्रान्तिकारी, सफल लेखक तथा कुशल वक्तृत्वबाजको नाम हो-लिवन ब्रोन्स्टाइन (Leon Bronstein), जसलाई ट्राटस्की पनि भन्ने गरिन्छ । मार्क्सवादको अपरिमित शिक्षा संकलनकर्ता तथा रूसी जनताहरूलाई पहिलोपटक सन् १९०५ मा नै संगठित गर्ने एक योद्धा ट्राटस्कीको भने सत्ता संघर्ष बोकेको साम्यवादी इतिहासले कहिल्यै मूल्यांकन गरेन । कम्युनिष्ट इतिहासको लागि

ट्राटस्कीको बौद्धिक व्यक्तित्व साथै नेतृत्वकला नै उनका लागि अभिशाप बन्न पुग्यो। शुरूमा लेनिनसँग पनि विरोध भएका ट्राटस्कीका पछिल्ला दिनहरूमा भने उनले समर्थन जनाएको देखिन्छ। कुटिल ट्राटस्कीको विपुल प्रतिभाको डरले सत्तामा आएपछि स्टालिनले सन् १९२९ मा उनलाई देश निकाला गरे। कुनै पनि अधिनायकवादी आफ्नो विरोधीहरूको पूर्ण निर्मूल चाहन्छ - जो अधिनायकवादी (Dictatorship) हरूको अन्तर्निहित गुण हो। आफ्नो कुकृत्यको डरले स्टालिनले आफ्नो असुरक्षा महसुस गर्नु स्वाभाविक थियो। फलत: १९४० मा एक क्रान्तिकारी विरोधी नेताको हत्या रचियो। यो सफल हत्याकाण्डको रचनाकार स्टालिन भएको प्रत्यक्ष साना साना कमरेडहरूलाई थाहा भए तापनि कसैबाट विरोध भएन किनभने स्टालिन एउटा ठूलो साम्यवादी राष्ट्रको सत्तारूढ शासक थिए। स्टालिनको विरोधमा शब्द उच्चारण गर्नु भनेको सिधै काललाई निम्त्याउनु थियो।

शासक स्टालिनसँगको ट्राटस्कीको विरोध पूर्णत: सैद्धातिक थियो र उनी आफ्नो सिद्धान्तमा निरन्तर अडिग रहे। उनले स्टालिनको धेरै क्रियाकलापहरूमा आफ्नो मतभिन्नता व्यक्त गरे। स्टालिनको अधिनायकवादी प्रवृत्ति बाहेक स्टालिनको एक देशमा समाजवादको (Socialism in One Country) सिद्धान्तप्रति पनि ट्राटस्की प्रखर विरोधीको रूपमा चिनिन्छन्। ट्राटस्कीका भनाइहरू यहाँ दिइएका छन् :

- स्थायी क्रान्तिको आवश्यकता (Permanent Revolution)
- अन्तर्राष्ट्रिय रूपमा साम्यवादी आन्दोलनको तयारी गर्नुमा जोड।
- स्टालिनको एक देशमा समाजवाद नीतिको विरोध।
- गरीब तथा तेस्रो विश्वमा साम्यवादको स्थापनामा जोड।
- स्टालिनको समयमा निस्केको कर्मचारीतन्त्रको विरोध।
- मानव अधिकार तथा प्रजातान्त्रीकरणको आवश्यकतामा जोड।

कामरेड ट्राटस्की एक कुशल संगठनकर्ता पनि थिए। साम्यवादी वोल्सेभिक (Blshevik) दललाई व्यापक सुदृढीकरण गरी क्रान्तिका लागि तयार गर्न सक्नुको देन पनि ट्राटस्कीको थियो। लालसेना (Red Army) को गठनमा उनको कुशल हात रहेको थियो भन्ने विद्वानहरूको विश्लेषण छ। माथि प्रस्तुत ट्राटस्कीको भनाइ तथा विशेषताहरूलाई नै ट्राटस्कीवाद (Trotskyism) भनिन्छ।

## डिनर र डिप्लोमेसी (Dinner Diplomacy)

राजनीतिक व्यक्तिहरूलाई खाना खान निम्त्याई कुनै विवादको समाधान खोजिने वा सहमतिमा पुगिने कार्यलाई Dinner Diplomacy भनिन्छ।

## तटस्थता (Neutrality)

युद्ध हुँदा त्यसमा भाग नलिने वा त्यस संघर्षबाट पन्छिएर बस्ने राज्य तटस्थ र त्यसप्रकारको प्रवृत्तिलाई तटस्थता भनिन्छ। तटस्थता भनेको लड्नेवाला दुवै पक्षको उपेक्षा गर्नु वा संघर्षबाट पन्छिएर निष्पक्ष बस्नु नै हो। "तटस्थता राज्यहरूको त्यो अवस्था हो, जसमा युद्धको बेला त्यस संघर्षमा कुनै भाग नलेओस् र दुवै युद्धमान पक्षहरूसँग आफ्नो शान्तिपूर्ण सम्पर्क कायम राख्दै गरोस्।" -लारेन्स। "तटस्थताको

यो लक्षण हुन्छ कि त्यसले युद्ध गरिरहेका पक्षहरू प्रति तेस्रो राज्यहरूद्वारा निष्पक्षताकोप्रवृत्ति अपनाउँछ, जसबाट युद्धले पनि केही अधिकार र कर्तव्य अत्पन्न भएको कुरा स्वीकार गरेको हुन्छ ।"- ओपेनहाइम

## तानाशाही (Dictatorship)

कुनै एक व्यक्ति, समूह वा वर्गले राज्यलाई प्रयोग गरेर अन्य व्यक्तिहरू, समुदाय वा वर्गलाई दमन गर्ने, शोषण गर्ने एवं निषेध गर्ने पद्धतिलाई तानाशाहीभनिन्छ । निरकुश सैनिक विद्रोह पश्चात स्थापित प्रमुखको व्यक्तिगत तानाशाही रहन्छ भने पुँजीवादी व्यवस्थामा भने पुँजीवादी वा सामन्तीवर्गको तानाशाही रहन्छ । यसरि, मुट्ठिभर व्यक्तिहरूद्वारा आम जनतामा चलाइने यस प्रकारको तानाशाहीलाई उनीहरू स्वीकार्न तयार रहन्छन् । प्रजातन्त्रको नाममा, मानवाधिकारको नाममा जनतालाई चुस्ने शासन व्यवस्था मूलत: तानाशाही व्यवस्था हो । तर आम जनताको मुक्तिको लागि, आम जनताको पहलमा आम जनताको नेतृत्वमा मुठ्ठीभर शोषकहरूमाथि नियन्त्रण गर्नु तानाशाही होइन । पहिलो कुरा, यो घोषणा गरेर नै नढाँटीकन सम्पन्न गरिन्छ, दोस्रो यस प्रक्रियामा आम जनताको जीवनशैली, उत्पादन प्रक्रिया, वितरण प्रणालीमा उसलाई समावेश हुन पूर्ण अधिकार हुन्छ तर तानाशाही शोषितहरूले शोषकहरूको जस्तै जीवनशैली, उत्पादन प्रक्रिया र वितरण प्रणालीमा सलग्न हुन सक्दैनन् र तेस्रो, यो पारदर्शी रूपमा सम्पन्न हुन्छ । त्यसैले आम जनताको मुक्तिको लागि हुने यस पद्धतिलाई तानाशाही नभई अधिनायकत्व भनिन्छ ।

## तीन जन सिद्धान्त (Three Policies)

चीनका डा. सन यात्सेनले तीन जन-सिद्धान्तको प्रतिवपादन गरेका हुन् । तीन जन-सिद्धान्तको अर्थ राष्ट्रियता, प्रजातन्त्र र समाजवाद हो । चीनमा राष्ट्रियता, प्रजातन्त्र र समाजवादको आवश्यकता महसुस गरी "तीन जन-सिद्धान्त" को प्रचार-प्रसार गरियो । त्यस वखत चीनमा यस सिद्धान्तले खुबै समर्थन पायो । चिनियाँ कम्युनिष्ट पार्टीको स्थापना र रूसी क्रान्तिको विजयपछि यसमा "रूससित एकता, कम्युनिष्टहरूसँग एकता र किसान मजदूरसँग मेलमिलाप भन्ने कुरा पनि थपियो । यस तीन जन-सिद्धान्तले चीनमा नौलो जनवादी क्रान्तिको निम्ति आधारशीला तयार पार्‍यो ।

## तीन विश्वको सिद्धान्त (Therory of Third World)

चीनले संयुक्त राष्ट्र संघको सदस्यता पाएपछि आफ्नो विदेश नीतिको व्याख्याको रूपमा यस 'तीन विश्वको सिद्धान्त' अगाडि प्रस्तुत गरेको थियो । जसअनुसार त्यस बेला विश्वलाई तीन भागमा विभाजन गरियो । पहिलो विश्व, दोस्रो विश्व र तेस्रो विश्व । पहिलो विश्व भित्र रूस र अमेरिका जस्ता अति बलिया राष्ट्रहरूलाई राखियो । दोस्रो विश्वमा यूरोपियन देशहरू तथा अष्ट्रेलियन एवं जापान जस्ता विकसित राष्ट्र र तेस्रो विश्वमा एशिया, अफ्रिका, ल्याटिन अमेरिकाका अविकसित देशहरू तथा अन्य समाजवादी देशहरूलाई राखियो ।पहिलो विश्वले दोस्रो विश्वलाई दवाव र तेस्रो विश्वलाई शोषण गरेको छ । विश्वको ३० प्रतिशत भाग पहिलो विश्वमा पर्दछ तर संसारको

सम्पत्तिको ७० प्रतिशत त्यसले आफ्नो बनाउँछ जब कि दोस्रो र तेस्रो विश्व मिलाएर ७० प्रतिशत भाग बन्दछ। सम्पत्ति भने ३० प्रतिशत मात्र भोगचलन गर्न पाउँदछ। यसरी ७० प्रतिशत कमाउनेले ३० प्रतिशत मात्र भोग चलन गर्न पाउँछ भने उनीहरूले विकास गर्ने कुरा निकै गाह्रो हुन जान्छ। यसरी विश्लेषणलाई 'तीन विश्वको सिद्धान्त' को रूपमा लिइन्छ।

## दलित जाति

हिन्दू धर्मावलम्वीहरू तर हिन्दू धर्मकै वर्णाश्रम व्यवस्थाबाट नीचो जातिको रूपमा परिणत गराइएका जसलाई समाजमा अछुत अर्थात शुद्र बनाइएको छ। जसलाई पानी चल्दैन उनीहरूलाई भनिएको छ।

तिनीहरूलाई सामाजिक सम्मान हुँदैन र श्रमको आधारमा तल्लोस्तरका मानिन्छ। यो अवैज्ञानिक विचार हो। हाल उनीहरू जातीय सम्मानका लागि आफ्नो जातीय संस्था मार्फत संघर्ष गरिरहेका छन्।

## दवाव समूह (Pressure Group)

तुलनात्मक राजनीति अर्न्तगत विभिन्न समूहहरूको अध्ययनलाई राजनैतिक प्रक्रियाको बृहत अध्ययनको अङ्ग मानिन्छ। समूहको सन्दर्भमा सबै राजनैतिक प्रक्रियाको विश्लेषण आधुनिक समूहवादी अध्ययन र मुख्य विषय रहेको छ।

दवाव समूह कुनै राजनैतिक समूह होइन र न कुनै निश्चित कार्यक्रमको आधारमा यिनीहरूको सङ्गठन हुन्छ। केही विशेष व्यक्तिहरू मिली आफ्ना हित र उद्देश्य प्राप्त गर्नका लागि विधायकहरूमाथि दवाव हाल्छन् र आफ्नो हित पूर्तिको निमित्त नियम कानूनको निर्माण गराउँछन्। दवाव समूह वास्तवमा एक माध्यम हो जसद्वारा सामान्य हितको व्यक्ति सार्वजनिक मामिलामा प्रभावित गर्ने प्रयास गर्दछ। एम.जी. गुप्ताले दवाव समूहको परिभाषा यस प्रकार प्रस्तुत गरेका छन्- "दवाव समूह वास्तवमा एक यस्तो माध्यम हो जसद्वारा सामान्य हित भएका व्यक्तिहरू सार्वजनिक मामिलाहरूमा प्रभावित गर्ने प्रयत्न गर्दछ।" अगडिगार्डले दवाव समूहको परिभाषा यसरी दिएका छन्- दवाव समूह यस्ता व्यक्तिहरूको औपचारिक सङ्गठन हो, जसको एक अथवा बढी सामान्य उद्देश्य वा स्वार्थ हुन्छन्, जसले विशेष रूपले सार्वजनिक नीति निर्माण र शासनलाई यस कारण प्रभावित गर्दछ कि आफ्नो हितको रक्षा र वृद्धि गर्न सकियोस्।"

सारांशमा हामी भन्न सक्छौं कि त्यो समूह जो कुनै सामान्य हितका लागि व्यवस्थापितकामा एक निश्चित नियमको निर्माण गर्न तथा कार्यपालिकाले त्यस नियमको अनुसार कार्य गर्ने उद्देश्यले दवाव दिन्छ त्यसलाई हामी 'दवाव समूह' भनेर नाम दिन्छौं या अर्थ लगाउँछौं। आधुनिक राजनैतिक जीवनमा दवाव समूहले अत्याधिक महत्त्व प्रदान गरेको छ र लोकतान्त्रिय शासनमा दवाव समूहले आफ्नो विशेष स्थान लिएको छ।

## दक्षिपन्थी (Rightist)

पुराना विचार, सिद्धान्त र समाज व्यवस्थालाई आमूल परिवर्तन नगरी बाहिरी रूपमा मात्र देखावटी सुधार गरी काम चलाउन खोज्नेहरूलाई दक्षिणपन्थी भनेर

चिनिन्छ। यो एक प्रकारको सुधारवाद हो। वास्तवमा यो क्रान्तिकारी परिवर्तन र विचारको ठीक उल्टो हुन्छ।

## दासयुग (Slave Era)

समाजमा पशु सरह मानिसलाई काममा लगाउने धनी शोषकहरूको चलन भएको समयलाई दास युग भनिन्छ। संसारमा दास युगमै शोषक र शोषितको भेदभाव शुरू भई राजसत्ता सञ्चालन भएको हो। दास युगमा मानिस किनबेच हुन्थ्यो। मालिकले जहाँ बेच्यो दास खुरूक्क त्यहीं जानुपर्दथ्यो। पुरानो राज्य रोममा स्पार्टकिस भन्ने बहादुर व्यक्तिले दासहरूको सङ्गठन गरेर धेरै वर्षसम्म मानिसहरूसँग लड्ने काम गरेका थिए। दास र मालिकको यो प्रत्यक्ष वर्ग संघर्ष थियो। दास युगमा मालिकहरू शोषक वर्गमा र दासहरू शोषित वर्गमा पर्दथे। दासयुगमै राजतन्त्र र धर्मशास्त्रको चलन चलेको हो।

## दुई विश्व दृष्टिकोण (Vision on Two World)

विश्वलाई हेर्ने, बुझ्ने जाँच्ने जस्ता दृष्टिकोणहरूलाई विश्व दृष्टिकोण भनिन्छ। शोषक वर्ग र शोषित वर्गको यस विषयलाई हेर्ने दृष्टिकोण भिन्दा-भिन्दै पाइन्छ। भिन्दा-भिन्दै दृष्टिकोणले विश्वलाई हेरिने भएकाले यस्ता भिन्दै दृष्टिकोणलाई एकैचोटि भन्नुपर्दा दुई विश्व-दृष्टिकोण भनिन्छ।

## दोस्रो अन्तर्राष्ट्रिय (Second International)

सन् १८८९ मा दोस्रो अन्तर्राष्ट्रिय स्थापना भएको थियो। दोस्रो अन्तर्राष्ट्रिय मजदूर वर्गको सङ्गठन थियो। यसै समयमा मार्क्सवादी र सशोधनवाद बीच संघर्ष भएको थियो। यसका प्रमुख नेताहरू बर्नस्टिन र काउत्सकीसँग लनिन र अरू मार्क्सवादीहरूको मतभेद बढ्न थाल्यो। बर्नस्टिनहरू मार्क्सवाद पुरानो भयो अब क्रान्तिको खाँचो छैन, समाजवादमा शान्तिपूर्ण जान सकिन्छ जस्ता नारा दिन्थे। उनीहरूले पहिलो विश्व-युद्धताका युद्धको विरोध गर्नु सट्टा आ-आफ्नो देशका सरकारलाई उक्साउन थाले। पहिलो विश्व-युद्धताका यसको विघटन पनि भयो।

## दोस्रो विश्व युद्ध (Second World War)

दोस्रो विश्वयुद्ध १ सेप्टेम्बर १९३९ बाट शुरू भयो र १९४५ अक्टोबरसम्मा यसले विश्वमा करोडौं मानिसको ज्यान लियो। दोस्रो विश्व युद्धको समाप्तिपछि विश्वमा पुँजीवादी र समाजवादी समूहहरू देखापरे। पुँजीवादी देशहरूमा अमेरिका, बेलायत र फ्रान्स थिए। समाजवादी देशहरूमा रूस, मङ्गोलिया, चीन, कोरिया, भियतनाम थिए। दोस्रो विश्व युद्धपछि १९४५ अक्टोबर २४ का दिन "संयुक्त राष्ट्र संघ" को स्थापना भयो।

## द्वन्दात्मक भौतिकवाद (Dialectical Materialism)

द्वन्दात्मक भौतिकवाद मार्क्सवादको सबैभन्दा महत्वपूर्ण आधारस्तम्भ हो । यहाँ द्वन्दको अर्थ वहस (Discussion) भनी बुझ्नु पर्छ । मार्क्स र एन्जेल्सले द्वन्दवादको सिद्धान्त हेगलबाट लिएका थिए र भौतिकवाद लड्इक फयायरवाखबाट । द्वन्दात्मक भौतिकवादको मूल मान्यता अनुसार विश्वका आधारस्तम्भ भौतिक तत्व वा पदार्थ हो, आन्तरिक विरोधको परिणाम विश्वमा भएको प्रत्येक भौतिक वस्तुहरू संचालित हुन्छन् र त्यसै अनुरूप परिवर्तन हुने गर्दछन् । यो भौतिक वस्तुको विरोध हिंसा वा संघर्षद्वारा मात्र सम्भव भएको मार्क्सवादीहरूको मत रहेको छ । जुनसुकै परिवर्तन वा विकास आन्तरिक विरोध वा संघर्षद्वारा नै हुन्छ । परिवर्तन समयमा हिंसा, पीडा र बल प्रयोगलाई आवश्यक तत्व मानिएको छ । कुनै गर्भमा रहेको बालक पैदा हुँदा भएको प्रसवपीडा आवश्यक यस मानेमा ठानिन्छ कि त्यहाँ कुनै परिवर्तन भइरहेको हुन्छ भन्ने प्रबल धारणा मार्क्सवादको द्वन्दात्मक भौतिकवादले व्याख्या गर्दछ । मार्क्स र एन्जेल्सको यो द्वन्दात्मक भौतिकवादलाई विकासवादको सिद्धान्त वा गति सम्बन्धी सिद्धान्त पनि भनिन्छ ।

द्वन्दात्मक भौतिकवाद अनुसार संसारमा सबै किसिमका वाद (Ism), सिद्धान्त तथा पदार्थहरु गतिशील छन् । स्थायी रूपमा केही रहन सक्दैन । जसको सृष्टि हुन्छ त्यसको विनास अवश्यंभावी छ । कुनै पनि वस्तुको निर्माणसँगै बिउ पनि त्यसमा लुप्त रहेको हुन्छ । विनासको मूल कारण आन्तरिक विरोध तथा संघर्ष नै एक मात्र माध्यम मानिन्छ । द्वन्दात्मक भौतिकवादको सूत्र मार्क्सले विशेष पूँजीवादको विनास अवश्यम्भावी छ भनी प्रमाणित गराउनका लागि मात्र प्रयोग गरेका थिए । विश्वका मजदुरहरूलाई एक हुने आव्हान गरी पूँजीवादको पर्खाललाई भत्काउ भन्ने मार्क्स र एन्जेल्सको तर्कभित्र केही आंशिक सत्यता रहे तापनि उनीहरू साम्यवाद स्थापनापछिको विनासलाई भने स्वीकार गर्दैनन् । पूँजीवादभित्र रहेको अन्तरविरोधका कारण सर्वहारा वर्गले पूँजीपतिहरूलाई विनाश गर्न सफल हुनेछन् भन्ने द्वन्दामक भौतिकवादको मत रहेको छ । तर साम्यवादभित्र कुनै अन्तर्विरोधको सम्भावना नै नरहेको हुनाले यसको स्थापना भएपछि विघटन हुँदैन भन्ने मार्क्सको धारणा एकतर्फी देखिनु स्वाभाविक हो । एकातिर हरेक वस्तु, वाद, सिद्धान्त परिवर्तनशील छ भन्ने, अर्कोतिर साम्यवादी सिद्धान्त चाहिँ परिवर्तनशील छैन भन्नु मार्क्सवादको तर्क पूर्वाग्रही छ । असत्य छ । कार्लमार्क्सको त्यो सिद्धान्त हिनताभावपूर्ण मनोस्थितिको उपज हो । यदि मार्क्सको भनाइ अनुसार "द्वन्दात्मक भौतिकवाद" सत्य हो भने आज वर्तमान परिप्रेक्ष्यमा भइरहेको साम्यवादको पतनलाई पनि द्वन्दात्मक भौतिकवादद्वारा व्याख्या गर्न सकिन्छ । साम्यवादभित्र रहेको कथित नयाँ वर्ग (New Class) र कामदारहरू बीचको द्वन्दको परिणतिले नै आज साम्यवाद विनाश भएको हो । कुनै पनि चिन्तनशील कम्युनिष्टहरूमा त्यसको जवाफ छैन । कार्लमार्क्सको तर्क सफेद झूठो छ भन्ने स्पष्ट हुँदा पनि त्यसको विरोध गर्न नसक्नु कम्युनिष्टहरूको कमजोरी हो ।

कार्लमार्क्स र एन्जेल्सको मत अनुसार द्वन्दात्मक भौतिकवादको सिद्धान्तमा तीन मुख्य नियमहरू छन्, जसअनुसार :-

- विकासको क्रम पेचकस तथा स्प्रीङ घुमाइका तरह टेढो मेढो चक्कादार तर निरन्तर माथि चढ्ने घुमाउरो रेखाको तरह हुन्छ न कि एक सरल रेखा जस्तो

सिधामाथि । कार्लमार्क्सको भनाइ अनुसार प्रत्येक चक्काको घुमाइमा हेगलले भने झैं वाद (Thesis), प्रतिवाद (Antithesis) र संवाद (Synthesis) यी तीन कडीले बनेको हुन्छ ।

- विकास आन्तरिक विरोधद्वारा यसकारण संचालित भएको हुन्छ कि गतिशीलता स्वयम् विरोधाभास छ ।
- मात्रामा अन्तर हुँदा त्यस वस्तुको गुणमा पनि अन्तर हुन्छ । यो नियमलाई मार्क्सको मात्रा परिवर्तनको नियम पनि भनिन्छ ।

कार्लमार्क्स र एन्जेल्सले द्वन्दात्मक भौतिकवादको सिद्धान्तलाई जस्तोसुकै प्रयोजनका लागि निर्माण गरेका भए तापनि साम्यवादी दर्शनको यो मूल आधार स्तम्भ हो ।

## द्वन्द्वात्मक र ऐतिहासिक भौतिकवाद (Dialectical and Historical Materialism)

'द्वन्द्ववाद' शब्द ग्रीक भाषाको 'डियालेगो' शब्दबाट बनेको अंग्रेजी शब्द 'डाइलेकिटक्स' शब्दको अनुवाद हो । 'द्वन्द्व' भनेको दुई पक्षमा हुने लडाईं हो । दुई किसिमको विचारको बीचको संघर्षलाई द्वन्द्व भनिन्छ । यस विचार अनुसार कुनै पनि वस्तुको विकासमा दुई विरोधी अवस्थामा संघर्ष हुनुपर्छ, जसलाई द्वन्द भनिन्छ । जस्तो कि मानिस बाँचिरहन वा बढ्न उसको शरीरभित्रका जीवाणु वा विषालु बीच आपसी संघर्ष हुन्छ । विषाणुको जित हुँदा मानिस बाँच्दछ । समाज विकासमा पनि मजदूर र पूँजीपति वर्गको बीचको वर्ग संघर्षमा मजदूर वर्गले जितेमा नयाँ व्यवस्था, समाजवादको उदय हुन्छ ।

कार्ल मार्क्स र फ्रेडरिक एङ्गेल्सको द्वन्दवादलाई विकास गर्नुभयो । यस भन्दा अगाडि जर्मनीका दार्शनिक हेगलले यसलाइ उठाएको थिए । तर उनको यस सिद्धान्तका कमीलाई हटाएर वैज्ञानिक रूप दिने काम भने कार्ल मार्क्सैले नै गर्नुभयो । जर्मनीका फायरवाख भन्ने अर्का विद्वानले भौतिवादको व्याख्या गरे । तर उनको व्याख्या अधुरो नै थियो । यसलाई पनि मार्क्स-एङ्गेल्सले प्रष्ट व्याख्या गरी यी दुवै विचारलाई सँगै गाँसेर मात्र संसारलाई बुझ्न सकिन्छ भने । यसैलाई द्वन्दात्मक र ऐतिहासिक भौतिकवाद भनिन्छ । ऐतिहासिक भौतिकवादले मानव समाजको इतिहासलाई भौतिकवादी रूपले व्याख्या गर्दछ ।

द्वन्दवादले विश्वमा जे जस्ता घटना घटेको छ । त्यसको सम्बन्ध एक अर्कासँग हुन्छ, कुनै पनि परिवर्तन स्थिर रहिरहँदैन अर्थात् विश्वका हरेक वस्तु परिवर्तनशील छ भन्ने धारणा लिन्छ । ऐतिहासिक भौतिकवादले समाजको विकास कुनै देशको भूगोल, जनसंख्या जस्ता कुराले नभई समाजमा चलेका उत्पादन व्यवस्था, उत्पादन साधन र उत्पादक शक्तिको बीचको सम्बन्धले हुन्छ भन्दछ ।

## धर्म निरपेक्ष

धर्म भनेको मानिसको व्यक्तिगत आस्था र विश्वासमात्र हो । धर्मलाई राज्य र भौगोलिक सीमाभित्र बाँध्न सकिँदैन त्यसले कुनैपनि धर्मलाई संविधानको दायराभित्र

बाँधेर राख्नु हुँदैन, धर्मले राज्य र संविधानबाट विशेषाधिकार प्राप्त गर्नाले अन्य धार्मिक समुदायको आस्था र विश्वास कुण्ठित हुन्छ तसर्थ संवैधानिक वा विशेषाधिकार समाप्त गरी राज्यबाट पृथक राखी सबै धर्मलाई स्वछन्द मान्न पाउने र पालन तथा प्रचार वा व्यवहार गर्न पाउनु धर्म निरपेक्षता हो ।

## नजीर (Case Law)

त्यस्ता कानूनहरू एकपल्ट अदालतले कुनै विषयमा गरेको पुन: त्यस्तै प्रकारको अभियोग (केश) मा जो उदाहरण दिइन्छ त्यसलाई नजीर भन्दछन् । प्राय: जसो वकीलहरूले वहसका समयमा अदालतबाट फैसला भएका निर्णयको उदाहरण प्रस्तुत गर्दछन् ।

## नरोदवाद (Peoplism)

जनवादलाई रूसमा नरोदवाद भन्दछ । रूसमा भएको एक क्रान्तिकारी सङ्गठनलाई 'नरोदनिक' भन्दथे । लेनिनका दाजु पनि नरोदनिकका सकृय सदस्य थिए । नरोदनिकले पुराना शासकहरूलाई एक-एक गर्दै खत्तम गरेपछि मात्र क्रान्ति सफल हुन्छ भन्ने विश्वास गरेका थिए । एक पटक रूसको जार अलेक्जेन्डर तेस्रो माथि हत्या गर्ने षड्यन्त्र भएको थियो । यस षड्यन्त्रमा लेनिनका दाजु पनि सकृय थिए । लेनिनका दाजुलाई पक्राउ गरी भुण्ड्याइयो । रूसको इतिहासमा क्रान्तिको बाटोमा प्रयोग गरिएको असफल आतङ्कवादी बाटो नरोदवाद थियो । यस घटनाले लेनिनको हृदयमा ठूलो आघात पुग्यो । लेनिनले क्रान्तिको वैज्ञानिक समाजवादी बाटो अगाडि प्रस्तुत गऱ्यो ।

## नश्ल वर्ण वा जातिको आधारमा राजनीति

मानव सभ्यताको विकसित कुनै पनि राष्ट्रमा विभिन्न नश्ल, वर्ण वा जातिहरू रहनु वास्तवमा गर्वको विषय हो । अझ एशिया महादेशमा ७० प्रतिशत जाति आदिवासीहरू हुनु विश्वकै गरिमा ठानिन्छ । हाम्रो देश नेपालमा मात्र २० भन्दा बढी आदिवासीहरू जातिगत आधारमा बसोबास गर्दछन् । आर्य, मङ्गोल र अष्ट्रो द्रविड मूलका प्रजातिबाट विभिन्न जात/उपजातहरू हुनु बहुजातीय राष्ट्रको वैशिष्ट हो । यस अर्थमा बहुजातीय राष्ट्रमा एक जाति वा नश्लको आधारबाट गरिने राजनीति नश्ल, वर्ण वा जातिको आधारमा गरिने राजनीति भनिन्छ । नश्ल वा जातिको माध्यमबाट सिङ्गो मानव समुदायलाई विभाजन गर्नु सामाजिक शोषण हो तसर्थ लिङ्गभेद र वर्णभेद जस्ता उत्पीडनबाट आक्रान्त विश्व आज मुक्तिको सतत प्रयासमा लागेको छ । नश्ल, वर्ण वा जातिको आधारमा हुने राजनीतिले राष्ट्रियतालाई अक्षुण्ण राख्न सक्दैन र भावात्मक मधुर सम्बन्ध विच्छेद हुन्छ । राष्ट्रियताको अभावमा साम्प्रदायिक तनाव सिर्जना हुन्छ र मानव समाज विखण्डीत हुन जान्छ तसर्थ नश्ल, वर्ण व जातिगत आधारमा गरिने कुनै पनि राजनीतिप्रति सहमत गल्ति हुन्छ ।

## नव उपनिवेशवाद (Neo-Colonilism)

उपनिवेशवादी पुरानो शोषणलाई नयाँ-नयाँ तरिका अपनाएर कायम राख्नुलाई नै नव उपनिवेशवाद भनिन्छ । अर्को प्रकारले भन्ने हो भने साम्राज्यवादी देशले स्वतन्त्र राष्ट्रहरूमाथि अपनाउने नयाँ परम्परा नै नव-उपनिवेशवाद हो । साम्राज्यवादी देशहरूले नवोदित राष्ट्रहरूमा आर्थिक, साँस्कृतिक, राजनैतिक वा अन्य कुनै कूटनैतिक रूपले आफ्नो अधिपत्य कायमै गर्छन् । कुनै पनि राष्ट्रहरूलाई सार्वभौमसत्ता सम्पन्न राज्य मानी कुनै न कुनै तरिकाले आफ्नो पुरानो अभिपत्य कायमै राखेका हुन्छन् । यस्तो अधिपत्यलाइ नव-उपनिवेशवाद भनिन्छ ।

## नाकावन्दी (Blockade)

युद्धरत पक्षहरूबाट कुनै राज्यले आफ्नो विपक्षीलाई समुन्द्रतटको सम्पूर्ण वा कुनै भागमा आउने जाने र वायुयानबाट पनि आउने जाने र अरू सबै सतहको बाटा थुन्ने, छेक्ने काम गर्दछ भने त्यसलाई नाकावन्दी भनिन्छ । बाहिरी जगत्सँग सर्म्पक विच्छेद गराउने अभिप्रायबाट नाकावन्दी गरिन्छ- शत्रुलाई परास्त गर्न र उसको अर्थ व्यवस्थालाई डामाडोल पार्न नाकाबंन्दीको प्रयोग गरिन्छ । "नाकाबन्दी त्यसबेला हुन्छ जब कुनै युद्धमान पक्षले शत्रुलाई समुन्द्रतटको सबै अथवा कुनै भागको बाटो सबै देशहरूको जलयान र विमान आउन जानका लागि रोक्दछ ।"- स्टार्क

## नागरिक (Citizen)

नगर शब्दको अर्थ हो शहर । साधारण बोलीचालीको भाषामा बस्ने मानिसहरूलाई नागरिक भनिन्थ्यो । अब आएर नगरमा बस्ने मानिसहरूलाई नागरिक भनिन्थ्यो । अब आएर नगरमा बस्ने मानिसलाई मात्र नागरिक भनिन्न । नागरिकको शब्द ज्ञान हाल आएर यसरी प्रस्तुत गरिन्छ- "नागरिक यस्तो मानिसलाई भन्दछन् जो शहरमा रहोस वा गाउँमा, लोग्ने मानिस वा स्वास्नी मानिस, जङ्गलमा बसोस् वा घरमा, जसलाई राज्यको तर्फबाट सामाजिक र राजनैतिक अधिकार प्राप्त होस् तथा जो राज्यको कामका लागि सदा तत्पर होस् ।" प्रत्येक राज्यमा जन्मसिद्ध नागरिक र राज्यप्रदत्त नागरिक हुन्छन् ।

## नाजीवाद (Nazism)

जर्मनीमा ताननाशाह एडोल्फ हिटलरको उदय १९३३ मा भएको थियो । हिटलरको विचारधारालाई नै नाजीवाद भनिन्थ्यो । हिटलरको पार्टीको नाम 'नेशनल सोसलिष्ट पार्टी" थियो र जनतालाई भ्रम दिन राष्ट्रियता र समाजवादको नारा पनि दिएको थियो । हिटलरले आफूलाई शुद्ध 'आर्य' भन्दथ्यो । संसारभर नाजी साम्राज्य खडा गर्ने उद्देश्य हिटलरले लिएको थियो । यहुदीमाथि ज्यादै अन्याय, अत्याचार गरेकाले धेरै यहुदीहर जर्मनी छोडेर अन्यत्र गए । दोस्रो विश्वयुद्धमा 'ग्यास च्याम्बर, भन्ने यातना गृहमा जनतालाई मार्ने काम हिटलरले गऱ्यो । नाजिवादको सिद्धान्तमा "असत्य विचारलाई वारम्बार दोहोऱ्याइरहे सत्य बन्न सक्दछ ।" भन्ने पनि थियो ।

## नारी मताधिकार (Female Suffrage)

कुनै पनि राज्यमा उमेर पुगेका नारी वर्गले मात्र मताधिकार प्राप्त गरेको छ भने त्यसलाई नारी मताधिकार भन्दछन् । वयस्क मताधिकारको प्रादुर्भावले आधुनिक प्रजातान्त्रिक शासन व्यवस्थामा उमेर पुगेकी योग्य नारीहरूले पनि मताधिकार प्राप्त गरिसकेका छन् । बेलायतमा १९२८ को संशोधन गरिएको अधिनियम अन्तर्गत नारीहरूले मताधिकार प्राप्त गरेको हो । संयुक्त अमेरिकामा सन् १९१० देखि मात्र नारीहरूलाई पूर्ण मताधिकार प्रदान गरेको पाइन्छ । दक्षिण अमेरिका, हल्याण्ड, स्वीजरल्याण्ड र इटालीमा नारी वर्गलाई नारी मताधिकारबाट बञ्चित गरेका थिए । अझै पनि कुनै कुनै राज्यहरूमा नारीहरूलाई मताधिकारबाट बञ्चित गरेको पाइन्छ । आधुनिक प्रजातान्त्रिक वा समाजवादी राज्यहरूमा नारीहरूलाई यस प्रकारको अधिकारबाट बञ्चित गर्नु प्रजातन्त्रको विपरित सिद्धान्तको कार्यान्वयन गर्नु हो भन्ने अर्थ बुझाउँछ । नारीहरूलाई मताधिकार प्रदान गर्नुपर्ने निम्नानुसारका कारणहरू छन् ।

क. आधुनिक युगमा समानता र स्वतन्त्रताको युग हो । पुरूष र नारी एउटै नदीका दुईवटा छेउहरू हुन अथवा एउटै सिक्काको दुई छाप हुन् । पुरूष तथा नारीको संयुक्त कार्यकलापबाट परिवार, समाज, राज्य र राष्ट्रको लागि महत्वपूर्ण कार्य हुन्छ । त्यसैले पुरूष तथा नारीले समान रूपमा राजनैतिक अधिकारहरू प्राप्त गर्दछन् । त्यसैले नारीहरूलाई मताधिकार प्रदान गर्न नितान्त आवश्यक छ ।

ख. असल नागरिकको जननी नारी नै हो । नारी गतिला, असल भएमा मात्र भावी सन्तान, नागरिकहरू गतिला तथा आदर्शवान हुन्छन् । त्यसैले नारी जगतलाई शिक्षा-दीक्षा प्रदान गरेर राजनीतिक मताधिकार दिनु नितान्त आवश्यक छ ।

ग. मताधिकार घरसायसी जीवनमा नारीहरूको अत्याधिक मात्रामा महत्त्व बढाइदिन्छ । यस अधिकारले नारीहरूलाई राजनीति सम्बन्धि तालिम हासिल गर्ने मौका प्राप्त गर्नुको साथ-साथै पुरूष तथा नारीको संयुक्त आचार, विचार, सरसल्लाहको आदान प्रदानले पारिवारिक, सामाजिक, राजनीतिक समस्याहरू सरल तरिकाबाट सुल्झाउन अत्यन्त सहयोग सिद्ध हुन्छ । त्यसैले आधुनिक प्रजातान्त्रिक राज्यहरूमा नारीहरूलाई मताधिकारबाट बञ्चित गर्नु उचित देखिँदैन ।

## नागरिक युद्ध (Civil War)

एउटै राज्यका जनताबीच धार्मिक, राजनीतिक वा क्षेत्रीयताको आधारमा राज्यभित्रै हुने युद्धलाई नागरिक युद्ध भनिन्छ ।

## नौलो जनवादी क्रान्ति (New Democratic Revolution)

माओत्सेतुङ्गको नेतृतवमा चीनमा गरिएको क्रान्तिलाई नौलो जनवादी क्रान्ति भनिन्छ । माओत्सेतुङ्गले नौलो जनवादी क्रान्तिको माध्यमद्वारा पिछडिएको चीनमा कम्यूनिष्ट पार्टीको नेतृत्वमा क्रान्ति गर्न सकिन्छ भन्ने कुरा प्रष्ट पारिदिनु भयो । यो

क्रान्ति एक प्रकारको पूँजीवाद क्रान्ति नै थियो । तर यसमा कम्युनिष्ट पार्टीको नेतृत्वमा अरू प्रजातान्त्रिक शक्तिहरूलाई पनि संयुक्त मोर्चामा समावेश गराएर क्रान्ति गरिन्छ । यस क्रान्तिमा राष्ट्रिय पूँजीपति वर्ग समेतका उद्योगहरूको रक्षा गरिन्छ । दलाल पूँजीपतिहरूका सम्पत्ति राष्ट्रियकरण गरिन्छ । जमिन्दार वर्गमा ठूला ठूला प्लटहरू भूमिसुधारद्वारा किसानमा वितरण गरिन्छ । सानातिना जमिनहरूमा किसानहरूको हितलाई नोक्सान पुग्ने काम गरिँदैन । नौलोजनवादी क्रान्ति गरीब र अविकसित मुलुकमा समाजवाद र पूँजीवादी दोबाटोमा उभिएको वा समाजवादी बाटोमा पाइला टेकेको बटुवा जस्तो हो । यस नौलो जनवादी क्रान्तिमा विजय प्राप्त गरेमा समाजवादमा पुग्न ज्यादै सजिलो पर्दछ भन्ने विश्वास लिइन्छ ।

## नेता

धेरै मानिसले नेता भनेको पार्टीको नीति नेतृत्व गर्ने सर्वेसर्वा व्यक्ति हो भन्ने ठानेका छन् तर त्यसो होइन । राजनीतिमा नेता भन्नाले नीतिका राम्रोसँग व्याख्या गरी लागु गर्न/गराउन सक्षम, संगठनलाई कुशल ढङ्गबाट परिचालन गरी नीति सिद्धान्तप्रति वफादार रहने व्यक्तिलाई नेता भनिन्छ ।

## नीतिमुखी

नीति भन्नाले नेतृत्वदायी संस्थाले बहुमतद्वारा वा सर्वसम्मतिका आधारबाट निर्णय गरेको मूल उद्देश्य अर्थात निश्चित कार्यक्रमलाई बुझ्नु पर्दछ । नीति नै पार्टीको सर्वमान्य सिद्धान्त हो यो महाधिवेशनले मात्र निर्माण गर्न सक्दछ । तसर्थ सम्पूर्ण नेता तथा कार्यकर्ता नीतिमुखी हुनुपर्दछ ।

## नेतृत्व

नेतृत्व भन्नाले सम्पूर्ण प्रतिनिधिमूलक उच्च निकाय (राष्ट्रिय महाधिवेशन) द्वारा निर्माण भएको नेतृत्वदायी समिति वा संस्थालाई नेतृत्व भनिन्छ तसर्थ पार्टीको नेतृत्व भनेको केन्द्रीय समितिलाई बुझ्नु पर्दछ । केन्द्रीय समिति अर्थात नेतृत्व जो जहाजको कम्पास जस्तो दिशाबोध गराउने हुनुपर्दछ ।

## नेता प्रधान की नीति प्रधान ?

नेता भन्नाले निश्चित उद्देश्यलाई प्राप्त गराउनका लागि स्वयममा आन्दोलित भइरहने उर्जा हो । कहिले कहीं एकाध व्यक्तिको निर्णय पार्टीमा सर्वमान्य हुन्छ तर त्यसैलाई महत्व दिइरहनु भने हुँदैन । त्यसो हुनुले पार्टीलाई व्यक्तिमुखी बनाउँदै लान्छ । पार्टीमा व्यक्तिको मनोगत वा एकाङ्गीपन बढ्यो भने अन्तमा पार्टी पतन भएर जान्छ । पार्टीका कार्यकर्ताहरूमा जिम्मेवारी घट्दछ र चारी चाप्लुसी हावी हुँदै जान्छ यसर्थ पार्टीका नेतालाई आदर गरे पनि नीतिलाई प्रधान मान्नु पर्दछ ।

## नेता वा कार्यकर्तामा हुनु पर्ने गुण

. नेता भन्नाले मरेको माछा जस्तो पानीले जता वगायो त्यतै बग्ने होइन। जिउँदो माछा जस्तै आवश्यकता अनुसार पानीको प्रवाहबाट पनि फर्किन सकोस् तसर्थ नेतामा निम्न अनुसारको गुण हुन जरूरी हुन्छ–

(क) निर्भिकता – अदम्य शाहसिलो।

(ख) बुद्धिमत्ता – काम गर्न बुद्धि पुऱ्याउने।

(ग) विवेकी – गर्ने र नगर्ने वा असल खराव छुट्याउने।

(घ) जाँगरिलो – उत्साहक साथ काम गर्न/गराउन सक्ने।

(ङ) विश्वासनीयता– इमान्दार अति गोपनीय कुरामा विश्वास गर्न सकिने।

(च) निष्पक्ष – पक्षपात/भेदभाव नगर्ने।

(छ) लोकप्रिय – कार्य सम्पादन पक्षमा सबैले मन पराउने।

(ज) चिन्तनशील – पार्टी हितको लागि चिन्ता गरिरहने।

(झ) प्रियदर्शी – पार्टी उन्नति मात्र हेर्न चाहने/ सबैको आँखामा प्यारो हुने।

(ञ) लागी परिरहने– पार्टीका निरन्तर समर्पित भइरहने।

(ट) समयनिष्ट– समयको ख्याल राख्ने/एक कदम अघि र पछि हेर्ने।

(ठ) कर्तव्यनिष्ठ – अधिकार भन्दा बढी कर्तव्य ठूलो मान्ने।

(ड) कुलश वक्ता – विपक्षलाई प्रहार गर्न सिपालु/जनतालाई प्रभाव पार्ने गरी बोल्न सक्ने।

(ढ) शान्त स्वभाव– गम्भिर एवं धैर्यधारण गरी कुरा सुन्न सक्ने।

(ण) योग्य – तत्काल कुरा बुझेर सटीक निर्णय दिन सक्ने।

## नेता र कार्यकर्ताको कसि

सुनलाई जसरी कसि लाएर जाँचिन्छ, त्यसरी नै कार्यकर्ता वा नेतालाई कसि लाउनु पर्दछ। राजनीतिमा नेता र कार्यकर्तालाई कसि लगाउन दुई प्रकारका विधि अप्नाउनु पर्दछ।

(क) आलोचनाद्वारा- नेता वा कार्यकर्ताको गुण दोषको आधारमा समिक्षा गरी आलोचना गर्नु पर्दछ, यसरी आलोचनाद्वारा उनीहरूमा निखार आउँदछ।

(ख) आत्मआलोचनाद्वारा- नेता वा कार्यकर्ताहरूले आफूबाट भएको पार्टी हित विपरित सुधारिनका निम्ति आत्मालोचना गर्नु पर्छ, त्यसो गरियो भने भविष्यमा पुनः गल्ती दोहोरिँदैन र उनीहरूमा सुझबुझ बढ्न गई नयाँ उमङ्ग आउँदछ।

## न्यायपालिका (Judiciary)

व्यवस्थापिकाद्वारा तयार पारिएका नियम कानूनहरूलाई कार्यपालिकाले कार्यान्वय गर्दछ। यसरी व्यवहारमा लागू भएका कानूनहरूको सही रूपमा पालना भएको छ, छैन हेरी कानूनको व्याख्या गरेर त्यसको उद्देश्य अनुरूप पालना गर्न लगाउने र यदि कसैले कानूनको अवहेलाना गर्छ भने त्यसलाई दण्ड दिने न्यायापालिकाको हो।

## पञ्चशील (Panchasheel)

सन् १९५५ मा बाङ्डुङ्मा भएको सम्मेलनमा पारित निम्न सिद्धान्तलाई पञ्चशीलको सिद्धान्त भनिन्छ । (१) एकले अर्को मुलुकको स्वतन्त्रता, सार्वभौमसत्ता र क्षेत्रीय अखण्डताको सम्मान गर्ने (२) अर्काको आन्तरिक मामिलामा हस्तक्षेप नगर्ने (३) समानता र पारस्पारिक हितलाई कायम गर्ने (४) अनाक्रमण (५) शान्तिपूर्ण सहअस्तित्व स्वीकार गर्ने ।

## परराष्ट्र नीति (Foreign Policy)

एक देशले अर्को देशसँग सम्बन्ध राख्ने नीतिलाई परराष्ट्र नीति भनिन्छ । यो नीति दुई प्रकारका हुन्छन् । (१) संलग्न (२) असलग्न । कुनै पनि देशको परारष्ट्र नीति त्यस देशको भौगोलिक स्थिति, ऐतिहासिक, अनुभव, सामाजिक बनौट, राजनैतिक विचारधारा, सुरक्षा नीति तथा व्यापार नीति जस्ता कुराहरूबाट निर्धारित हुन्छ । सामान्यतया एक सार्वभौमिक राज्यले आफ्नो क्षेत्राधिकार बाहिरको स्थितिमा लिइने नीति नै पराराष्ट्र नीति हो ।

## परिमाणात्मक र गुणात्मक परिवर्तन (Quantitative & Qualitative Change)

कुनै पनि संजीव वस्तु वा व्यवस्था सँधै एकनाश रहादैन । त्यो फेरिरहन्छ । त्यसरी फेरिरहनुलाई नै परिवर्तन भनिन्छ । द्वन्दवादको एक मुख्य निचोड परिणामात्मक र गुणात्मक परिवर्तन हो । परिवर्तनका दुई चरण छन् । (१) परिणामात्मक परिवर्तन (२) गुणात्मक परिवर्तन । यी दुवै चरण पूरा गरेपछि मात्र नयाँ परिवर्तन हुन्छ । जस्तो कुनै एक वस्तु अर्को छुट्टै किसिमको वस्तुमा फेरिनु अगाडि उसमा विस्तारै परिवर्तन भइरहन्छ । यसरी हुँदै गरेको परिवर्तनको असर प्रष्ट रूपमा पहिला-पहिला देख्न सकिँदैन । पछि पछि त्यस्तो परिवतैन बढ्दै जान्छ अनि नौलो रूपमा देखिन पुग्छ । परिवर्तनको शुरूको अवस्थालाई परिमाणात्मक र वस्तु नै फेरिने अवस्थालाई गुणात्मक परिवर्तन भनिन्छ । पूँजीवादमा जहाँ कलकारखाना स्थापना हुँदै जान्छ । त्यहाँ मजदूर र पूँजीपतिमा अन्तरविरोध बढ्दै जान्छ । मजदूर संघर्षमा लाग्छन् । केही माग पूरा हुन्छन् । फेरि काममा लाग्छन् । तर शोषण झन् झन् चर्कंदै जान्छ, अनि आखिरमा क्रान्तिका पहिलाका रूपमा हडताल, संगठन, जुलुस परिमाणात्मक परिवर्तन हुन्, व्यवस्था नै पल्टिएर अर्को व्यवस्था आउनु गुणात्मक परिवर्तन हो ।

## पहिलो अन्तर्राष्ट्रिय (First International)

बेलायतको लण्डनमा धेरै देशहरूका मजदूर प्रतिनिधिहरूले सन् १८४६ मा एउटा मजदूर संगठनको स्थापना गरेका थिए । यसैलाई 'पहिलो अन्तर्राष्ट्रिय' भनिन्छ । पहिलो अन्तर्राष्ट्रियको मुख्य संस्थापकहरू कार्ल मार्क्स र एङ्गेल्स हुनुहुन्थ्यो । पहिलो अन्तर्राष्ट्रियाले केही वर्षसम्म अन्तर्राष्ट्रिय मजदूर आन्दोलनको नेतृत्व पनि गरेको

थियो । यसैको पालामा मजदूर वर्गको पहिलो राज्य पेरिस कम्युनिको स्थापना पनि भयो । पहिलो अन्तर्राष्ट्रियका अन्य नेताहरू बाकुनिन, प्रूँधो र लासालसँग मार्क्स र एङ्गेल्सका भावना, विचारधारा मेल खाएन । बाकुनिनका सहयोगीहरूले पहिलो अन्तर्राष्ट्रियमा फूट पारे । १८७२ मा भएको हेग अधिवेशनपछि यसको मुख्य कार्यालय लण्डनबाट न्यूयोर्कमा सार्‍यो र १८७६ मा यो बन्द पनि भयो ।

## पञ्चशीलको आधारहरू

१. कुनै पनि राष्ट्रसँग असल र मितेरी रूपमा रहने ।

२. कुनै पनि राष्ट्रको पक्षमा नलागि तटस्थ रहने ।

३. आफ्नो राष्ट्रमा अर्को राष्ट्रको विरूद्ध कुनै पनि गतिविधि गर्न पूर्ण प्रतिबन्ध लगाउने ।

४. अन्य राष्ट्रको आन्तरिक मामलामा हस्तक्षेप नगरी वा कुनै पनि राष्ट्रको सार्वभौमिकतामा आँच आउने कुनै कार्य नगर्ने ।

५. विश्वका प्रत्येक राष्ट्रसँग भातृत्व सम्बन्ध कायम राख्ने ।

## पाँचौं कालम (Fifth Colmn)

आफ्नो राष्ट्रको हितको विरूद्ध शत्रु देशका लागि गोप्य रूपमा गुप्तचरको काम गर्ने वा युद्धको बेला शत्रु देशलाई सहयोग गर्ने समूहलाई "पाँचौं कालम" भनिन्छ ।

## पार्टीमा मतभिन्नता

कुनै पनि दल, पार्टी वा संघ, संस्था विचार र भावना मिल्नेहरूको एउटा सूत्रबद्ध जत्था अथवा जमात हो । व्यक्तिव्यक्तिको स्वभावगत भिन्नता, आचरण र कार्यसम्पादन प्रकृया आ-आफ्नै किसिमको हुन्छ भने वैचारिक रूपले सोच्ने, बुझ्ने वा गर्ने पद्धति पनि फरक प्रकृतिको हुन्छ । त्यसलाई एकरूपता ल्याउन नियम वा विधान अनुसार संचालन गर्नु पर्दछ ।

व्यक्तिको स्वभाव, आचरण र क्षमता अनुसार पैदा हुने विचारहरू भिन्न भइरहन्छन् र समयले पनि फरक प्रकारका सोचहरूलाई जन्माइरहन्छ । त्यसबाट नै एउटा समस्या पैदा हुन्छ र त्यस समस्याको निदानका लागि प्रत्येक व्यक्तिबाट गरिने निर्णय पनि भिन्न प्रकारकै रहन्छ । त्यसबारे छलफल गरिनु आवश्यक हुन्छ र छलफलद्वारा साझा सोच अर्थात साझा सहमती बनाउनु पर्दछ । त्यो विचार नै जनवादी केन्द्रीयता हो । जनवादी केन्द्रीयता निर्माण गर्न छलफल गराउँदा विधिवत वा प्रकृयागत अथवा मित्रवत या शिष्टतापूर्वक गराउनु पर्दछ । सर्वसम्मत निर्णय हुन सकेन भने बहुमतको सिद्धान्त लागू गर्नु पर्दछ तर त्यस्तो निर्णय बहुमत पक्ष र अल्पमत पक्ष दुवैले स्वीकार गरी व्यवहारमा लानु पर्दछ । त्यस्तो हुन नसके त्यसबाट अराजकता र भ्रम सिर्जना हुन गई पार्टी हाटबजार जस्तो अनियन्त्रित भिड बन्न सक्छ । त्यस्तो पार्टी, दल वा संघ, संस्थाले आफ्नो निश्चित उद्देश्यलाई प्राप्त गर्न सक्दैन ।

पार्टीमा मतभिन्नता सिर्जना भयो भने त्यस्तो अवस्थालाई सटीक ढङ्गले समाधान गर्न अध्यक्ष, महासचिव या सचिवहरूले अत्यन्त रचनात्मक र सिर्जनात्मक तरिकाले

बैठक संचालन गराउनु सक्नु पर्दछ । अध्यक्ष, महासचिव या सचिवहरूमा दक्षता, कुशलता र सिर्जनशीलता हुनु अनिवार्य छ भने लागू गराउने क्षमता पनि हुनुपर्दछ । त्यसको समाधान गर्न अन्य सबै पदाधिकारी र सदस्यहरूको पनि रचनात्मक सहयोग अपरिहार्य हुन्छ । कसैले पनि कसैको सहयोग विना समस्यालाई समाधान गर्न सकिन्न यसर्थ छलफल गर्न वा गराउन सबै पक्षको त्यतिकै जिम्मेवारी रहन्छ ।

पार्टीमा मतभिन्नता भन्नाले अन्तर्विरोध नै हो र अन्तरविरोध पनि दुई प्रकारका हुन्छन् । शुरूमा पैदा भएको मतभिन्नता मैत्रीपूर्ण हुन्छ तर त्यसलाई प्रकृयागत ढङ्गले समाधान गर्न नसके त्यै शत्रुतापूर्ण अन्तर्विरोध बन्न सक्दछ । शत्रुवत् हुने अन्तर्विरोधबाट पार्टीमा अस्वस्थ वातावरण र तनाव पैदा गराउँछ र अन्ततोगोत्वा पार्टी विभाजन या फुटको संघारमा पुग्दछ त्यस्तो अवस्थामा पार्टीको सम्पूर्ण कार्य र उद्देश्यमा चोट पुग्छ । जतिसुकै मतभिन्नता भए पनि पार्टीलाई विभाजन वा फुटबाट जोगाएर फरक मत राख्ने साथीहरूसँग हृदयको विशालताले एकजुट बनाएर पार्टीलाई जीवन्त राख्नु पार्टी अध्यक्ष, महासचिव या सचिवको राजनीतिक कौशलता हुनुपर्दछ ।

कहिले कहीं पार्टीमा कतिपय साथीहरू अनावश्यक मतभिन्नता प्रकट गर्दछन् । आफ्नो क्षमता वा व्यक्तिगत अहम् प्रदर्शन गर्न अर्थात अन्य साथीहरू भन्दा आफू प्रभावशाली ठहरिनका लागि मतभिन्नता राख्दछन् त्यस्तो अवस्था सिर्जना भए पार्टीले व्यक्तिले एकल प्रभुत्वमा लाग्नु हुँदैन र पार्टीको हीतका लागि मत ल्याउँदा भिन्न प्रकृतिको देखिए त्यो स्वभाविक हुन्छ तर मतभिन्नता राख्नेले आफ्ना विचारमा हठवादी बन्नु हुँदैन । मत जाहेर गर्ने व्यक्तिको मतलाई निर्णायर्थ स्वीकार नगरे बैठकमा अनावश्यक हो-हल्ला, बैठक बहिष्कार वा बैठक संचालन गर्न बाधा उत्पन्न गराउनु हुँदैन, एक व्यक्ति, एकात्मकता वा एकाधिकार र कहीं अभिराम गतिले टिक्न सक्दैन त्यसको तुरन्तै अवशान हुन्छ । बैठकबाट गरिएको निर्णयलाई स्वीकार नगर्ने, मनोगत विचार लदाउने, निर्णयको खिलाफ जाने र बहुमत साथी विरूद्ध मनमाफिक कार्य गर्ने अर्थात पार्टीलाई संकटमा पारिरहने प्रवृत्ति जनतान्त्रिक आचरण होइन र त्यसबाट समाजवाद स्थापना हुन सक्दैन ।

अल्पमतमा परेका पक्षलाई निर्णय कितावमा "नोट अफ डिसेन्ट" राख्न पाउने प्रावधान हुन्छ तर त्यसो भए तापनि बहुमतको निर्णयलाई पालन गरी व्यवहारमा लैजानु पर्दछ । आफ्नो विरोधलाई पार्टीमा लिखित र सप्रमाण साथ दर्ता गराउनु पर्छ । आफ्नो विरोध औचित्यपूर्ण भएको प्रमाण दिन सक्दैन तर "म जे गर्छु त्यो ठीक हुन्छ" भन्ने व्यक्तिवादी सोच तानाशाहीको नमुना हो र विश्वमा कुनै पनि तानाशाहरू जीवन रहन सकेनन् । हामीले पार्टीमा साझा चिन्तन र साझा विचारलाई प्रमुखता दिई साझा दायित्व र जिम्मेवारी बहन गर्नु पर्दछ । साझा सोच र विचार नै जनवाद हो र यसलाई समान तवरबाट व्यवहारिक बनाउनु केन्द्रीयता ठहर्छ । यस मानेमा जनवादको जगमाथि केन्द्रीयतालाई उभ्याउनु पर्दछ । पार्टीको लागि यो आवश्यक हुन्छ तर सेना वा प्रहरी संगठनमा भने केन्द्रीयताको आधारमा जनवाद हुन्छ या हुनुपर्दछ । जनवाद भन्नाले छलफल गर्ने, आफ्नो राय पेश गर्ने अथाव प्रस्तुत रायमा टिप्पणी साथ मत राख्न पाउने अधिकार पनि हो र केन्द्रीयता भनेको छलफलद्वारा निर्णय भएकोलाई "मान्नै पर्ने नीति वा निर्देशन" बुझ्नु पर्दछ । जसरी कमाण्डरको आदेश सेना वा प्रहरीले कर्तव्यनिष्ठ पालन गर्दछन् त्यसरी नै पार्टीमा पनि पार्टी कमाण्डर हो र सम्पूर्ण पार्टी सदस्यहरू सिपाही हुन् ।

हुनत पार्टीमा सर्वप्रथम प्रसस्त छलफल, विचार मन्थन वा माझा माझ र सभा, समारोह, बैठक आदि गरिनु पर्दछ । त्यस्ता अवसरमा प्रत्येक सहभागी साथीहरूले मन कुनै तुष वा कसर नराखी भाग लिनु पर्दछ । त्यस्ता छलफलद्वारा बहुमत वा सर्वसम्मतिको आधारबाट भएको निर्णयलाई लागू गर्नुपर्दछ । कुनै पनि निर्णय विना छलफल गर्नु हुँदैन । अर्थात छलफलद्वारा गरिएका निर्णय सबैले पालन गर्नै पर्दछ । यसरी छलफल गर्ने प्रकृयालाई जनवाद र लागू गराउने पद्धतिलाई केन्द्रीयता भनिन्छ र जनवादी केन्द्रीयताको सिद्धान्तको सार यही नै हो ।

पार्टी कमिटी प्रणालीभित्र तल्लो तहहरू माथिल्ला तहको अधिनस्त रहनु पर्दछ र सम्पूर्ण समितिको अन्तिम अर्थात सर्वोच्च निकाय केन्द्रीय समिति हो । सदस्यहरू संगठनको मातहतमा रहनु पर्दछ र व्यक्तिहरू समूहको अधिनस्त रहनु पर्दछ तसर्थ केन्द्रीय समिति पनि महाधिवेशनप्रति उत्तरदायी रहनु पर्दछ यसलाई पार्टी कमिटी प्रणाली भन्नु पर्दछ ।

प्रत्येक समितिमा जनवादी केन्द्रीयता निर्माण गर्न पार्टीले विधान अनुसार व्यवस्था गरेको हुन्छ र संचालन गर्न अनुशासनको आवश्यकता पर्दछ । पार्टीमा मतभिन्नता आउँदै आउँदैन भन्नु कोरा कल्पना मात्र हो । तर फरक मत राख्नेहरूले गतिछाडा व्यवहार गर्दछन् भने त्यस्तालाई पार्टीबाट अलग राख्नु पार्टीको हितमा हुन्छ । पार्टीमा ल्याइएका फरक मतलाई वैज्ञानिक ढङ्गले सोच्नु पर्छ, सबै पक्षबाट विचार पुऱ्याउनु पर्छ र मतभिन्नता नआए पार्टीमा धारिलोपना आउँदैन । मतभिन्नतालाई संचालन गर्न माथि उल्लेखित विधि बाहेक निम्न कुराहरूलाई पनि ध्यान दिनुपर्दछ ।

(१) प्रत्येक साथीको मत (विचार) ध्यान दिएर सुन्नुपर्दछ ।

(२) आफ्नो मत (कुरा) प्रभावकारी ढङ्गले खुलेर राख्न सक्नुपर्दछ ।

(३) आफ्नो राय पेश गर्दा अर्काको मर्यादामा आँच आउने वा चोट पुग्ने किसिमको होइन आफ्नो मात्र कुरा सर्लक्क राख्नुपर्दछ ।

(४) आफ्नो विचार पार्टीमा असान्दर्भिक वा कमि कमजोरी भएमा हठ लिनु हुँदैन स्वीकार गर्नु पर्दछ ।

(५) अन्य साथीको प्रस्तुत मत सकारात्मक भए कदर गर्नु पर्दछ ।

(६) छलफलमा भाग लिंदा पार्टी हितलाई नै केन्द्रविन्दु बनाउनु पर्दछ आफ्नो अहमलाई प्रदर्शन गर्नु हुँदैन ।

(७) हारजीतको भावनाले छलफल गर्ने होइन, पार्टी हीतलाई सर्वोपरी ठान्नु पर्दछ ।

(८) आफ्नो तर्क वैज्ञानिक तथा सप्रमाण प्रस्तुत गर्नु पर्दछ ।

(९) बैठकमा बाधा उत्पन्न हुने हल्ला गर्नु, कानेखुसी गर्नु, निदाउनु, बेवास्ता गर्नु वा प्रशंग भन्दा बाहिर जानु हुँदैन ।

(१०) मनलाई नियन्त्रण गरी विषयमा दत्तचित्त रहनु पर्दछ ।

(११) निर्णय गर्न हतार गर्नु हुँदैन तर निर्णय गर्नलाई हिम्मत पनि गर्न सक्नु पर्दछ ।

(१२) पार्टी निर्णयलाई जताततै सार्वजनिक गर्नु हुँदैन र निर्णयलाई लागू गर्न फलाम हुन सक्नु पर्दछ ।

(१३) पार्टीको निर्णय बिना आफ्नो मनले सोचेर कुनै काम गरी हाल्नु हुँदैन ।

(१४) पार्टी समितिको बैठक बस्ने अवस्था नभएमा वा तत्काल कुनै समस्या पैदा भए आफ्नो नजिकका अथवा सम्पर्क राख्न सकिने साथीहरूसँग सम्पर्क राखी छलफल गरी काम गर्नु पर्दछ । तर पछि पार्टी बैठकमा पेश गरी अनुमोदन गराउनु पर्दछ ।

(१५) मतभिन्नताको विषयमा सावधानीपूर्वक विचार गर्नु पर्दछ र भिन्न मत लिने साथीलाई विना आधार दोष लगाउनु हुँदैन ।

(१६) पार्टीका साथीहरूको नियतमा शंका गरिरहने, चरित्र हत्या गर्ने, दोषारोपण गर्ने आदि गर्नु हुँदैन ।

(१७) आफूले गरेको जस्तै महत्वपूर्ण काम भए पनि आफैद्वारा प्रशंसा गर्नु हुँदैन ।

(१८) आफ्नो अधिकार भन्दा बढी कर्तव्यलाई बुझ्नु पर्दछ ।

(१९) अन्य साथीको सकारात्मक पक्षलाई सह्राहना गर्नु सक्नु पर्दछ ।

(२०) प्रशंसामा होइन काममा विश्वास राख्नु पर्दछ ।

## पार्टी र जनसंगठनहरू

पार्टी र जनसंगठनहरू सैद्धान्तिक तथा वैचारिक रूपमा समान भए तापनि संगठनात्मक दृष्टिमा जनसंगठनहरू स्वतन्त्र हुन्छन् । जनसंगठनहरूको संगठन पद्धति, कार्यपद्धति र अनुशासन साथै कार्यक्रम आदिमा पार्टीले हस्तक्षेप गर्नु हुँदैन । सैद्धान्तिक तथा वैचारिक समानताका कारण एकअर्कामा सुझाव मात्र दिनु पर्दछ ।

## पार्टीको कार्यपद्धति र कार्यशैली

प्रत्येक स्तरका पार्टी कमिटी समक्ष विभिन्न कार्य र अनगिन्ति समस्याहरू रहेका हुन्छन् । ती प्रत्येक समस्यालाई एकै पटक हल गर्न सकिँदैन न त सम्पूर्ण कार्यहरू एकैचोटी सम्पन्न गर्न सकिन्छ तसर्थ प्रत्येक स्तरका पार्टी कमिटीभित्र आवश्यक छलफल गरी मुख्य समस्या समाधान गर्नु पर्दछ त्यसपछि अर्को मुख्य समस्यातिर पार्टीको सम्पूर्ण शक्ति प्रयाग गर्नु पर्दछ । पार्टीको सम्पूर्ण शक्ति प्रयोग गर्दा विशेष गरी विवेक लगाउनु जरूरी छ । पार्टीको कार्यपद्धति भनेको यही हो ।

हरेक समाजको जनजीवनसँग पार्टीको अन्तर्सम्बन्ध रहेको हुन्छ र समाजको अङ्गकै रूपमा पार्टीलाई विकास गर्दै लैजानु परेकोले प्रचलित समाजकै जनशैली अनुसार पार्टीको कार्यशैली निर्माण गर्नु पर्दछ । त्यही पद्धतिलाई पार्टीको कार्यशैली भनिन्छ ।

## पार्टीको राजनीतिक विचारधारा

विश्वमा धेरै किसिमका राजनीतिक विचारधाराहरू देखापरेका छन् । आज विश्वमा प्रचलित तीनवटा विचारधारा अनुसार शासन गरिएको पाइन्छ । राजनीतिक विचारधारा भन्नाले राज्यले संचालन गर्ने तौर तरिका वा विचारहरूको श्रृंखला हो । प्रचलित तीन किसिमका विचारधारा निम्नानुसार छन् ।

(क) प्रतिस्पर्धात्मक राजनीतिक विचारधारा ।

(ख) वर्गीय आधारको राजनीतिक विचारधारा ।

(ग) समानुपातिक राजनीतिक विचारधारा ।

(क) प्रतिस्पर्धात्मक राजनीतिक विचारधारा भन्नाले खुल्ला रूपमा सम्पूर्ण राजनीतिक दलहरूबीच एकआपसमा प्रतिस्पर्धा गरी निर्वाचनद्वारा संसद वा राज्य व्यवस्थामा पुग्ने परिपाटीलाई भनिन्छ जसअनुसार हाम्रो राष्ट्रमा राजनीतिक दल/पार्टी वा व्यक्तिहरू निर्वाचनमा सहभागी छन् ।

(ख) वर्गीय आधारको राजनीतिक विचारधारा भन्नाले समाजलाई दुई वर्गमा विभाजन गर्ने सिद्धान्त अनुसार सम्पन्न वर्ग (धनी) विपन्न वर्ग (गरीव) बीच विभाजित गरी एक वर्गका उन्नतिका लागि संघर्ष गर्ने र दलहरूको अस्तित्वलाई वर्गीय आधार स्वीकार गर्ने राजनीतिक विचारधारालाई वर्गीय राजनीतिक विचारधारा भनिन्छ । एकाधिकारवादी पूँजीवादी र सर्वहारावर्गले यो राजनीतिक विचारधारालाई अपनाउँदछन् ।

(ग) समानुपातिक राजनीतिक विचारधारा भन्नाले मुलुकमा रहेका असमानतालाई प्रतिस्पर्धात्मक वा वर्गीय राजनीतिक विचारधाराले समानता दिन र समेट्न नसक्ने हुनाले सबैलाई सहभागी गराउन समान अपुपातमा प्रतिनिधित्व गराउने राजनीतिक विचारधारा हो । प्रतिस्पर्धात्मक, वर्गीय र समानुपातिक सबै राजनीतिक विचारधारामा पनि वर्गीय समस्या समाधान हुन सक्दैन यसका लागि छुट्टै कार्यक्रम हुनुपर्छ तर जातीय समस्यालाई समाधान गर्न जातीय जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्व गराउनु समानुपातिक राजनीतिक विचारधारा हो ।

## पार्टी कार्यक्रम

पार्टीले आफ्नो लक्ष्य प्राप्त गर्न अख्तियार गरेको रणनीति वा कार्यनीतिलाई जनमसक्ष पुऱ्याउन पार्टी तहबाट संचालन गरिने काम, कुरा, व्यवहार अथवा योजनालाई पार्टी कार्यक्रम भनिन्छ । कार्यक्रम विना पार्टीले आफ्नो उद्देश्य वा लक्ष्य प्राप्त गर्न सक्दैन । कार्यक्रम वैधानिक, अर्धवैधानिक र अवैधानिक गरी तीन किसिमका हुन्छन् । तर पार्टीले यी सम्पूर्ण कार्यहरू पार्टीको विधान अन्तर्गत संचालन गर्नु पर्दछ । राष्ट्रमा रहेका समस्यालाई हल गर्न पार्टीले गर्ने कार्यक्रम राष्ट्रको संविधान सम्मत हुन पनि सक्छ र नहुन पनि सक्दछ । कार्यक्रम अन्तर्गत विभिन्न विषयहरू पर्दछन् जस्तै :–

(क) महाधिवेशन, अधिवेशन वा सम्मेलन गर्ने,
(ख) सभा, समारोह आदि गर्ने,
(ग) आमसभा वा विरोध सभा गर्ने,
(घ) संगठन निर्माण, गठन, पुनर्गठन वा विस्तार गर्ने,
(ङ) पार्टी कार्यकर्ता प्रशिक्षण,
(च) पर्चा (हाते वा भित्ते) छर्नु, टाँस गर्नु,
(छ) पोष्टर, पम्प्लेट सार्वजनिक स्थलमा टाँस गर्नु,
(ज) राष्ट्रिय महत्वका सवालमा वा समाधानार्थ पार्टी आवश्यक माग भित्ता/पर्खालमा लेख्नु,
(झ) पार्टी अन्तरक्रिया, छलफल, विचार गोष्ठी संचालन गर्नु,
(ञ) सरकार समक्ष ज्ञापन-पत्र राख्नु,
(ट) प्रेस वक्तव्य, विज्ञप्ति वा आम संचारमा लेख प्रकाशन गर्नु,
(ठ) हडताल, जुलुस शक्ति प्रदर्शन, धर्ना वा अनशन इत्यादि सबै कार्यक्रम हुन् ।

यसर्थ कुनै पनि कार्यक्रम विना पार्टीलाई जीवित राख्न सकिँदैन र पार्टीमा

कार्यक्रमको नितान्त आवश्यक पर्दछ । पार्टीका सम्पूर्ण समितिले पार्टी विधान अनुसार माथिल्लो समितिको निर्देशनमा कार्ययोजना या कार्यक्रम तर्जुमा परिचालित भइरहनु पर्दछ ।

## पारदर्शिता (Transparency)

कुनै पनि कार्य सम्पादन गर्नका लागि ठोस आधार र नियमलाई समातेर खुल्ला रूपले अवलम्बन गरिने प्रक्रियालाई पारदर्शिता भनिन्छ । यो शब्दले राजनैतिक, आर्थिक, सामाजिक तथा सांस्कृतिक क्षेत्रमा आ-आफ्नो अर्थ दर्शाउँछ । राजनीतिमा पारदर्शिता भनेको घोषित राजनैतिक दर्शन र यसको क्रियान्वयन, व्यापक रूपमा जनवादी छलफलपछिको निर्णय, विचार अभिव्यक्तिको स्वतन्त्रता काम कार्वाहीमा एक रूपता, गुटवन्दी, षड्यन्त्रको अन्त्य आदि राजनीतिक पारदर्शिता भित्र पर्दछ । कुथनी र करणीमा फरक, सिद्धान्त र व्यवहारमा पृथकता, नेतृत्व पंक्तिबाट कार्यकर्ता तथा जनतामाथि हुने शोषणका विरूद्धमा हुने कार्यहरू पारदर्शिताका लागि संघर्ष हुन् । आर्थिक क्षेत्रमा विना नियम वा नियमहरूलाई आफ्नो स्वार्थ अनुकूल गरिने प्रयोगले अनियमितता, भ्रष्टाचार एवं अनुशासनहीनताको स्थितिमा पुऱ्याउँछ । यसको विरूद्धमा ठोस नियम, कानून र अवधारणाहरूको आधारमा गरिने खुल्ला क्रियाकलाप आर्थिक पारदर्शिता हो । वास्तविक वस्तुको मूल्यअनुसार अनुमानित लगात तयार गर्नु खुल्ला आह्वानबाट बोलपत्र माग्नु खुल्ला प्रतिस्पर्धाबाट निष्कर्ष निकाल्नु पारदर्शी क्रियाकलापभित्र पर्दछ । आजकल विश्व बैङ्कलगायतका विभिन्न दातृ एवं वित्तीय संस्थाहरूले लाद्ने नव-औपनिवेशिक शर्तहरू, यसले चलाउने कमिशन चक्र र यिनीहरूका दवावमा हुने आर्थिक अनियमितताका विरूद्धमा जनतालाई यथार्थताको बोध गराउन एक पारदर्शिता आन्दोलन अगाडि बढिरहेको छ । ट्रान्सपारेन्सी इन्टरनेशनलका नामले परिचित यो आन्दोलन पनि त्यति पारदर्शी भन्न हुनसकेको छैन ।

## पार्टी व्हीप (Party Whip)

संसदीय व्यवस्थामा संसदवादी दलहरूले आफ्नो विरोधी दलहरूबाट प्रस्तावित कुनै पनि सवालमा एक मतले पराजित गराउने परम्परा वा सांसदहरूको चिन्तन, मनन, तर्क वा विचार विरूद्ध केन्द्रीय नेताहरूबाट थोपरिएको निर्णयको पक्षमा मतदान गराउन केन्द्रीय नेतृत्वले दिने आदेशलाई व्हीप भनिन्छ । यसको अर्थमा कुनै पनि सांसदले आफ्नो विवेकभन्दा नेताको आदेश मान्नु पर्ने यो प्रावधानले संसदीय व्यवस्थाको तानाशाही रूप प्रष्टयाउँछ । संसदीय व्यवस्थामा मूल्य र मान्यता राजनीति नगरी पद, पैसा र सुविधाको लागि भेंडा बाख्रा सरह बिक्री हुने सांसदहरूलाई हेर्दा यो प्रक्रिया ठीकै भएपनि संसदबाटै जनघाती, राष्ट्रघाती कार्य गर्न दवाव दिने पार्टी नेतृत्वको आदेश पनि मान्नु पर्ने हुनाले पार्टी ह्वीप नेपालको सन्दर्भमा उपयोगीसिद्ध हुन सकेको छैन । जनताको माग हुँदाहुँदै पनि नेताको ह्वीपको डरले जनविरोधी क्रियाकलापमा सांसद मुछिने सम्भावना प्रशस्त रहन्छ ।

## पिङ्ग पङ्ग डिप्लोमेसी (Ping Pong Diplomacy)

जनवादी गणतन्त्र चीन सरकारले टेवल टेनिस खेलको माध्यमबाट विभिन्न राष्ट्रहरूबीच कूटनैतिक सम्बन्ध राख्ने र सम्बन्ध सुधार्ने प्रयास गर्न अपनाएको कुटनैतिक रणनीतिलाई (Ping Pong Diplomacy भनिन्छ ।

## पितृसत्तात्मक समाज (Patriarchal Society)

पुरूष एकलौटी भएको समाजलाई "पितृसत्तात्मक समाज" भनिन्छ । मानिसहरूले पशुपालन र खेतीपाती शुरू गरेपछि लोग्ने मानिसहरूको शक्ति बढ्यो । स्वास्नी मानिसहरूको हातबाट लोग्ने मानिसहरूले पारिवारिक शासन लिए । स्वास्नी मानिसहरू पहिला जस्तो बलिया भएनन् । बरू दासी जस्ता भए । एकजना लोग्ने मानिसले धेरै स्वास्नीहरू राख्ने चलन चल्यो । समाजमा रहेको सबै धन सम्पत्तिमा लोग्ने मानिसहरूले अधिकार जमाउन थाले । यस सम्बन्धमा अमेरिकाली विद्वान मौर्गनले गरेको खोजीलाई एङ्गेल्सले आफ्नो परिवार, व्यक्तिगत सम्पत्ति र राजसत्ताको उत्पत्तिमा प्रष्ट लेख्नु भएको छ । पुरूषहरूको मात्र सम्पूर्ण अधिकार भएको समाजलाई पितृसत्तात्मक समाज भनिन्छ ।

## पूँजीवादी (Capitalism)

सामन्तवादलाई त्यागेर आएको आर्थिक सामाजिक अवस्था नै पूँजीवाद हो । बढी भन्दा बढी नाफा कमाउनु अथवा सम्पत्ति कमाउन पूरै छुट हुनु पूँजीवादको मुख्य विशेषता हो । यसमा उत्पादनका साधानहरूमा पूँजीपति वर्गहरूको व्यक्तिगत स्वामित्व कायम हुने भएकाले मजदूर वर्गहरूको परिश्रम माथि शोषण हुन्छ । यस समाजमा पूँजीले श्रमलाई शोषण गरी पूँजीपति वर्गहरूले भन् बढी पूँजी निर्माण गर्छन् । यो समाजमा ऐन, कानुन, नीति-नियम सारा तिनै पूँजीपति वर्गहरूकै स्वार्थ रक्षा गर्नका लागि बनेका हुन्छन् । यसैलाई पूँजीवाद भनिन्छ ।

## पूँजीपति वर्ग (Capitalism Class)

पूँजीद्वारा मजदूरहरूको शोषण गर्ने वर्गलाई पूँजीपति वर्ग भनिन्छ । सामन्तवादसँग संघर्ष गर्नुपर्दा यो पूजीपति वर्ग क्रान्तिकारी पनि थियो । तर पछि शासन सत्ता आफ्नो हातमा परेपछि यसले शोषणको नीतिलाई फैलाउन थाल्यो । अहिले यो वर्गलाई दुई किसिमले विभाजन गर्न सकिन्छ । (१) दलाल पूँजीपति वर्ग (२) राष्ट्रिय पूँजीपति वर्ग ।

साम्राज्यवादी राष्ट्रहरूको अगाडि घुँडा टेकेर आफ्नो देशलाई बेच्ने, आफ्नो काम विदेशीहरूको इशारामा चलाउने, आफ्नो सबै वा धेरै सम्पत्ति गोप्य रूपले विदेशमा राख्ने र विदेशीहरूलाई आफ्नो देश लुट्न छूट दिने जस्ता काम गर्ने वा ठूला वा शक्तिशाली पूँजीपतिहरूलाई दलाल पूँजीपति वर्ग राष्ट्रका शत्रु हुन् । राष्ट्रिय पूँजीपति भन्ने आफै-विदेशी ठूला पूँजीपति वर्ग राष्ट्रका शत्रु हुन् राष्ट्रिय पूँजीपति भने आफै-विदेशी ठूला पूँजीपतिबाट सताइएका, देशभक्तिको भावना भएका पूँजीपति हुन् । राष्ट्रिय पूँजीपति वर्ग थोरै मात्रामा जनताका सहयोगी पनि हुन्छन् ।

## पूँजीवादी प्रजातन्त्र (Capitalism Democracy)

सामन्तवादी व्यवस्था पालामा पूँजीवादी प्रजातन्त्र धेरै जसो जनताले मन पराएको राज्यसत्ता थियो । पूँजीवादी क्रान्तिद्वारा यसलाई लागू गरियो । फ्रान्सको राज्यक्रान्तिद्वारा यो प्रजातन्त्र जल्दोबल्दो रूपमा देखापर्न थाल्यो । पछि पछि यसले पूँजीपतिवर्गको शोषणलाई मात्र सघाउन थाल्यो । पहिला पूँजीवादीहरूले जनता समक्ष गरेका वाचा पनि बिर्सन थाले । वर्गसंघर्ष घट्नु सट्टा बढ्न थाल्यो । जनताका मागहरू यसले पूरा गर्न सकेन । तर सामन्ती अधिनायकवाद, सैनिक तानाशाही अथवा निरंकुश राजतन्त्रभन्दा केही हदसम्म यस व्यवस्थाले जनतालाई प्रजातान्त्रिक हक दिने हुनाले त्यस्ता निरंकुश तानाशाहीहरूलाई भन्दा यसलाई जनता मान्न तयार हुन्छन् । आजभोली भारत, जापान, फिलिपिन्स, अमेरिका आदि देशहरूमा पूँजीवाद प्रजातन्त्र छ ।

## पुनरूत्थानवाद (Reactionary Revinism)

पुनरूत्थानवादीहरूलाई प्रतिक्रान्तिकारी भनिन्छ । एकपटक खत्तम भइसकेको अथवा ढलिसकेको फेरि उठ्न खोज्नुलाई पुनरूत्थानवाद भनिन्छ । क्रान्तिले विजय हाँसिल गरेको समयमा प्रतिक्रान्तिकारीहरू फेरि उठ्न सकिन्छ अथवा पुनः ब्यूझन सकिन्छ कि भनेर मुन्टो ठाडो पार्न खोज्छन्- यसैलाई पुनरूत्थानवाद भनिन्छ ।

## पेरिस कम्युन (Peris Commune)

फ्रान्सको पेरिसका मजदूरहरूले विश्वमा पहिलो पल्ट सर्वहारा वर्गको एक राज्य खडा गरेका थिए । यसै सर्वहारा वर्गको राज्यलाई पेरिस कम्यून भनिन्छ । पेरिस कम्यून सन् १८७१ को १८ मार्चदेखि ७२ दिनसम्म रहेको थियो । पूँजीपति वर्गले ७२ दिनपछि आफ्नो पूँजीवादी शासन पुनः सञ्चालन गरे । पेरिस कम्यूनिपछि 'कम्यूनिष्ट घोषणा-पत्र' मा पुरानो शासन सत्तालार्य पूरै सत्तम नपारेसम्म सर्वहारा वर्गले शासन सत्ता कब्जा गर्न सक्दैन भन्ने शिक्षालाई जोड दिइयो । सर्वहारा वर्गको पहिलो राज्य पेरिस कम्यूनमा कार्लमार्क्स र फ्रेडरिक एङ्गेल्सले नागरिकता प्राप्त गर्नुभएको थियो ।

## प्रगतिशील र प्रगतिगामी (Progressive & Reactionary)

साधारण प्रगति चाहनेलाई प्रगतिशील र प्रगति नचाहनेलाई प्रतिगामी भनिन्छ । विश्वको इतिहास राम्ररी केलाएर हेर्दा कुनै कुनै बेला पूँजीपति वर्ग र सामन्त वर्ग पनि प्रगतिशील थिए । दास प्रथालाई परिवर्तन गरेर सामन्तवाद ल्याउने क्रममा सामन्तवाद प्रगतिशील थियो । यसरी नै सामन्तवादीलाई खत्तम गर्नुपर्ने बेलामा पूँजीवाद पनि प्रगतिशील थियो । पूँजीवादी क्रान्तिमा १७८९ को फ्रान्सेली राज्यक्रान्ति स्मरणीय छ । यसले विश्वमा सामन्तवादलाई खत्तम गरेर समानता, भातृत्व र प्रजातन्त्र जस्ता कुराको प्रचार प्रसार गऱ्यो । तर पछि गएर पेरिस कम्युनिमा मजदूर वर्गलाई दवाएर प्रतिगामी बन्यो । यसरी नै रूसको समाजवादी क्रान्तिपछि त्यसको विरूद्ध उभिएर पूँजीवाद प्रतिगामी शक्तिको रूपमा चिनिन पुग्यो ।

## प्रजातन्त्र (Democracy)

प्रजातन्त्र शब्द अंग्रेजीको (Democracy) शब्दको नेपाली रूपान्तर हो । यो डेमोक्रेसी (Democrary) शब्द ग्रीकको दुई शब्द डेमोस (Demos) र क्रेशिया (Kratia) मिलेर बनेको हो । डेमोसको अर्थ हुन्छ 'जनता' र क्रेशियाको अर्थ हुन्छ 'सरकार' । यस बमोजिम डेमोक्रेशियाको शाब्दिक अर्थ हुन्छ– 'जनताको सरकार ।' अको अर्थमा त्यस्तो सरकार जसमा सर्वोच्चसत्ता जनताको हातमा हुन्छ । अमेरिकाका भूतपूर्व राष्ट्रपति विड्रो विल्सनको भनाई अनुसार प्रथम महायुद्ध मच्चिनुको उद्देश्य हो– प्रजातन्त्रका लागि उचित वातावरण तयार गरी यसको रक्षा गर्नु । तर दोस्रो महायुद्धको उद्देश्य हो– प्रजातन्त्रको रक्षा गर्नु । दोस्रो महायुद्ध पश्चात संसारले यो कुरा महासुस गर्न थाल्यो कि प्रजातन्त्र शान्ति, प्रगति र उन्नतिको मूल मन्त्र होइन । यस प्रजातन्त्रको परिभाषामा परिवर्तन हुन थाल्यो । प्रजातन्त्र सरकारको एक रूप मात्र होइन, यो एक किसिमको राज्य हुनाका साथै सामाजिक व्यवस्था पनि हो । प्रजातन्त्रको सम्वन्धमा समय समयमा विभिन्न विद्वानहरूले विभिन्न प्रकारका परिभाषा प्रस्तुत गरेका छन् । ती मध्ये केही परिभाषाहरू निम्न हुन्–

लिङ्कनको परिभाषा अनुसार "प्रजातन्त्र जनता-जनतामा निर्मात्ति तथा जनताद्वारा गरिने शासनलाई भनिन्छ ।"

लर्ड ब्राइसले दिएको परिभाषा यसप्रकारको छ- "प्रजातन्त्र, शासनको त्यो रूप हो जसमा राज्यको शासन शक्ति कुनै विशष वर्ग अथवा वर्गहरूमा निहित नभई सम्पूर्ण जनसमाजको सदस्यहरूमा निहित छ ।"

प्राध्यापक हर्नसाले प्रजातन्त्रको परिभाषा यसरी लेखेका छन्- "प्रजातन्त्र राज्य साधारणतः त्यो हो जसमा प्रभुत्व शक्ति समष्टि रूपले जनताको हातमा रहन्छ, जसमा जनता शासन सम्बन्धी विषयहरूमा आफ्नो अन्तिम निर्णय खोज्छ तथा यो निर्धारित गर्दछ कि राज्यमा कुन प्रकारको शासन स्थापित गर्ने ।"

माथिका परिभाषाहरूबाट यो स्पष्ट हुन्छ कि प्रजातन्त्र, शासनको त्यो स्वरूप हो जसमा प्रभुसत्ता सम्पूर्ण राष्ट्र अथवा समाजको बहुमतमा निहित हुन्छ । प्रजातन्त्र सम्पूर्ण जनताको हितहरूको समानता एकतामाथि जोड दिन्छ । प्रजातन्त्र प्रत्येक शक्ति गणनामा एउटा बराबर हुन्छ । एक भन्दा बढी कोही हुँदैन । राज्यको शासनमा प्रत्येक व्यक्तिको भाग हुनुपर्छ । विशेष अधिकारहरूका निम्ति कुनै स्थान हुँदैन । छोटकरीमा हामी भन्न सक्छौं कि स्वतन्त्रता, समानता तथा भातृत्व-भावना प्रजातन्त्रका तीन आधार हुन् ।

## प्रजातान्त्रिक समाजवाद (Democratic Socialism)

समाजवाद र पूँजिवाद दुवै भन्दा फरक व्यवस्था नै प्रजातान्त्रिक समाजवाद हो । केही समाजवादी विचारकहरूले राज्यलाई कायमै राखी संवैधानिक एवं राजनैतिक सुधारबाट पनि पूँजिवादी व्यवस्थाको अन्त्य गरी विस्तारै विस्तारै समाजवादी व्यवस्थातर्फ संक्रमण गर्न सकिने विचार प्रकट गर्दछन् । समाजवादीहरूको उद्देश्य एउटै भएपनि समाजवाद ल्याउने बारे दुई प्रकारका सिद्धान्त देखिएको छ । एउटाले राज्यको उन्मूलन

गरेर क्रान्तिकारी बाटो रोजेका छन् भने अर्कोले राज्यको अस्तित्व राखेर विकासवादी सिद्धान्त रोजेका छन् । यी दुई सिद्धान्तमध्ये राज्यको अस्तित्व राखेर विकासवादी बाटो रोज्ने समाजवादीहरूको सिद्धान्तलाई प्रजातान्त्रिक समाजवाद भन्दछ । प्रजातान्त्रिक समाजवादको विचारलाई जनसमक्ष ल्याउने श्रेय फेवियन्सहरूलाई दिइन्छ । प्रजातान्त्रिक समाजवाद भनेको फेवियनवाद पनि हो भनिन्छ ।

## प्रतिक्रान्ति (Counter Revolution)

साधारणतया प्रतिक्रान्ति भनेको विपरित अथवा क्रान्तिको ठीक उल्टो हो । क्रान्तिकारी आन्दोलनबाट सत्तामा आएको विजयी शक्तिलाई प्रतिरोध गरी प्रतिकृयावादीहरू पुन: सत्तामा प्रवेश गर्नु अथवा समाज पुन: पहिलेकै अवस्थामा फर्कनुलाई नै प्रतिक्रान्ति भनिन्छ । नयाँ जनवादी देशभक्त र प्रगतिशील तत्त्व एवं ती वर्गहरूको हातबाट प्रतिकृयावादी वर्ग र तत्वहरूले राज्य सत्ता खोसी जनवादी सरकारलाई अपदस्त गराउनुलाई नै प्रतिक्रान्ति भनिन्छ ।

## प्रथम विश्व युद्ध (First World Wart)

प्रथम विश्व युद्धको शुरूवात १९. जुलाई १९. मा जर्मनीले रूसमा हमला गरेपछि शुरू भयो । यस युद्धमा पहिला फ्रान्स, बेलायत, र रूस एकातिर थिए, अर्कोतिर जर्मनी, अष्ट्रिय र हङ्गेरी थिए । पछि गएर अमेरिका र जापान पनि पहिलोमा थपिए । त्यसपछि यस युद्धले विकराल रूप लियो । प्रथम विश्वयुद्धको समयमा लेनिनले युद्धको विरुद्ध साम्राज्यवादी शासन खत्तम गर्न आ-आफ्ना देशका सरकारलाई युद्ध रोकन लगाउनु पर्छ र क्रान्तिकारी गृह युद्ध शुरू गर्नुपर्छ भन्नु भएको थियो । तर दोस्रो अन्तर्राष्ट्रियका अवसरवादीहरूले मानेनन् । पछि रूसको "ब्रेस्त लिटोवस्क" मा जनमंनीसँग सन्धि गरेर यो युद्ध समाप्त भयो । ११ नोभेम्बर १९१८ मा रूसले आफ्ना केही गणराज्य गुमाउनु परेको थियो । साम्राज्यवादीहरूले संसारमा आफ्नो बजार र प्रभाव फैलाउने षडयन्त्रको चाल चल्न थालेपछि प्रथम विश्वयुद्ध भएको हो भनिन्छ ।

## प्रभुत्ववाद र हैकमवाद (Hegemonism)

ठूला, बलिया, धनी देशले साना, कमजोर र गरीब देशलाई विभिन्न दवाव दिई आफ्नो प्रभुत्व जमाउनुलाई 'प्रभुत्ववाद' भनिन्छ । धनी छु, ठूलो छु, बलियो छु भन्ने घमण्डले अरूलाई हेप्ने, मिच्ने, थिच्ने, तर्साउने विचारधारालाई 'हैकमवाद' भनिन्छ । हैकमवादलाई अहंकारवाद पनि भनिन्छ ।

## प्रान्तिय राज्य र त्यसभित्र स्थानीय श्वशासन

प्रान्तिय राज्य भन्नाले राज्य सरकारलाई बुझ्नु पर्दछ । हाम्रो पार्टीले सम्भव भएसम्म आदिवासी/जनजाति र दलित उत्पीडित जात/जातिको भाषिक, ऐतिहासिक र आर्थिक पृष्ठभूमिको आधारले सम्भव भएसम्म भौगोलिक सीमा निर्धारण गरी जातीय जनसंख्याको समानुपातिक आधारबाट निर्वाचित जनप्रतिनिधिहरूको राज्य विधान सभा गठन गरिने छ ।

राज्य सरकारले आफ्नो राज्य अन्तर्गत नागरिकहरूको हकहितको सुरक्षा, कर लगाउने वा हटाउने, न्यायिक व्यवस्था, भूमि व्यवस्था, सार्वजनिक सम्पत्तिको संरक्षण, शान्ति सुरक्षा, प्रहरी, प्रशासन, कर्मचारी भर्ना, बैंकिङ सेवा, विकास, निर्माण र जनककल्याणकारी काम गर्न पाउने छ ।

अति अल्प संख्यक जातिहरू, दलित उत्पीडित र ज्यादै पछौटे जाति (Backward Nationalities) हरूलाई प्रान्तिय राज्यभित्र जनप्रतिनिधिहरूको आरक्षण Reservation गराइने छ । यस प्रकारको अधिकारबाट पनि कुनै जातीय समुदायले आफू पिछडिएको महसुस गरे भौगोलिक दृष्टिले उपयुक्त ठहरे प्रान्तिय राज्यभित्र स्थानीय स्वशासन दिइने छ ।

## प्राग ऐतिहासिक युग (Pre-Historical Era)

ठोस प्रमाणका साथ पुराना कुराहरूको बयान उल्लेख गरिनुलाई इतिहास भनिन्छ । मानव जातिको विगत समयको कामकाजको बयानलाई मानव जातिको इतिहास भनिन्छ । मानव जातिका इतिहाससका प्रमाणहरू पुराना शिलालेख, अभिलेख, कागजपत्र, लिखित तमसुक, ताम्रपत्र आदि हुन् । यिनको माध्यमबाट समाजको यथार्थ विवरण पाउनु अगाडि पनि मानव जातिको अस्तित्व थियो । अति प्राचीनकालको मानिसले खोज गरिएको समयलाई प्राग ऐतिहासिक युग भनिन्छ ।

यस युगका मानव समाजको इतिहासको कुनै ठोस प्रमाण पाइएका छैनन् । पहिलाका मानिसहरूले प्रयोग गरेका हतियार, सरसामान र पुराना हाडखोर जमिनमा पुरिएर रहेका थिए । तिनलाई खनेर छानवीन गरी विद्वानहरूल त्यस समयलाई प्राग-ऐतिहासिक भन्ने नाम दिए । प्राग भनेको पहिला र ऐतिहासिक भनेको इतिहास सम्बन्धी हो । इतिहास भन्दा पहिलाको समयलाई प्राय-ऐतिहासिक युग भनिन्छ ।

## पार्टी संगठन

एक निश्चित उद्देश्यलाई पूरा गर्नका निम्ति सामुहिक रूपमा संगठित भएको संस्थालाई पार्टी र सामुहिक रूपमा एउटै लक्ष्य लिएका सम्पूर्ण व्यक्तिलाई एउटै शुत्रमा बाँध्ने प्रकृयालाई संगठन भनिन्छ तसर्थ संगठन नै शक्ति हो । समान सिद्धान्तका आधारमा सामुदायिक भावनाले निर्णय गरी कार्य सम्पादन गर्ने थलोलाई पार्टी संगठन भनिन्छ ।

पार्टी संगठन गर्न विभिन्न माध्यमलाई परिचालन गर्नु पर्दछ । जस्तै : कार्यकर्ताहरूमा निम्न गुण रहनु पर्दछ ।

(क) सिद्धान्तवादी,
(ख) कुलश वक्ता,
(ग) क्रान्तिप्रतिको भक्ति,
(घ) समस्या समाधान गर्ने योग्यता,
(ङ) संगठन कौशलता,
(च) जनप्रिय वा लोकप्रिया,
(छ) कार्यकर्तालाई परिचालन गर्न क्षमतावान

(ज) विपक्षको सुक्ष्म गुणलाई बुझ्न सक्ने र

(झ) चतुर तथा बुद्धमान

पार्टी संगठनमा निम्न कुराहरू रहनु पर्दछ–

(क) आम संचारको माध्यम

(ख) नियमित पार्टी हुलाकको व्यवस्था

(ग) यातायातको साधन

(घ) पर्याप्त आर्थिक श्रोत

(ङ) जनशक्ति परिचालन

(च) पार्टी प्रकाशन

(छ) दक्ष कार्यकर्ता

(ज) नियमित सम्पर्क

(झ) सिर्जनात्मक अर्थात रचनात्मक कार्यको आवश्यकता ।

## प्रोधोवाद (Prudhoism)

फ्रान्सेली अराजकतावादी मजदुर नेता पियेर जोसेफ प्रुँधोको नामबाट प्रुँधोवादको शुरूआत भएको हो प्रुँधोले "दरिद्रताको दर्शन" भन्ने पुस्तकमा आफ्ना विचार प्रस्तुत गरेका छन् । यही विचारलाई नै प्रुँधोवाद भनिन्छ । कार्ल मार्क्सले 'दर्शनको दरिद्रता' भन्ने पुस्तकमा प्रुँधोवादको खण्डन गरेका छन् ।

## फासिवाद (Facism)

इटालीको तानाशाह मुसोलिनीको राजनैतिक पार्टीलाई फासिष्ट पार्टी भनिन्छ । फासिष्ट पार्टीको सिद्धान्तलाई नै 'फासिवाद' भनिन्छ । मुसोलिनी इटालियन सोसलिष्ट पार्टीको एक सकृय सदस्य थियो । मेसोलिनीले पार्टी मुखपत्रको सम्पादन पनि गर्दथे । तर पछि आएर तानाशाहको रूपमा १९२० मा फासिष्ट पार्टी खोल्यो । शुरूमा गरीबको भलो, कल्याण र गणतन्त्रको नारा दिएर जनतालाई आफ्नो बनायो । पछि आएर राजतन्त्रवादी पनि भयो । मुसोलिनीले जनताको ध्यान आफूतिर खिच्न मजदूर आन्दोलन, क्रान्तिकारी भूमि सुधारको नारा पनि घन्कायो । दोस्रो विश्वयुद्धमा आएर फासिवाद खत्तम भयो ।

## फेवियन समाजवाद (Fabian Socialism)

बेलायतको विचारक सिडनी बेवले फेवियनवादको सुत्रपात गरेका हुन् बेलायतको मार्क्सवादीको प्रवाहलाई रोक्नका लागि फेवियनवाद ल्याइएको हो भनिन्छ । ब्रिटेनमा "फेवियन सोसाइटी" खोलिएको थियो । फेवियन सोसाइटीले कल्पना गरेको समाजवादलाई फेवियन् समाजवाद भनिन्छ । फेवियन समाजवादीहरूले वर्ग संघर्ष र समाजवादी क्रान्तिलाई मान्दैन । पुँजीवादबाट समाजवादमा पुग्न सामान्य सुधार र शान्तिपूर्ण संक्रमणबाट नै सकिन्छ भन्ने यस समाजको विचार थियो । पछि सन् १९०० मा यो ब्रिटिस लेबर पार्टीमा विलिन भयो । फेवियन समाजवादलाई विकासवादी समाजवाद पनि भनिन्छ ।

## फेवियन सोसाइटी (Fabian Society)

फेवियन सोसाइटीका प्रमुख विचारकहरूमा सिडनी वेव, जर्ज वर्नाड, सिडनी ओलिवियर र ग्राहम वेलास छन् । यी विचारकहरूलाई फेवियन सोसाइटीका "चार महान् सपुत" पनि भनिन्थ्यो । यी चार सपुतहरूको फेवियनवादको व्यापक प्रचार प्रसार गरे । फेवियनवादबारे प्रशस्त लेख रचना प्रकाशित गरे भने प्रशस्त भाषणहरू पनि गरे । पछि लास्कीले पनि फेवियन सोसाइटीका सदस्यता लिए । फेवियनवादीहरू सशस्त्र क्रान्तिमा हैन कि क्रमिक विकासमा विश्वास गर्दथे । एक रोमन सेनापति "फेवियस" ले युद्धमा विस्तारै विस्तारै अगाडि बढ्ने आफ्नो युद्ध नीतिद्वारा विजय हासिल गरेका थिए । यही फेवियसको नीतिको अनुसार अनुसरण गर्दै फेवियन्सहरूले आफ्नो क्रमिक विकासको नीतिलाई फेवियन्स नामाकारण गरे । फेवियनबाट प्रभावित फेवियन्सहरू समाजवादको प्राप्ति वर्गसंघर्षद्वारा नभई क्रमिक विकास तथा सुधारद्वारा हुने विचार प्रकट गर्दछन् ।

## फ्लोर क्रसिङ (Floor Crossing)

एउटा राजनैतिक दलबाट निर्वाचित भएको व्यक्ति वा सांसद आफ्नो राजनैतिक दल त्याग गरी अर्को राजनैतिक दलमा सम्मिलित हुने कार्यलाई (Follr Crossing) भनिन्छ ।

## बकुनिनवाद (Bakuninism)

बकुनिनको नामबाट बकुनिनवाद भनिएको हो । अराजकतावादी रूसी नेता बकुनिनको विचारधारालाई बकुनिनवाद भनिन्छ । पहिलो अन्तर्राष्ट्रियमा बकुनिनकै विचारधाराले गर्दा फूट आएको भनिन्छ ।

## बन्धु हत्या (Genocide)

जानी जानी आफैले योजना बनाएर कुनै जात, धर्म र विचारधाराका मानिसहरूको समूहलाई मार्ने वा खत्तम गर्ने प्रवृत्तिलाई बन्धु हत्या Genocide भनिन्छ ।

## बफर जोन (Buffer Zone)

दुई विरोध राज्यहरूको बीच आफ्नो शक्ति सन्तुलन गरी सीमा क्षेत्रलाई "तटस्थ क्षेत्र" द्वारा छुट्याई काम गरेको छ भने त्यस क्षेत्रलाई बफर जोन भनिन्छ । यस क्षेत्रलाई दुवै राज्यको सुरक्षा प्रदान गरेको हुन्छ । दुवै राज्यहरूले यस क्षेत्रलाई तटस्थको रूपमा लिएका हुन्छ । यस प्रकारको "तटस्थ क्षेत्र" को काम कुनै पनि राज्यले गर्न सक्दछ । बफर जोनको काम गर्ने राज्यलाई "बफर स्टेट" भनिन्छ ।

## बजेट (Budget)

Budget शब्दको उत्पत्ति फ्रान्सिसी भाषाको Bougettee बाट भएको हो । यसको अर्थ हुन्छ "छालाको एउटा सानो थैली ।"

"आधुनिक राज्य बजेट एक भविष्यवाणी र सबै सरकारी आय-व्यको अनुमान र केही विशेष खर्च र आयको उपलब्धी र त्यसलाई खर्च गर्ने आदेश हो ।" – जेज

"बजेट भनेको सरकारी आय-व्ययको एउटा स्वीकृत प्रारम्भिक योजना भएको लेखा हो ।" –स्टोर्न

"बजेट एउटा रिपोर्ट, अनुमान र प्रभाव हो । यो आर्थिक साधनहरूलाई सम्बन्धित गर्ने र समन्वय गर्ने एउटा साधन हो ।" – विलोवी

विस्तृत अर्थमा बजेट भन्नाले आय-व्यको विवरणलाई जनाउँछ । सरकारको आय-व्ययको आर्थिक विवरणलाई बजेट भन्दछ । बजेट भनेको सरकारी आर्थिक योजना हो । यसले सरकारको आर्थिक नीतिलाई यथार्थरूपमा प्रतिविम्वित गरेको हुन्छ । सरकारको मात्र बजेट नभई कुनै व्यक्तिले पनि आ-आफ्नो बजेट हुन्छ ।

## बुर्जुवा वर्ग (Bourgeois Class)

समाज विकासको क्रममा विकसित भएका एक प्रकारका मानिसहरूको ठूलो समूह हो जो पूँजिवादी यथास्थितिलाई सहज स्वीकार गर्ने मात्र नभई त्यसको विकासमा सचेत ढङ्गले क्रियाशील रहन्छ । यस वर्गले आमूल परिवर्तनकारी शक्तिलाई नकार गर्दछ र यदाकदा आफूलाई वर्गीय भनेर प्रचार गर्दछ । उत्पानको क्रममा प्रत्यक्ष संलग्न भए पनि नभए पनि सँधै पूँजिपतिको पक्षमा उत्पादनको परिमाण वितरण गरिनु पर्ने आशय व्यक्त गर्ने यो वर्ग पूँजिवादी अर्थतन्त्र र सामाजिक संरचनाका पक्षधर रहन्छ । वर्तमान समयमा बुर्जुवाहरूबीच पनि विभिन्न प्रकारका धारहरू देखापरेका छन् । तर उनीहरूको आम चरित्र चाहिं शोषणमा आधारित् समाजको वकालत गर्नु र पूँजिको पक्षमा वितरण प्रणालीलाई ढाल्नु रहन्छ । राज्य संचालनको क्रममा बुर्जुवाहरूमध्ये उदारवादीहरूले केही सामाजिक सुधारहरूको वकालत गर्दछन् र सामाजिक जनवादी राजनीति अख्तियार गर्दछन् । अर्कोतर्फ अनुदारवादी बुर्जुवाहरूले समाजको प्रत्येक गतिविधिलाई प्रतिस्पर्धामा छोडिदिन्छन् । यसप्रकारका बुर्जुवाहरूले स्वावलम्वी, राज्य नियन्त्रित अर्थतन्त्रको विरोध गर्नुको साथै बजारमुखी अर्थतन्त्रको वकालत गर्दछन् । सामन्ती व्यवस्थाका विरोधी हुनुपर्ने बुर्जुवाहरू अहिले आएर साम्राज्यवादी दलालीकरणको क्रममा सामन्तवादलाई पनि टेवा दिने गर्दछन् । वर्गीय लडाईमा सर्वहाराले एक शत्रु साँधेको यस वर्ग मजदूर हक, हित र विकासमा सँधै सशंकित रहन्छ ।

## बहुदलीय व्यवस्था (Multiparty System)

बहुदलीय व्यवस्था भन्नाले त्यस्तो व्यवस्था बुझिन्छ । कुन व्यवस्थामा दुई भन्दा बढी दलहरू हुन्छन् । वहुदलीय व्यवस्थामा एउटै दलले मात्र बहुमत ल्याई सरकार गठन गर्न नसक्ने पनि हुन सक्दछ । एउटै मात्र दलले बहुमत ल्याउन नसके अर्को दलको सहयोग लिई सरकार गठन गर्दछ । यसको उदाहरण फ्रान्स हो जहाँ धेरै दलहरू छन् । सन् १८७० देखि १९३४ सम्म फ्रान्समा ८८ पटक मन्त्रिमण्डलको गठन गरिएको थियो । बहुदलीय व्यवस्थाले दुई दलीय व्यवस्थाका दोषहरू निर्मूल पार्दछ । बेलायतको शासन व्यवस्थाको दोषको मुख्य कारण दुई दलीय व्यवस्था हो भनिन्छ ।

सामन्यतया: बहुदलीय व्यवस्था पनि स्थिर र अस्थिर बहुदलीय व्यवस्थामा

विभाजन गरिएका हुन्छन् । स्थिर बहुदलीय व्यवस्था त्यस्तो व्यवस्थालाई भनिन्छ जहाँ अनेकौं दलहरू शक्तिको लागि संघर्ष गर्दछ । तर आपसी संघर्षले गर्दा राजनैतिक व्यवस्थालाई अस्थिर कहिल्यै बनाउँदैनन् । उदाहरणको लागि स्वीटजरल्याण्डलाई लिइन्छ जहाँ सोसियल डेमोक्रेटिक, र्‍याडिकल, डेमोक्र्याटक, साम्यवादी आदि दलहरू छन् र सबै शक्तिको लागि संघर्ष गर्दछन् तर व्यवस्थामा कुनै बाधा पार्दैनन् । तर यसको विपरित अवस्था फ्रान्समा पाइन्छ । जहाँ साम्यवादी लिवरल रिपब्लीकन्स आदि दलहरू यस्तो प्रकारको संघर्ष गर्दछन् कि कहिलेकहीं त राजनैतिक व्यवस्था नै खत्तम होला भन्ने डर हुन्छ । त्यसैले फ्रान्स बहुदलीय व्यवस्थाको उदाहरण हो ।

## व्यवस्थापिका (Legislature)

देशलाई आवश्यक पर्ने ऐन र कानूनहरू बनाउने, समयानुसार त्यसमा थपघट, संशोधन गर्ने तथा खारेज गर्ने आदि काम व्यवस्थापिकाको हो । नेपालमा व्यवस्थापिका भन्नाले २०४७ सालको संविधान अनुसार संसदलाई जनाउँछ । संसद भन्नाले श्री ५, प्रतिनिधि र राष्ट्रिय सभालाई जनाउँछ । यस व्यवस्थापिकाबाट पारित भएका विधेयकहरू ऐन तथा कानुन बन्दछन् ।

## ब्याम्बू कर्टेन (Bamboo Curtain)

एउटा राष्ट्रको जनताले अर्को राष्ट्रका जनतासँग सम्पर्क गर्न नसक्ने अवस्थालाई ब्याम्बु कर्टेन भनिन्छ । सन् १९९० को दशकसम्म चीनको राजनीति अवस्थालाई संसारका धेरै राष्ट्रहरूले यो राजनीतिक शब्दको प्रयोग गर्दथे । त्यसताका चीनको आर्थिक व्यवस्था र राजनैतिक व्यवस्थाबारे अन्य राष्ट्रहरूलाई जानकारी दिइँदैन्थ्यो ।

## ब्राम्हणवाद

कुनै पनि व्यक्ति, जाति वा समुदायले अर्को व्यक्ति, जाति वा समुदायलाई कज्याउन, दबाउन वा आफूलाई सर्वश्रेष्ठ भनाउन जे जस्तो प्रकृया अवलम्वन गर्दा सफल हुन सक्छ त्यही गरिने वा व्यवहारमा ल्याउने पक्ष नै ब्राम्हणवाद हो ।

वर्तमान नेपालको सन्दर्भमा मानव जातिलाई जातीय आधारबाट 'उच' 'निच' जस्ता असन्तुलित वा अवैज्ञानिक ढङ्गले विभेद गरिने घृणित कार्य ब्राम्हणवाद हो । व्यक्तिको नैशर्गिक अधिकार तथा स्वतन्त्रता नै अवरूद्ध हुने वा प्रगतिलाई छेकाबट गर्ने विभिन्न खालका पुरातन परम्पराका मनगढन्ते पुस्तकका आधारबाट श्रृजित मुख्य शोषणको कारकतत्व वा उत्पीडित पक्षले भोग्न परेको बाध्यता अथवा भाग्यवादको अर्को ब्राम्हणवाद हो ।

कुनै पनि व्यक्ति, जाति वा समुदायका मानिसले आफ्नो प्रभुत्व कायम गर्न इश्वर, धर्म, संस्कृति वा चतुर्‍याईको आधारबाट आफूलाई अरू भन्दा श्रेष्ठ वा श्रेष्ठमध्येको पहिलो ठान्नु र त्यसको पृष्टभूमि तयार गरी अरूलाई निच बनाई शासनसत्ता कब्जा गर्नु वा समाजमा आफूलाई जेष्ठता घोषित गर्नु आदि ब्राम्हणवाद हो ।

आफ्नो प्रभुत्वलाई अकण्टक बनाउन गरिने जुनसुकै कार्य जसबाट सिङ्गो राष्ट्रका समुदायहरू राष्ट्रिय जीवनको सतही फाँटमा सतत बग्न नपाउनु र आफ्नो एकल

प्रवाहलाई राष्ट्रको मूल प्रवाह ठान्नु जस्ता अतिवादी सोच या त्यसलाई पुष्टि दिने कुनै पनि विचार, सिद्धान्त जसबाट अन्य व्यक्ति, जाति वा समुदाय शोषण, उत्पीडन वा शोषित हुन्छन् त्यस्तो एकाधिकारवादी सोच, विचार या सिद्धान्त समग्रमा ब्राम्हणवाद हो । ब्राम्हण भन्नाले कुनै एक जातीय विशेष वा समुदायको पर्याय भने होइन ।

## ब्राम्हणवादको आधारभूत सिद्धान्त

सामन्ती युगीन अवस्थामा राज्य शासन संचालन गर्न र आफ्नो साम्राज्य टिकाई राख्न निम्न आधारभूत सिद्धान्तको रचना गरेको थियो । ती निम्न प्रकार छन् ।

(क) आध्यात्मिक दर्शनको संरचना

(ख) वर्णाश्रम सामाजिक व्यवस्थाको संरचना

(ग) लिखित वेद, उपनिषद र स्मृति पत्रको रचना

(घ) पुरूष प्रधान समाजको स्थापना

## बोल्शेभिक र मेन्सेभिक (Bolsevic & Mensevic)

रूसी भाषामा 'बोल्शेकि' को अर्थ बहुमत र 'मेन्सेभिक' को अर्थ अल्पमतको हो । रूसमा मजदूरवर्गको 'रूसी सामाजिक जनवादी पार्टी' स्थापना भएको थियो । यस पार्टीको नेतृत्व प्लेखानोव र लेनिनले गरेका थिए । १९०३ मा दोस्रो पार्टी महाधिवेशन भयो । यसै समयमा पार्टीमा सृजना भयो । दुई समूह भए । एक समूह बहुमत थिए । बहुमतको नेतृत्व लेनिनले गरे भने अल्पमतको नेतृत्व मार्तोतले । लेनिनको पक्षमा पार्टीको धेरैजसो सदस्यहरू थिए । दुवै समूहले पार्टीको नाम एउटै राखे तर जनताहरूले थाहा पाउन पार्टीको नाम पछाडि बोल्शेभिक र मेन्सेभिक राख्न थालियो ।

## ब्लाकीवाद (Blankism)

ब्लाँकीको नामबाट ब्लाँकीवाद भनिएको हो । फ्रान्सका समाजवादी नेता लुई अगस्त ब्लाँकीको विचारधारालाई ब्लाँकीवाद भनिन्छ । पेरिस कम्युन क्रान्तिमा ब्लाँकी ठूलो प्रभुत्व थियो । यिनलाई पनि वर्ग संघर्षमा विश्वास थिएन । केही वुद्धिजीवीहरूको षडयन्त्रबाट नै क्रान्ति गर्नु पर्छ भन्ने ब्लाँकीवाद हो ।

## भूपरिवेष्ठित मुलुक (Landlock Country)

सामुद्रीक किनार नभएको राज्यलाई भूपरिवेष्ठित मुलुक भनिन्छ । चारैतिर पानी (समुद्र) ले घेरिएको मुलुकलाई टापू भने जस्तै, चारैतिर भूमिले घेरिएको मुलुकलाई भूपरिवेष्ठित मुलुक भनिन्छ । विश्वमा ३१ भूपरिवेष्ठित मुलुक छन् ।

## मई दिवस (May Day)

विश्वमा पहिलो मई दिवस १८९० को मई १ तारिखको दिन मनाइएको थियो । १८८९ मा दोस्रो अन्तर्राष्ट्रियको स्थापनापछि मजदूरवर्गको एक साझा चाड मनाउने निर्णय भयो । १८८६ देखि अमेरिकाका मजदूरवर्गले एक दिनलाई तीन भागमा विभाजन गरी

संघर्षको शुरूआत गरे । (१) पहिलो भागको आठ घण्टा मेहनत गरी काम गर्ने (२) दोस्रो भागको आठ घण्टा आराम गर्ने वा सुत्ने (३) तेस्रो भागको आठ घण्टा मनोरञ्जन, भेटघाट गर्ने । कतिपय वीर मजदूरहरूको बलिदानपछि यो मजदूर संघर्ष भयो । यसको पहिलो फल अमेरिकाका ५० हजार मजदूरहरूले चाखे । यी मजदूर आन्दोलनको सम्झना मई दिवस मनाउन थालियो । संसारभर मई दिवस मनाइन्छ र मजदूरहरूलाई छुट्टी दिइन्छ ।

## महान् अक्टोबर समाजवादी क्रान्ति (The Great October Socialist Revolution)

१९१७ को फरवरीमा रूसमा पूँजीवादी प्रजातान्त्रिक क्रान्ति भयो । जसले जारशाहीलाई सत्तावाट हटाइयो र एक अस्थायी सरकार गठन भयो । यो सरकारका अन्तिम दिनतिर 'करेन्सकी' भन्ने समाजवादी क्रान्तिकारी सरकार प्रमुख थियो । उसको सरकारमा मेन्सेभिकहरू पनि सामेल थिए । त्यसबेला प्रथम विश्वयुद्ध चलिरहेको थियो । रूसी सेना र जनता यो युद्ध रोकी शान्ति चाहन्थे । तर अस्थायी सरकारले यसो गर्न चाहेन । प्रशस्तै असन्तोष बढ्दै गयो र १९१७ अक्टोबर २५ मा अस्थायी सरकारलाई अपदस्थ गरेर नयाँ समाजवादी सरकार गठन भयो । यसैलाई अक्टोबर समाजवादी क्रान्ति भनिन्छ । महान् अक्टोबर समाजवादी क्रान्तिको नेता भि.आई. लेनिन हुनुहुन्थ्यो ।

## मध्यावधि चुनाव (Mid-Term-Poll)

निश्चित समय अगाडि नै संसद भङ्ग गरी आम चुनाव गराइने कार्यलाई मध्यावधि चुनाव भनिन्छ । सरकारले बहुमत गुमाएमा वा अन्य विशेष कारणले पनि मध्यावधि चुनाव हुनसक्छ ।

## मानव सभ्यताको ऐतिहासिक विकास र पतनको चरण

मानव सभ्यताका विकास सम्बन्धी विभिन्न अनुसन्धान र शोधकार्यहरू हालसम्म चलिरहेका छन् तसर्थ मानव सभ्यताको ऐतिहासिक विकास र पतनबारे प्राप्त हुन आएका तथ्यको आधारमा तालिका–



## माओत्सेतुङ विचारधारा (Maotsetung Thought)

चीनका माओत्सेतुङको विचारलाई माओत्सेतुङ्ग विचारधारा भनिन्छ । विश्व सर्वहारावर्गको नेता कार्लमार्क्स, फ्रेडरिक एङ्गेल्स, लेनिन र स्टालिनले औद्योगिक मुलुकहरूलाई मध्यनजर राखेर मार्क्सवादी दर्शनको चिन्तन गर्नु भएको थियो । यसले गर्दा अविकसित एवं कृषि प्रधान मुलुकहरूले नयाँ किसिमले सोच्न जरूरी भएको थियो । यसको परिपूर्ति माओत्सेतुङले नयाँ जनवादी सिद्धान्तको प्रतिपादन गर्नु भयो । यसै सिद्धान्तलाई माओत्सेतुङ्ग विचारधार भनिन्छ । चीनले माओत्सेतुङ्ग विचारधारा अङ्गालेर नै प्रशस्त विकास गरेका पाउँदछौं । चिनियाँ कम्युनिष्ट पार्टीको सामूहिक विचारधारा र मार्गनिर्देशक सिद्धान्त भनी निर्णय गरेको थियो । माओत्सेतुङ्ग विचाराधाराको निम्न मौलिक तत्वहरू थिए– (क) नयाँ जनवादी क्रान्तिको सिद्धान्त, (ख) सर्वहारा सांस्कृतिक क्रान्तिको सिद्धान्त (ग) अन्तरविरोध बारे (घ) संयुक्त मोर्चा बारे (ङ) सेना निर्माण र सैनिक रणनीतिका बारे (च) जनयुद्ध र जनसमुदाय माथिको विश्वास (छ) क्रान्तिको साधन बारे (ज) लगातार क्रान्तिको बारे ।

## मार्क्सवाद (Marxism) :

कार्लमार्क्स र फेड्रिक एन्जेल्सले सन् १८४८ मा तयार पारेको पुस्तिका कम्युनिष्ट पार्टीको घोषणापत्र (Menifesto of the Communist Party) मा उल्लेख भएको सम्पूर्ण निचोड नै मार्क्सवाद हो । आधुनिक साम्यवादको गीता मानिने त्यो पुस्तिकालाई साम्यवादी दर्शनको मूल श्रोत मानिन्छ । एन्जेल्सको पनि त्यति नै पसिना र विचारको प्रतिविम्ब रहेको साम्यवादी दर्शनलाई मार्क्स-एन्जेल्सवाद नभनी मार्क्सवाद मात्र भनिन्छ, जसलाई एन्जेल्स स्वयंले सहर्ष स्वीकार गरेका छन् ।

कम्युनिष्ट पार्टीको घोषणापत्र वास्तवमा अन्तर्राष्ट्रिय रूपमा छरिएका सम्पूर्ण साम्यवादीहरूलाई एकै सूत्रमा एकताबद्ध गर्न तयार पारिएको थियो । यो पुस्तिकाको पहिलो अंशबाट नै मार्क्सवादको इतिहास सम्बन्धी आर्थिक सिद्धान्तको बारेमा प्रभावकारी व्याख्या गरिएको छ । जसमा पूँजीवादभित्र विद्यमान रहने उत्पादन प्रणालीको वर्णन गरी कसरी वर्गहरूको उत्पत्ति हुनेछ र यसको विनास हुनेछ भन्ने मार्क्सवादको अवधारणाहरूलाई सरल भाषामा व्यक्त गरिएको यो पुस्तक नै सम्पूर्ण मार्क्सवाद हो । मार्क्सवादभित्र वर्ग संघर्षलाई समाज परिवर्तनका लागि अपरिहार्य तत्व स्वीकारेको यो घोषणा पत्रले सर्वहारा वर्गलाई वर्ग युद्धका लागि अपील गरेको देखिन्छ ।

साम्यवादी दर्शनभित्र रहेको राजनैतिक सिद्धान्तहरू जस्तै द्वन्दात्मक भौतिकवाद, इहिासको आर्थिक व्याख्या, वर्ग संघर्ष, सम्पूर्ण व्यक्तिगत सम्पत्तिहरूको सरकारीकरण, सर्वहारा वर्गको अधिनायकत्व, आधारशीलालाई नै मार्क्सवाद (Mafxism) भनिन्छ । मार्क्स र एन्जेल्सले प्रतिपादन गरेको आधुनिक साम्यवादी सिद्धान्त नै समग्र रूपमा मार्क्सवाद हो ।

## मार्क्सवादको तीन स्रोत एवं तीन संघटक अङ्ग (Three Sources & Three Component of Marxism)

मार्क्सवादी सिद्धान्त सर्वशक्ति सम्पन्न छ, किनभने यो सत्य छ । यो सम्पूर्ण र

सुसंगत छ । यसले मानिसहरूलाई सम्बद्ध विचारधारा प्रदान गरेको छ । कुनै पनि अन्धविश्वास, कुनै पनि प्रतिक्रियावाद तथा कुनै पनि पूँजिवादी उत्पीडनको यो घोर विरोधी छ । यो विचारधारा जर्मन दर्शनशास्त्र, बेलायती अर्थशास्त्र र फ्रान्सेली समाजवादको रूपमा उन्नाइसौं शताब्दीमा मानव जातिले आर्जन गरेको उत्कृष्ट ज्ञानको वैधानिक उत्तराधिकारी हो । मार्क्स र एङ्गेल्सले जर्मनीबाट मार्क्सवादी दर्शन, फ्रान्सबाट राजनैतिक सिद्धान्त र बेलायतबाट आर्थिक सिद्धान्तको विकास गर्नमा प्रमुख शिक्षा लिनुभयो । यही तीनपक्ष राजनीति दर्शन र अर्थशास्त्रको समन्वय नै मार्क्सवादको तीन स्रोत र यसलाई मिलाउने तीन संघटक अङ्ग हुन् ।

## मार्क्सवाद-लेनिनवाद (Maxism-Leninism) :

यो शब्दावली सोभियत रूसमा लेनिनको मृत्यु पश्चात् तत्कालीन शासक स्टालिनले आफूले रूसी क्रातिको आदर्श समाएको दावीका साथ निस्केको हो । छोटकरीमा भन्ने हो भने मार्क्स-एन्जेल्स र लेनिनले दिएका साम्यवादप्रतिको समग्र विचारहरूलाई मार्क्सवाद-लेनिनवाद (मा.ले.) भनिएको हो । वर्ग संघर्षको अभियानमा पूँजीवादको विनाश अनिवार्य, केन्द्रीकृत अर्थतन्त्र जस्ता मार्क्सका आदर्शहरू, कम्युनिष्ट पार्टी एक रक्षक दल धारणा र पार्टी संरचनामा केन्द्रीकृत प्रजातन्त्र जस्ता व्यवहारवादी लेनिनका भनाइहरू नै मार्क्सवाद-लेनिनवादको मुख्य आधारसिलाहरू हुन् । धेरै देशका साम्यवादी दलहरूले आफूलाई मार्क्सवादी-लेनिनवादी भन्न रूचाउँछन् । आधुनिक साम्यवादी अवधारणाहरूमा मार्क्स-लेनिनवादको आदर्शहरूलाई वास्तविक साम्यवादी विचारधारा ठानिन्छ ।

## माओवाद (Maoism) :

सामयवादी विश्वमा एउटा अति क्रान्तिकारी र संघर्षशील चिनिया साम्यवादी नेताको पनि नाम अग्रपंक्तिमा आउँछ, जसले चीनमा मार्क्सवादलाई सैद्धान्तिक तथा व्यवहारिक रूपमा प्रतिस्थापन गऱ्यो । चीनका लेनिन भनिने यी साम्यवादी नेताको नाम हो- माओत्सेतुङ्ग (Mao Tse Tung or Zedong) । जसलाई छोटकरीमा माओ भनिन्छ । यी क्रान्तिकारी नेताको जन्म सन् १८९३ मा भएको थियो भने मृत्यु सन् १९७५ मा । चीनमा साम्यवादको स्थापना पश्चात् सन् १९४९ देखि २६ वर्ष (सन् १९७५) सम्म अनवरत रूपमा एक मात्र नेता बनेको माओ-त्से-तुङ्गलाई एक कुशल सैनिक नेता पनि मानिन्छ । पहिले आफू सैनिक पृष्ठभूमिबाट आएको हुनाले चिनिया सैनिक सुदृढीकरणमा उनको देन साह्रै ठूलो रह्यो । चिनिया सैनिकलाई आधुनिकीकरण गरी एशियाको मात्र नभई विश्वको एक सैनिक राष्ट्र बन्न पुगेको चीनको आफ्नै स्वजन हत्याको हृदयविदारक इतिहास छ । तैपनि विश्व तथा एशियाको साम्यवादी सटीक उदाहरणको रूपमा रहेको चिनिया माओवाद अब क्रमशः विलीन हुँदै गए तापनि इतिहासमा यसको आफ्नो विशेषता रहने नै छ ।

माओ-त्से-तुङ्गले साम्यवादी साहित्य तथा अन्य विशिष्ट विचारधाराहरू दिएका छन् जसको स्थान साम्यवादी दर्शनमा महत्वपूर्ण मानिन्छ । मार्क्सवादलाई उनले दिएका योगदानहरू निम्न अनुसार छन् :-

- कार्लमार्क्सका विपरीत साम्यवाद स्थापनामा मजदूरहरूको भन्दा किसानहरूको महत्वपूर्ण भूमिकालाई स्वीकार्नु ।
- जनता तथा कार्यकर्ताहरूमा राजनैतिक प्रतिबद्धता हुनुपर्नेमा जोड ।
- सिद्धान्तलाई भन्दा प्रयोगमा जोड (The Priority of Practice) ।
- कार्यमा केही गल्ती हुन सक्छ भन्ने धारणा (Necessity of Error) ।
- द्वन्दवादको पुनर्व्याख्या ।
- राजनीतिमा प्राथमिकता (Priority in Politics) ।
- समुदायमा जोड (Emphasis on Commune system) ।
- रूसी घरेलु तथा कृषि योजनाहरूको व्यापक आलोचना ।
- साँस्कृतिक क्रान्तिका पक्षधर ।

## मातृसत्तात्मक समाज (Matriarchal Society)

मातृसतात्मक समाजमा परिवारको प्रमुख अथवा मुख्य व्यक्ति स्वास्नी नै हुन्थे । आमावाट नै वंशको शुरूआत भएको मानिन्थ्यो । यस समाजमा स्वास्नी मानिसको भूमिका ज्यादै महत्वपूर्ण मानिन्थ्यो । सम्पूर्ण श्री सम्पत्ति स्वास्नी मानिसको अधिनमा रहन्थ्यो । लोग्ने मानिसहरू शिकार खेल्न जान्थे अथवा कन्दमूल खोज्न जान्थे ।

## मानव अधिकार (Human Right)

मानवले विश्व मानव समुदायमा बाँच्नका लागि आफ्नो मौलिक या नैशर्गिक अधिकार स्वतन्त्र उपभोग गर्न पाउने अधिकारलाई मानवअधिकार अन्तर्गत परिभाषित गरिएको छ । प्रत्येक व्यक्तिको समाज र राष्ट्रप्रति केही न केही कर्तव्य हुन्छ र त्यसलाई समाजमा बसेर मात्र व्यक्तिको स्वतन्त्रता र पूर्ण विकास सम्भव हुन्छ । आफ्नो अधिकार र स्वतन्त्रताको उपयोग गर्न अर्काको स्वतन्त्रता र अधिकारमाथि अहस्तक्षेप गरिनु मानव अधिकार हो ।

सन् १९४८ डिसम्बर १० मा संयुक्त राष्ट्र संघको साधारण सभाले मानव अधिकारहरूको विश्वव्यापी घोषणा स्वीकार गरी ऐतिहासिक रूपमा धारा १ देखि ३० सम्म जारी गरेको छ ।

मानव अधिकार वहालीका निम्ति विश्वमा धेरै संघ वा संगठनहरू कृयाशिल भएका छन् । राजनीतिक पार्टीहारू पनि आफूलाई मानव अधिकार भएको दावी गर्दछन् तर समग्रमा मानव अधिकारको अपव्याख्या गरी मानव अधिकारलाई धेरै सरकारहरूले पनि कुठाराघात गरेका छन् ।

संयुक्त राष्ट्रसंघको मानव अधिकारको विश्वव्यापी घोषणापत्र र इम्नेष्टी इन्टरनेशनलको कार्यपत्र तथा जनवादी गणतन्त्र चीनको मानव अधिकार सम्बन्धी कार्यपत्रलाई अध्ययन गर्दा मानव अधिकार सम्बन्धी दुईवटा निचोड निकाल्न सकिन्छ ।

(क) निरपेक्ष मानव अधिकार र

(ख) सापेक्ष मानव अधिकार ।

(क) निरपेक्ष मानव अधिकार भन्नाले एउटा निर्धो व्यक्तिलाई अर्को बलियो

व्यक्तिले दवाउँछ र दवाउनुलाई बलियो व्यक्तिले आफ्नो मानव अधिकार ठान्दछ के यो मानव अधिकार हो ? तसर्थ "जसको लठ्ठी उसैको भैंसी" भन्नु निरपेक्ष मानव अधिकार हो ।

(ख) सापेक्ष मानव अधिकार भनेको निर्धो व्यक्तिलाई पनि बलियोको विरोध गरी बाँच्न पाउनु अर्थात निर्धो वा बलियो नछुट्याई बलियोलाई निर्धोकै कोटीमा राख्नु मानव अधिकार हो ।

सापेक्ष मानवअधिकार त्यो वस्तुस्थितिसँग अन्तरसम्बन्धित हुन्छ र त्यसलाई विवेचना गर्न सक्नु पर्दछ । मानव अधिकारबारे धेरै प्रतिवेदनहरू विश्वमा आइरहेका छन् ।

## मिलिजुली सरकार (Coaliation Government)

कुनै राजनीतिक दलले मात्र सरकार नबनाई विभिन्न राजनैतिक दल मिलेर सरकार बनाउने कार्य वा त्यस्तो सरकारलाई मिलिजुली सरकार भनिन्छ । एउटा राजनीतिक दलले मात्र संसदमा स्पष्ट बहुमत प्राप्त गर्न नसकेको अवस्थामा र राष्ट्रिय संकटको अवस्थामा प्रायः मिलिजुली सरकार गठन गरिन्छ ।

## यान्त्रिक भौतिकवाद (Mechanical Materalism)

कलकारखाना, मेशिनको चाल जस्तै छिटो समाजको पनि विकास हुन्छ भन्ने पुरानो भौतिकवादी धारणालाई 'यान्त्रिक भौतिकवाद' भनिन्छ । द्वन्द्वात्मक भौतिकवादको विकास हुनुभन्दा पहिला पूँजिवादी नास्तिकहरूले यान्त्रिक भौतिकवादलाई मान्यता दिएका थिए ।

## यहुदीवाद (Zionism)

यहुदीहरूले आफ्नो हक, अधिकार र जातीय रक्षाको लागि सङ्गठित रूपमा चलाएको अभियानलाई यहुदीवाद भनिन्छ ।

## योङ्ग टर्कस (Young Turks)

कुनै राजनीतिक दल वा सङ्गठन भित्र पुराना नेता, पुराना विचार र पुराना कार्यशैलीप्रति असन्तुष्टि देखाई विद्रोह गर्ने युवाहरूको समूहलाई (Young Turks) भनिन्छ ।

## योजना (Planning)

देशको विकास गर्ने उद्देश्यले वैज्ञानिक र क्रमबद्ध तरिकाले तयार गरिएको आर्थिक कार्यक्रमलाई योजना भन्दछौं । यही योजनालाई आर्थिक योजना अथवा विकास योजना पनि भन्दछौं । प्रायः योजनाहरू एक वर्ष भन्दा लामो अवधिका हुने गर्दछन् । योजनाको निर्माण गर्दा यसका उद्देश्यहरू, नीतिहरू, प्रथमिकताहरू, खर्चको क्षेत्र र तरिका आम्दानीका स्रोतहरू, कार्यक्रम, कार्यान्वयन पक्ष, मूल्याङ्कन पद्धति जस्ता कुराहरू निर्धारण गरिएका हुन्छन् । आर्थिक योजनाको थालनी समाजवादी देशहरूबाट भएको हो ।

## राजतन्त्र (Monarchy)

राजतन्त्र शासनको त्यस स्वरूपलाई भनिन्छ, जसमा सर्वोच्च शक्ति एउटा व्यक्तिमा निहित हुन्छ र त्यस व्यक्तिको पद अथवा अधिकार पैतृक हुन्छ । तर प्राचीन कालमा राजाहरूको निर्वाचन हुने पनि गर्दथ्यो । हाल निर्वाचित राजा कहीं छैनन् । निरंकुश राजतन्त्र र सीमित राजतन्त्र दुई प्रकारका राजतन्त्र पाइन्छन् ।

## राजनीतिक अर्थशास्त्र (Political Economics)

राजनीतिक अर्थशास्त्र मानव समाजको विकासका विभिन्न चरणमा भौतिक सरसामानहरूको उत्पादन, वितरण, विनिमय र उपभोगको क्रममा मानिसहरू बीचका आर्थिक सम्बन्धहरूको विज्ञान हो । रानजीतिक अर्थशास्त्रका आफ्नै विशिष्ट अवधारणाहरू र आर्थिक नियमहरू छन् । मार्क्सवादी-लेनिनवादी राजनीतिक अर्थशास्त्रको चरित्र वर्गीय छ । यसले जनसमूहहरू, मजदूर, किसान तथा श्रममा संलग्न जनताका अन्य हिस्साहरूको दृष्टिकोणबाट जनताहरूबीचका आर्थिक सम्बन्धको विकासलाई निर्देशित गर्ने वस्तुगत नियमहरूको अध्ययन गर्दछ । स्वामित्व, ज्याला र मुनाफाका प्रश्नहरूको अध्ययन गर्दा यो विज्ञानले जनताका आधारभूत आर्थिक तथा राजनैतिक हितहरूको लेखाजोखा पनि गर्दछ ।

## राजनीति शास्त्र (Politcal Science)

"राजनीति शास्त्रले परापूर्वकालमा राज्यको रूपरेखा कस्तो थियो, त्यसबेला यसको स्वरूपत कस्तो थियो र यसको आदर्श एवं रूप कस्तो हुनुपर्दछ भन्ने विवेचना गर्दछ ।"

– गेटेल

"राजनीति शास्त्र सामाजिक विज्ञानको त्यो अभिन्न अङ्ग हो, जसले राज्यको मूल आधारको विवेचना शासन सिद्धान्तको आधारमा गर्दछ ।"

– जेनेट

"राजनीति शब्दको अभिप्राय अचेल सरकारको त्यो वर्तमान समस्यासँग सम्बन्धित हुन्छ, जो वैज्ञानिक दृष्टिले राजनैतिक ढङ्गको हुनुको अपेक्षा आर्थिक ढङ्गको भएको पाइन्छ ।"

– गिलक्राईष्ट

"राजनीति शास्त्र विज्ञानको त्यो अङ्ग हो, जसको सम्बन्ध राज्यसँग हुन्छ, जसले राज्यमा मौलिक शर्तहरूको विवेचना गर्दछ, यसको नितान्त आवश्यक स्वरूपको चर्चा गर्दछ, यसले कुन पद्धति अपनाएमा यसको वास्तविक स्वरूप व्यक्त गर्न सकिन्छ र यसको विकास कसरी गर्ने हो भन्ने तथ्यमा विश्लेषण गर्ने कार्य गर्दछ ।

– ब्लन्टश्ली

## रसायनिक युद्ध (Chemical War)

लडाईं झडपमा शत्रु पक्षलाई शरीरिक रूपले हानी नोक्सानी पुऱ्याउन वा उनीहरूको खाद्य भण्डार नष्ट गर्न विभिन्न किसिमको रसायनहरूको प्रयोग गरी गरिने

युद्धलाई रसायनिक युद्ध भनिन्छ । यस रासायनिक युद्धमा विभिन्न क्रियालाई अवरूद्ध पारी अचेत बनाई वा नबनाई मानिसलाई सजिलैसँग मारिदिन्छ । यस प्रकारको ग्याँसले सामान्यता सम्पत्तिलाई हानी नोक्सानी पुर्‍याउँदैन ।

## राजनैतिक पार्टी (Political Parties)

राजनैतिक पार्टी बारे विभिन्न लेखक तथा विद्वानहरूले विभिन्न परिभाषा गरेको छन् जसअनुसार :–

गेटेलको परिभाषा यस प्रकारको छ– "राजनैतिक दल केही मानिसको यस्तो संगठन हो, जसले एउटै किसिमको विचार लिन्छ तथा जो आफ्ना अनुयायीको मतको बलमा सरकारको मेशिनमा आफ्नो कब्जा गरेर त्यो कार्यक्रम र नीतिलाई कार्यान्वयन गर्न चाहन्छ, जसमा उनीहरूको विश्वास छ ।"

मेकाईवरले राजनैतिक दलको परिभाषा यसरी प्रस्तुत गरेका छन्– "राजनैतिक दल त्यो समुदाय हो जसको संगठन कुनै नीति वा सिद्धान्तको समर्थनका लागि संगठित गरिएको हुन्छ र जसले संवैधानिक उपायहरूद्वारा ती सिद्धान्त वा नीतिहरूलाई शासनको आधार बनाउने प्रयत्नमा संलग्न रहन्छ ।"

गिल्काइस्टको परिभाषा अनुसार– "राजनैतिक पार्टी नागरिकहरूको त्यस संगठित समुदायलाई भनिन्छ । जसका सदस्य समान राजनैतिक विचार राख्दछन् र एउटा राजनैतिक इकाईका रूपमा कार्य गर्दै शासनलाई आफ्नो हातमा लिने प्रयत्न गर्दछन् ।"

एडमण्ड वर्कको परिभाषा यसप्रकार छ– "राजनीतिक दल केही व्यक्तिहरूको एउटा समूह हो जो कुनै सिद्धान्त उपर एकमत भई आफ्नो सामूहिक प्रयत्नहरूद्वारा जनताको हितका लागि काम गर्न चाहन्छन् ।"

राजनैतिक दलका सम्बन्धमा माथिका परिभाषाहरू आ-आफ्ना स्थानमा ठीक छन् । एउटा कुरा सत्य हो कि राजनैतिक जीवनसँग सम्बन्धित सबै प्रश्नहरू उपर सम्पूर्ण जनता एकमत हुन सम्भव छैन । अतः एवं प्रत्येक प्रजातान्त्रिक देशमा अनेकौं राजनैतिक संघ पाइन्छ । प्रत्येक राजनैतिक दल मानव स्वभावका दुई आधारभूत प्रवृत्तिहरू उपर आधारित छन् । पहिलो कुरा के हो भने प्रत्येक व्यक्तिको आफ्नै धारणा हुन्छ । दोस्रो कुरा ती धारणाहरूलाई संगठित रूपले अभिव्यक्ति गर्नका लागि तथा धारणा अनुरूपको शासन व्यवस्थालाई समर्थन गर्ने उद्देश्यले मनुष्य समान विचारधारा भएका व्यक्तिहरूसँग मिल्छ । यसप्रकारले राजनैतिक दलको उदय हुन्छ । कुनै पनि समुदायलाई राजनैतिक दलको संज्ञा दिनको लागि निम्न लिखित चार तत्वको आवश्यकता हुन्छ :–

(क) मानिसहरूको संगठन
(ख) कुनै राजनैतिक उद्देश्य
(ग) जनताको बहुमत प्राप्त गर्ने इच्छा
(घ) राजनैतिक अथवा आर्थिक लक्ष्य प्राप्त गर्ने अधिकार ।

## राजनैतिक व्यवस्था (Political System)

"सुक्ष्म विश्लेषण अनुसार राजनैतिक व्यवस्था भनेको एक त्यो विश्लेषणात्मक कार्यक्रम हो जसले राजनीतिको परीक्षा गर्ने विशिष्ट परिवेश प्रदान गर्दछ ।" यस परिभाषाबाट प्रणाली विश्लेषण नबुझ्नु पर्ने किनभने प्रणाली विश्लेषण भन्नाले निर्णयकर्तालाई कार्यको अर्को उपायको रूपमा निर्णय सम्बन्धी खोजको पद्धति प्रदान गर्छ । विस्तृत विश्लेषण अनुसार इस्टनको राजनैतिक मूल्यको आधिकारिक विवरण, ल्यासवेल र कापलनको संदिग्ध व्यक्ति वातावरण र राजनैतिक व्यवहारको विवेचना, Dahl को शक्ति, शासन र अधिकारको बीच तादात्म्य, आदि राजनैतिक व्यवस्थाका परिभाषाहरू छन् । Political System is a living System) पनि भनिन्छ ।

सामान्य दृष्टिकोणमा सुक्ष्म र विस्तृत विश्लेषण अनुसार राजनैतिक व्यवस्था भनेको त्यो माध्यम हो जसले मानिसले स्वयम् आफ्नै निमित्त रचेको राजनैतिक अनुशासनलाई नियन्त्रित र प्रशारित गर्दछ र वैचारिक दृष्टिकोणबाट राजनैतिक व्यवस्था भनेको विभिन्न अर्थ लिने हो तर यहाँ यो एक अर्काको हुन गएका छ । अन्यथा राजनीतिक विज्ञानलाई "राजनैतिक व्यवहार" को अध्ययन, परीक्षण गर्न साह्रै पर्ला अन्त: राजनैतिक प्रकृया यस अन्तरगत आउँछ ।

## राजनैतिक संस्कृति (Political Culture)

राजनैतिक संस्कृति भन्नाले कुनै पनि व्यक्तिको राजनीति सम्बन्धी राखेको ज्ञानलाई जनाउँछ, खुलस्त रूपमा भन्ने हो भने उसको राजनीति प्रतिभावना, विचार, आस्था र ऊ राजनीतिसँग परिचित कस्तो किसिमको छ । यदि ऊ राजनीतिसँग परिचित भएको खण्डमा त्यसलाई राजनैतिक संस्कृति भनिन्छ । राजनैतिक संस्कृतिमा राजनैतिक व्यवस्थामा परेकाहरूमध्येबाट हुन्छ । किनभने राजनैतिक व्यवस्था बाहिरकालाई राजनीति सम्बन्धी ज्ञान रहँदैन । राजनैतिक संस्कृति एउटा विषयगत कुरा हो जसलाई यही हो भनेर छुट्याउन सकिन्न । यसमा मुख्यतया ३ किसिमका कुरा हुन सक्छ : व्यक्तिहरूको आचरण, अभिरूची र विश्वास आदिले राजनैतिक संस्कृति परिचालन गर्छ र त्यो आचरणको मूल तीन रूप छन् : (१) संज्ञानमूलक (२) प्रभावमूलक (३) मूल्याङ्कनमूलक ।

## राजसत्ता (State Power)

एक वर्गले अर्को वर्गमाथि शासन चलाई सम्पूर्ण राजनैतिक, आर्थिक, सांस्कृतिक एवम् सैनिकयन्त्रलाई आफ्नो कब्जामा लिएर उत्पादन पद्धतिलाई समेत आफ्नो वर्गको अनुकूल बनाउनुलाई नै राज्यसत्ता भनिन्छ । यस्तै राज्यमा अधिकार गर्ने सेना, प्रहरी, अदालत र सरकार सबैको साझा रूपलाई राज्यसत्ता भनिन्छ । समाजमा वर्गहरू रहेसम्म राजसत्ता रहनेछ । वर्गको लोप हुँदै गएपछि राजसत्ताको पनि लोप हुँदै जान्छ । राजनैतिक संघर्ष राजसत्ताकै निम्ति हुन्छ ।

## राजश्व (Public Finance)

जुनसुकै सरकारले केही न केही काम गर्नुपर्छ । ती कामहरू गर्न सरकारलाई कोषको आवश्यकता हुन्छ । त्यस कोषको लागि प्रत्येक केही न केही दिनै पर्छ । करको रूपमा सरकारले करोडौं करोड रूपैयाँ पैसा जम्मा गर्छ र विभिन्न कामहरूमा खर्च गर्दछ । यसरी सरकारले कसरी आय गर्छ र कसरी व्यय गर्छ भन्ने कुराको लेखाजोखा गर्नु नै राजश्वको विषयवस्तु हो । डाल्टनको भनाई अनुसार- "राजश्वले सरकारी आयव्ययको लेखाजोखा एक अर्कामा तिनीहरूको अनुरूप हुने गरी गर्दछ ।" राजश्व सरकारको आयव्यसँग सम्बन्धित हुन्छ ।

## राज्य (State)

राज्यको परिभाषा विभिन्न लेखक तथा विद्वानहरूले विभिन्न प्रकारले प्रस्तुत गरेका छन् । केही मानिसहरू राज्यलाई शक्तिको प्रतीक मान्दछन् । केही मानिसहरूको धारणा छ कि राज्य त धनी मानिसहरूद्वारा गरीव जनताको शोषणको साधन हो । तर अन्य व्यक्तिहरू राज्यलाई जनताको भलाईको एउटा आवश्यक संगठन पनि मान्दछन् । यही कुरामा ध्यान राखी राज्यको परिभाषालाई विद्वानहरूका विभिन्न मत यहाँ प्रस्तुत गरिन्छ ।

दार्शनिक अरस्तुले भनेका छन्- "कुटुम्ब र गाउँहरूको एउटा समुदाय हो, जसको लक्ष्य पूर्ण तथा आत्मनिर्भर जीवन हो ।"

लिकाँकले भनेका छन्– "राज्य एउटा निश्चित भू-भागमा जनताद्वारा कानूनको स्थापनाका लागि संगठित समूहको नाउँ हो ।"

ब्लशलीले भनेका छन्- "राज्य कुनै भूभागमा राजनैतिक रूपले संगठित जनसमुदायको नाउँ हो ।"

वुडरो विल्सनको परिभाषा यसप्रकार छ– "कुनै निश्चित भूभागमा शान्तिमय जीवनका लागि संगठित जनतालाई राज्य भन्दछन् ।"

हलिण्डको परिभाषा अनुसार- "राज्यसत्ता धेरै मानिसहरूको समुदाय हो, जो कुनै निश्चित भुभागका स्वामी छन् र जसमा बहुसंख्यक दल वा एउटा निश्चित वर्गको मत यी व्यक्तिहरूद्वारा पनि मानियोस्, जसले त्यसको विरोध गर्दछन् ।

गार्नरको परिभाषा अनुसार- "राज्य मानिसहरूको यो बहुसंख्यक समुदाय वा संगठनको नाउँ हो जो एउटा निश्चित भूभागमा रहन्छ, जसको यस्तो संगठित सरकार छ जो बाहिरी नियन्त्रणदेखि पूर्ण स्वतन्त्र वा स्वतन्त्र प्राय: छ तथा जसको आज्ञाको पालना अधिकांश जनताले स्वभावतया गर्दछ ।

यी माथिका परिभाषाहरूमध्ये गार्नरको परिभाषालाई महत्वपूर्ण ठानिन्छ । यसको कारण हो कि गार्नरको परिभाषाले राज्यको चारै आवश्यक तत्व- भूमि, जनसंख्या, शासन र सार्वभौमसत्तालाई मान्दछ । तर अन्य व्यक्तिहरूको परिभाषामा यस प्रकारको तत्व देखापर्दैन । आजको जमानामा यी चार तत्व रहेका देशलाई नै राज्यको संज्ञा दिइन्छ ।

## राष्ट्रिय क्रान्ति (National Revolution)

अन्यायी, अत्याचारी शासनको विरूद्ध अधिकांश जनताहरूले संयुक्त मोर्चा खडा गरी गरिने क्रान्तिलाई राष्ट्रिय क्रान्ति भनिन्छ ।

## राष्ट्रियता र अन्तर्राष्ट्रियता (Nationality & Internationality)

राष्ट्रियताको भावनालाई राष्ट्रवाद र अन्तर्राष्ट्रियताको भावनालाई अन्तर्राष्ट्रियवाद भनिन्छ । आफ्नो राष्ट्रको इतिहास, संस्कृति र स्वार्थलाई ध्यानमा राखेर कार्य सम्पादन गर्नुलाई राष्ट्रियता भनिन्त भने विश्वका अरू राष्ट्रसँग पनि सहयोग, मित्रता र भातृत्वको भावनाले कार्यसम्पादन गर्नुलाई अन्तर्राष्ट्रियता भनिन्छ । राष्ट्रियता र अन्तर्राष्ट्रियता दुवैको महत्वपूर्ण भूमिका रहन्छ ।

## राष्ट्रिय मुक्ति आन्दोलन (National Freedom Movement)

धनी वा बलियो देशले गरीव वा निर्धो देशमाथि अथवा साम्राज्यवादी देशले अर्को कमजोर देशमाथि हमला वा कब्जा गर्दा त्यसबाट मुक्ति पाउन सबै देशभक्त मुक्तिकामी, न्यायप्रेमी मुक्तियोद्दा र प्रजातान्त्रिक शक्तिहरूले मिलेर गर्ने संघर्षलाई राष्ट्रिय मुक्ति आन्दोलन भनिन्छ ।

## राजनीति

कुनै पनि व्यक्ति, जाति, वर्ग वा समूहले आफ्नो तथा समूहको स्वार्थ प्राप्त गर्न राज्यसत्ताको माध्यमबाट अन्य व्यक्ति, जाति, वर्ग वा समूहमाथि शासन गर्ने नीति राजनीति हो ।

मानिसले मानिसलाई प्रत्येक क्षेत्रमा गरेको शोषण, उत्पीडनलाई बुझ्ने र कुनै पनि व्यक्ति, समूह, वर्ग वा जातिहरूले राज्यसत्ता कब्जा गरी शासन गर्नु राजनीति भनिन्छ ।

राजनीति दुई प्रकारले गरिएका हुन्छन् जस्तै–

(क) साधारण राजनीति (Simpalpolitic)

(ख) शक्तिकरण राजनीति (Power Politic)

साधारण राजनीति– कुनै पनि व्यक्ति, समूह, वर्ग वा जातिले राजनीति ज्ञान राखे तापनि सत्ता प्राप्त गर्न चाहँदैनन् र अरूलाई सत्ता दिलाएर त्यसबाट आफ्नो नीहित स्वार्थ पूरा गर्दछन् । तिनीहरू सत्ता र शक्तिको उपाशक (भक्त) हुन्छन् र आफू स्वार्थमुखि बन्दछन् ।

शक्तिकरण राजनीति– कुनै पनि व्यक्ति, समूह, वर्ग वा जातिले प्रत्यक्ष रूपमा भाग लिएर शासनसत्ता कब्जा गर्न चाहन्छन् र शासनसत्तामा पुग्नको निम्ति जस्तोसुकै बाटो अपनाउन पनि हट्दैनन् त्यस्तो राजनीतिलाई शक्तिकरण राजनीति भनिन्छ ।

## राजनीतिको किसिम

मानिसले राजनीति मुख्यतया दुई किसिमले गर्दछन् ।

(क) कसैको प्रेरणाले,

(ख) उत्पीडनको पीडाले ।

कसैको प्रेरणा- भन्नाले कुनै व्यक्तिको जीवन सफल देखेर वा कसैको जीवनबाट उत्साह पाएर अथवा व्यक्ति, समाजका मित्रबाट उचित सल्लाह पाएर गरिने राजनीतिलाई प्रेरणाले गरिने राजनीति भनिन्छ ।

उत्पीडनको पीडाले- गरिने राजनीति भनेके राज्यसत्ताबाट आफू तथा आफ्नो जातिहरू अथवा एउटा समस्याबाट पीडित भएका वर्गहरूले शोषण, उत्पीडनबाट मुक्त भई राज्यमा समान नागरिक हक स्थापना गर्नका लागि बाध्य भएर गरिने राजनीति पीडाले गरिने राजनीति हो ।

## राज्य र अधिराज्यमा भिन्नता

जुन मुलुकको शासन प्रणालीमा राजसंस्थाको अवधारणा रहेको हुँदैन त्यस मुलुकलाई राज्य वा राष्ट्र भनिन्छ ।

निरंकुश वा संवैधानिक राजतन्त्र अथवा राजसंस्थाको अवधारणा अन्तर्गत सर्वोच्च शासन प्रणाली रहेको त्यस्ता राष्ट्रलाई अधिराज्य भनिन्छ ।

## राजनीतिक पार्टीको तौर तरिका

राजनीतिक पार्टीले विशेष गरी राजनीति संचालन गर्दा निम्न कुरा ध्यानमा राख्नु पर्दछ, त्यो गर्न सकिएन भने पार्टीको राजनीति सफल हुन सक्दैन ।

(क) रणनीति– पार्टीको आधारभूत मनसाय नै रणनीति हो जसलाई अकाट्य, अपरिवर्तनीय बनाउनु पर्दछ यसो भयो भने पार्टी लामो समयसम्म जीवित रहन्छ र यो दीर्घकालीन बनाउनु पर्दछ ।

(ख) कार्यनीति– पार्टीको उच्चतम लक्ष्य र रणनीतिलाई प्राप्त गर्न परिस्थिति अनुसार जे जस्तो काम गर्दा पार्टीलाई फाइदा हुन्छ सो गर्न पार्टीले कार्यनीति बनाउनु पर्दछ । कार्यनीतिले पार्टी तथा कार्यकर्तालाई उर्जा दिइरहन्छ तर यो परिस्थिति अनुसारको बनाउनु पर्दछ ।

(ग) कुटनैतिक प्रयास– पार्टीको निश्चित उद्देश्यलाई बाधा नपुग्ने बरू लाभ हुने र पार्टीको पक्षमा हीत गरिने जस्ता कार्यहरू वा विपक्षलाई अप्ठ्यारो पार्ने आदि साम, दाम, दण्ड, भेदको उचित परिचालन गर्नु, पार्टीलाई अन्तर्राष्ट्रिय समूहमा स्थापित गराउनु र शत्रुलाई मित्र-मित्रलाई अन्तरंग मित्र बनाउने प्रयास नै कुटनीतिक हो यो परिस्थिति अनुसार गर्नु पर्दछ। यि नै कुरालाई राजनीतिक पार्टीको तौर तरिका भनिन्छ ।

## राष्ट्र र राष्ट्रवाद

राष्ट्र भनेको कुनै निश्चित सीमा रेखा, क्षेत्रफल मात्र होइन राष्ट्र भनेको वास्तवमा जनता हुन् । जनता भन्नाले ती जनजाति, जाति आदिलाई भनिन्छ ।

राष्ट्रवाद भन्नाले देशभक्ति भावना, राष्ट्रवादी विचारलाई पनि भनिन्छ । जसले आफ्नो राष्ट्रको, जनताको सार्वभौमिक अधिकारको रक्षा, विदेशीहरुद्वारा गरिने जुनसुकै किसिमको हस्तक्षेप विरुद्ध डटेर सामना गर्दछ साथै राष्ट्रको प्रगतिको लागि निरन्तर सोच्ने र सो लक्ष्यलाई सफल बनाउने कार्यमा जुटिरहने गर्दछ त्यसैलाई राष्ट्रवादी भनिन्छ ।

## राष्ट्रियता

जुन राष्ट्रमा बहुसंख्यक जाति, बहुभाषी, बहुधार्मिक र बहुसाँस्कृतिक जनता रहेका छन् । ती सबै जातिका आ-आफ्नै भाषा-लिपि, धर्म संस्कार, संस्कृति, भेष-भूषा आदि छ । यी सबै राष्ट्रका मौलिक पहिचान हुन यसैलाई राष्ट्रियता भनिन्छ ।

## लासालवाद (Lassalism)

सन् १८६३ मा जर्मनका मजदुर नेता फर्डिनान्द लासालले "जर्मन मजदुर संघ" स्थापना गरी आफू संस्थापक अध्यक्ष बने । लासालको विचारलाई लासालवाद भन्न थालियो । अध्यक्ष लासालले त्यस बेलाका मजदूर आन्दोलनमा एक छुट्टै कार्यक्रम पेश गरेका थिए । वास्तवमा लासालको कार्यक्रम अथवा लासालबाट एक सुधारवादी कार्यक्रम जस्तो देखिन्थ्यो । मार्क्स- एङ्गेल्सले यस कार्यक्रमलाई "मजदूर आन्दोलनको एक अवसरवाद" भनी आलोचना गर्नुभएको थियो ।

## लाल रक्षक (Red Guards)

माओत्सेतुङ्ग विचारधाराबाट प्रभावित युवा युवतीहरूको समूह जसले हातमा राता पट्टी बाँधने माओको बिल्ला लगाउने र माओको सिद्धान्तको प्रचार गर्नेहरूलाई लाल रक्षक भनिन्थ्यो ।

## लेनिनवाद (Leninism) :

कार्लमार्क्सको देहावसान हुँदा १३ वर्ष मात्र उमेर पुगेका लेनिन (V. I. Ulyanov) एक महान् रूसी क्रान्तिकारी नेता मात्र नभएर मार्क्सवादमा धेरै महत्वपूर्ण योगदान दिने साम्यवादी विद्वानको रूपमा पनि प्रख्यात छन् । रूसी क्रान्तिको समयमा रूसी साम्यवादी दल बोल्सेभिक (Bolshevik) पार्टीको प्रखर नेताको रूपमा क्रान्तिपूर्व र पश्चात् लेनिनले निभाएको भूमिका नै लेनिनवादको स्वरूप हो । लेनिनलाई आधुनिक साम्यवादी दर्शनको शिल्पकार (Architect) पनि भनिन्छ । लेनिनले मार्क्सवादी धारणामा केही मोडहरू दिए । उनी आफ्नो कार्यलाई मार्क्स र एन्जेल्सका विचारधाराहरू भन्दा फरक एक रति पनि मान्न तयार थिएन । लेनिनको ओजस्वी व्यक्तित्व, आफ्नो कार्यप्रति दृढता तथा नेतृत्वमा आवश्यक पर्ने अतुलनीय गुणका धनी भएका कारणले नै सन् १९१७ को रूसी साम्यवादी क्रान्तिमा सफलता प्राप्त गरेका थिए भन्ने धेरै विद्वानहरूको राय देखिन्छ ।

लेनिनले मार्क्सवादको व्यवहारिक पक्षमा ठूलो योगदान दिएका छन् । लेनिनले मार्क्सवादको सैद्धान्तिक पक्षहरूमा पनि धेरै यस्ता जोड घटाउहरू गरेका थिए, फलतः

मार्क्सवाद अझ परिमार्जित हुन पुग्यो । उनले दिएका महत्वपूर्ण योगदानहरूमा :

- क्रान्तिकारी नैतिकतामा जोड (The Emphasis on Revolutionary Morality)
- रक्षकदलको सिद्धान्त (The Theory of the Vangard)
- केन्द्रीकृत प्रजातन्त्रको धारा (Doctrine of democratic Centralism)
- साम्राज्यवाद पूँजीवादको अन्तिम चरण (Theory of Imperialism as the Last Stage of Capitalism)
- साँस्कृतिक क्रान्तिको सिद्धान्त (Theory of Cultural Revolution)
- राज्य बिस्तारै लोप हुँदै जाने सिद्धान्त (The Theory of the Withering Aay of the State)
- पुर्नउत्थानवादीहरूमाथि आक्रमण (Attack on Revisionism)

लेनिन एउटा क्रान्तिकारी निरंकुश साम्यवादी शासक मात्र नभई साम्यवादको दार्शनिकको रूपमा पनि परिचित छन् । लेनिनले दिएका विचारधाराहरू (Doctrines) र क्रान्ति गर्ने तरिकाहरूको समुच्च स्वरूप नै लेनिनवाद हो । उनले कम्युनिष्ट पार्टीलाई कसरी संगठित गर्ने वा दलको स्वरूप (ढाँचा) को विस्तृत व्याख्या आफ्नो महत्वपूर्ण पुस्तक The Party of the New Type मा दिएका छन् । त्यही ढाँचा अनुसार अनुकरण गर्न अन्य देशका साम्यवादी नेताहरूलाई समेत सजिलो भयो ।

लेनिनवादको अर्को महत्त्वपूर्ण कार्य केन्द्रीकृत प्रजातन्त्र (Democratic Centeralism) को सिद्धान्त पनि हो । यो सिद्धान्तले साम्यवादी दलभित्रको प्रजातान्त्रिक स्वरूपलाई अंकित गर्दछ । तर लेनिन स्वयंले पनि आफ्नो सैद्धान्तिक विचारधारा अनुरूप पार्टीभित्रको प्रजातान्त्रिक परिपाटीलाई कहिल्यै व्यवहारमा ल्याएनन् । कम्युनिष्ट पार्टीभित्रको बनौटमा तल्लो तहका कार्यकर्ताहरूमा माथिल्लो तहका कार्यकर्ताहरूप्रति हुनुपर्ने लौह अनुशासन (Iron Dicipline) को आवश्यक हुन्छ । पार्टीको नीति नियमहरू माथिल्लो तथा केन्द्रीय स्तरबाट तल्लो तहहरूमा जबर्जस्ती लागू गराइन्छ चाहे त्यो नीति स्कूल सम्बन्धी होस् वा कारखाना, परिवारको होस् वा प्रहरी, होटलको होस् वा अस्पतालको ।

मार्क्सवाद दर्शनलाई समग्रता दिने लेनिनको जन्म सन् १८७० मा भएको थियो । मृत्यु सन् १९२४ मा । लेनिनले सन् १९१७ देखि १९२४ सम्म ७ वर्ष मरणोपरान्त सोभियत संघमा शासन गरे । लेनिनले मार्क्सवादी दर्शनमा दिएको महत्वपूर्ण योगदान अझसम्म पनि धकधकी स्पन्दनमा बाँचिरहेको छ ।

## लिखित इतिहास (Written History)

कुनै ठोस प्रमाणको आधारमा मानिसको इतिहास लेखिनुलाई "लिखित इतिहास" भनिन्छ । मानव समाजको विकास क्रमशः हुँदै जाँदा उसको भाषा, लिपी, अक्षरको पनि विकास हुन थाल्यो । मानिसहरूले आफ्नो जीवनी, कृयाकलाप, इतिहास र विचारहरू अनेक प्रकारका सिलाखे, भोजपत्र, ताम्रपत्र, चित्रकला आदिमा लेखेर छोड्ने थाले । पछिल्ला पिढीहरूले तिनका अध्ययन अनुसन्धान गरी इतिहास नै तयार पार्न सके । यसप्रकारको लिखित इतिहासमा अहिलेसम्म पाइएको जानकारी अनुसार समाजमा विभिन्न वर्गहरूको बीचको लडाई र संघर्षको कुरा मात्र पाइन्छ । यसैले मार्क्सवादीहरू मानव समाजको लिखित इतिहासलाई "वर्ग संघर्षको इतिहास" पनि भन्दछन् ।

## वयस्क मताधिकार (Adult Suffrage)

आधुनिक संसारको राजनैतिक रङ्गमञ्च अन्तर्गत राष्ट्र राज्यहरूमा प्रजातन्त्रको आधारभूत सिद्धान्त अनुरूपमा वयस्क मताधिकारको प्रथा प्रचलित छ । उमेर पुगेका पुरूषहरूले मात्र मताधिकार प्राप्त गरेको छ भने त्यसलाई पुरूष मताधिकार भन्दछन् । आधुनिक प्रजातान्त्रिक राज्यहरूमा वयस्क मताधिकारको पद्धति प्रचलित भएको मुख्य कारणहरू निम्नानुसार देखाउन सक्दछौं–

क) निर्वाचनले सर्वसाधारण जनताहरूलाई राजनैतिक र सामाजिक चेतना जागृत गराईदिन्छ । वयस्क मताधिकारको प्रणालीमा जनताहरूले राजनैतिक नेताहरूको विभिन्न भाषण, कार्यक्रम, कार्य प्रगति तथा देश काल तथा परिस्थितिको विषयमा पूर्ण ज्ञान प्राप्त गर्ने मौका प्राप्त गर्दछन् । यसप्रकारको अधिकारले जनताहरूमा आफ्नो मौलिक अधिकार तथा कर्तव्यको बोध गराउँछ ।

ख) मताधिकार जनताहरूको जन्मसिद्ध अधिकार हो, जनताहरूलाई यस अधिकारबाट वञ्चित गर्नु, सामाजिक न्यायको अन्त गर्नु हो भन्ने अर्थ बुझाउँछ । सार्वजनिक चैन, सुख, भलाई, हित र उन्नतिको लागि जनताहरूलाई वयस्क मताधिकार प्रदान गर्नु आवश्यक छ ।

ग) वयस्क मताधिकारले अल्पसंख्यक जनताहरूमा आफ्ना अधिकारहरूलाई सुरक्षित गर्नुको साथै कर्तव्यको परिपालन गर्ने सुअवसर प्राप्त हुन्छ । यसरी यस प्रकारका अधिकारले जनताहरूमा आत्मसमर्यादाको भावना उत्पन्न गराउन सहयोग प्रदान गर्दछ । यसैले आधुनिक प्रजातान्त्रिक राष्ट्र राज्यहरूमा यो वयस्क मताधिकारको प्रथा अत्यन्त प्रचलित छ ।

## वर्ग एकता र वर्ग भेद (Class Unity & Class Differance)

वर्ग स्वार्थ मिलेका मानिसहरू एक आपसमा मिलजुल गरी शत्रुसँग संघर्ष गर्दछन् । साझा शत्रुसँग लड्नु पर्दा वा साझा शत्रुसँग संघर्ष गर्नु पर्दा एक हुनु वा संगठित हुनुलाई वर्ग एकता भनिन्छ । वर्ग एकता शोषक वर्गमा पनि हुन सक्दछ र वर्ग एकता शोषित वर्गमा पनि हुन सक्छ । वर्ग स्वार्थ नमिलेका मानिसहरूबीच दिगो मेलमिलाप हुन सक्दैन । मजदुर वर्गलाई शोषण गर्न पूँजीपतिहरू आपसमा मिल्दछन् । एउटा राष्ट्रको मजदुर विद्रोह दबाउन अर्को राष्ट्रको पूँजीपति वर्गले सहयोग गर्दछ । यस्तो सहयोग पूँजीपति वर्ग वा शोषक वर्गबीचको वर्ग एकता हो । वर्ग एकता भए जस्तै वर्ग भेद पनि हुन्छ । मजदुर र पूँजीपतिवर्गको बीचको भेद तथा शोषक र शोषित वर्ग बीचको भेद नै वर्ग भेद हो । विश्वमा मित्रताको मजबूत आधार नै वर्ग एकता हो भने शत्रुताको मजबूत कारण नै वर्ग भदे हो ।

## वर्ग र वर्ग संघर्ष (Class & Class Struggle)

एकै प्रकारका काम गरी बस्ने मानिसहरू एक वर्गका हुन् । ज्यामी, मजदूर, किसान, श्रमजीवी वर्ग हुन् भने पूँजीपति र जमिन्दार शोषक वर्ग हुन् । वर्ग दुई प्रकारका हुन्छन् (१) शोषक वर्ग (२) शोषित-पीडित वर्ग ।

शोषक वर्गहरूले सँधै शोषण मात्र गरिरहन्छ । शोषक वर्गले मेहनत गर्दैनन् । पसिना बहाउँदैनन् । शोषित वर्गले सँधै मेहनत मात्र गर्दछन् । परिश्रम बढी गर्दछन् र पसिना खुबै बहाउँदैछन् । शोषित वर्ग अथवा श्रमजीवी वर्गहरूले आफ्नो मेहनतको काम अनुसारको ज्याला लिनु पनि धेरै संघर्ष गर्नु पर्दछ । यसरी परिश्रम गर्ने श्रमजीवीहरूले आफ्नो अधिकारको लागि गरिने संघर्ष र शोषकहरूले आफ्नो मोजमस्तीका लागि श्रमजीवीहरूलाई दबाउन गरिने कामलाई वर्गसंघर्ष भनिन्छ । शोषक र शोषित वर्गको संघर्ष शोषक र शोषित रहुन्जेलसम्म कहिले खुल्ला र कहिले गोप्य रूपमा तथा कहिले उग्र र कहिले सुसप्त अवस्थामा चलिरहन्छ । यसरी दुई वर्गबीच चल्ने संघर्षलाई नै वर्ग संघर्ष भनिन्छ ।

## वर्ग स्वार्थ (Class Interest)

दुवै वर्गको आ-आफ्नो स्वार्थ हुन्छ । शोषित वर्गलाई शोषण गर्नु, पसिना लुट्नु, मेहनतको ज्याला नदिनु शोषक वर्गको वर्ग स्वार्थ हो भने आफ्नो मेहनत अनुसारको फल लिन खोज्नु अथवा पसिनाको कमाई लिन खोज्नु शोषित वर्गको स्वार्थ हो । वर्ग स्वार्थको कारण नै वर्ग संघर्ष हुन्छ । शोषित वर्ग स्वार्थ पुरा हुँदा शोषक वर्गको वर्ग स्वार्थमा हानी पुग्दछ भने शोषक वर्गको वर्ग स्वार्थ पूरा हुँदा शोषित वर्गको वर्ग स्वार्थमा हानी पुग्दछ ।

## वर्ग समन्वय (Class Coordination)

वर्ग एकता हुन नसक्ने दुई प्रकारका शत्रु वर्गलाई मिलाउन खोज्नु वा दुवै प्रकारका वर्ग मिल्न खोज्नु नै वर्ग समन्वय हो । वर्ग संघर्षको ठीक उल्टो वर्ग समन्वय हुन्छ । शोषक वर्गका मानिसहरू शोषित वर्गलाई ढाँट्नु, छल्नु, शोषण गर्न वा समन्वयको मीठा-मीठा नारा दिन्छन् र भुल्याउन खोज्छन् । मजदुर वर्ग र पूँजीपति वर्ग कहिल्यै एउटै स्वार्थमा मिल्न सक्ने वर्ग होइनन् । तर यी दुवै वर्गलाई मिलाउन खोज्नु नै वर्ग समन्वय हो । वास्तवमा वर्ग समन्वय शोषित, पीडित वर्गलाई मीठा-मीठा कुरा गरेर शोषण जारी राखिरहने एउटा तरीका मात्र हो ।

## वैज्ञानिक समाजवाद (Scientific Socialism)

वर्ग संघर्षमा आधारित नयाँ व्यवस्थाको व्याख्या कार्ल मार्क्स र फ्रेडरिक एङ्गेल्सले गर्नुभयो । जसलाई वैज्ञानिक समाजवाद भनिन्छ । काल्पनिक समाजवादीहरूको प्रयोग असफल भएपछि गहिरो अध्ययन र खोजबाट वैज्ञानिक समाजवाद ल्याइएको हो । वैज्ञानिक समाजवादलाई संक्षेपमा समाजवाद मात्र पनि भनिन्छ । समाजवादलाई धेरैजसो जनताको समर्थन प्राप्त भएको देखेर यसका विरोधीहरूले पनि समाजवाद शब्दको प्रयोग गर्न थाले । उनीहरूले साधारण सुधारका कुरालाई नै समाजवाद भनी प्रयोग प्रसार गर्न थाले । यसैले ठीक समाजवादलाई छुट्याउनका लागि वैज्ञानिक शब्द पनि थपी वैज्ञानिक समाजवाद भनिएको हो । यो विज्ञान जस्तै सत्य र सामाजिक व्यवहार खारिएको पनि छ । यसको मूल नीति "योग्यता अनुसार काम र काम अनुसारको दाम" हो ।

## वर्तमान नेपाल र जातीय मुक्ति आन्दोलन :-

वि.सं. २०४६ सालमा भएको जनताको बलिदानीपूर्ण सफलतामा जनआन्दोलनबाट पुनर्स्थापित संसदीय प्रणाली अन्तर्गत गठन भएको सरकारले निरंकुश पंचायती व्यवस्था भन्दा उदार रवैया अपनाए, तापनि राज्य संचालनका पद्धति र प्रणालीमा आमूल परिवर्तन ल्याउन सकेको छैनन्। प्रजातान्त्रिक परिपाटी अन्तर्गत जननिर्वाचित सरकारले जनताको मुक्तिका निम्ति कुनै कार्यक्रम ल्याउन सकेका छैनन्। जातीय मुक्तिको सवालमा टालटुले नीति मात्र ल्याएका छन्। जातिको बाँच्न पाउने अधिकारको लागि आत्मसम्मानित हुने रचनात्मक वा श्रृजनात्मक रूपले ठोस तथा कारगर कार्यक्रमहरू दिनु सकिरहेका छैनन्। आज पनि मुलुकको शासन सत्तामा एउटै जातिका अभिजातवर्ग वा शोषक, शाषकहरू अत्यधिक मात्रामा पुगेर षडयन्त्रमूलक ढङ्गले राज्य सत्ताको एकलौटी अधिकार प्रयोग गरिरहेका छन्। राष्ट्रिय राजनीतिको सतही फाँटमा अर्थात राज्यव्यवस्थाभित्र पिछडिएका विभिन्न जातिहरूलाई सहभागिता अत्यन्त न्यून रहेको छ।

यस प्रकारको राजनीतिक चालबाजी वा टालटुले नीति अनुसार आदिवासी जनजाति वा पिछडिएका दलीत, उत्पीडित वर्गका एक दुई मात्र राज्यसत्तामा सहभागी गराइएको छ तर ती व्यक्तिहरूमा जातीय आत्मसम्मान वा स्वाभिमान किञ्चित पनि पाइदैन र तिनको जातीय स्वाभिमान शासक जातिको अघि समर्पित भइसकेको छ। यसप्रकारको समीकरणलाई जातीय सहभागिता भन्न मिल्दैन। उच्च जातीय अहंकारवाद (High Caste-Chouvinism) द्वारा ओतप्रोत भएको वा जातीय एकाधिकार (एकै जातिको मात्र अधिपत्य) कायम गरिएको राज्य व्यवस्थामा न्यून संख्यामा अन्य जातीय समुदायको प्रतिनिधित्वलाई जातीय समस्याको सही समाधान भन्न सकिंदैन। किनकी सम्पूर्ण जातिले आफ्नो भाग्य र भविष्यको निर्माण अथवा स्वतन्त्र अस्तित्वले बाँच्न पाउने अधिकार रोज्न पाउने राजनीतिक प्रणाली वा राज्यसत्ताबाट मात्र सही अर्थमा जातिले मुक्ति प्राप्त गर्न सक्दछ

आज मुलुक हिन्दू समुदाय वा हिन्दू धर्मको विशेषाधिकार प्राप्त एक जातीय राष्ट्रको रूपमा परिणत भएको छ। विश्वको एकमात्र हिन्दू राष्ट्रको मान्यता अनुरूप राज्यसत्तामा हिन्दूहरूको एकलौटी आधिपत्य कायम भएको छ। हिन्दू भन्नाले जातीय वा वर्गीय समुदाय होइन तर आज कसैले हिन्दू भन्ना साथ केही जातिहरू आफूलाई नै भनेको ठान्दछन्। तिनीहरूकै सामुदायिक भावना वा एकात्मक विचार एकपक्षीय ढङ्गले समाजमा थोपर्दा अन्य जातको मौलिक अस्तित्व समाप्त हुन पुगेको छ। यसरी एकात्मक विचारलाई ऐन, कानून तर्जुमा गरी लदाइने प्रक्रिया हिन्दू धर्मावलम्वीको ब्राम्हणवाद हो। कुनै पनि व्यक्ति, जाति वा समुदायका मानिसले आफ्नो प्रभुत्व कायम गर्न इश्वर, धर्म, संस्कृति वा सभ्यताको आधारबाट आफूलार्य अरू भन्दा सर्वश्रेष्ठ ठान्नु र त्यसको पृष्ठभूमि तयार गरी अरूलाई कज्याउनु, दाश बनाउनु, शासनसत्ता आफ्नो अनुकूल पार्नु राज्य वा समाज भन्दा आफूलाई जेष्ठता मान्न लगाउनु आदि नेपालको वर्तमान अवस्थाको 'ब्राम्हणवाद' हो आफ्नो मनोवाञ्छित अधिकार अकण्टक बनाउन जतिसुकै घृणित कार्य गर्नलाई पछि नसर्ने विभिन्न माध्यमको आधारबाट समाजको सतही फाँटबाट आफू भन्दा भिन्न प्रकृतिका व्यक्ति, जाति वा समुदायलाई मूल प्रवाहदेखि अलग पार्ने र आफ्नो एकल प्रवाहलाई राष्ट्रकै मूल प्रवाह ठान्ने जस्ता अतिवादी सोच या

त्यसलाई पुष्टि दिने कुनै पनि क्रिया वा विशेषण जसबाट राष्ट्रका अन्य व्यक्ति, जाति अर्थात सिङ्गो राष्ट्रिय शक्तिलाई राष्ट्रदेखि ओभेल पार्दछन् त्यस्तो सर्वसत्तावादी विचार, सिद्धान्त वा नीति आजको ब्राम्हणवाद हो ।

जातीय समुदायको विश्लेषण धर्मको आधारबाट वर्गीकरण गरेर होइन मानिसको महत्त्वता, उसको गुण-दोष अथवा प्रतिभा, कला र योगदानबाट गर्नु पर्दछ । ब्राम्हणवाद हिन्दू धर्मको वर्णाश्रम व्यवस्था अन्तर्गतका ब्राम्हण जातिहरू होइन् । जातीय रूपले श्रमको विभाजन अथवा उँच नीच जस्ता अवैज्ञानिक मान्यता जसको आधारमा समाजको सार्थक पक्ष उत्पीडनमा परेका छन् । राज्यसत्ता संचालन गरिरहनु मूलतः साम्प्रदायिक भावनाले ओतप्रोत छ । हामी त्यस प्रकारको नीतिको कट्टर विरोध गर्दछौं । "मानिस जन्मले ब्राम्हण हुँदैन कर्मले मात्र ब्राम्हण हुन्छ" अर्थात "ब्रम्हलाई जान्न सक्नेवाला मात्र ब्राम्हण हुन्छ" भन्ने कुरा हिन्दू धर्मको ऋगवेदमा उल्लेख छ । जन्मदै ब्राम्हण भएर जन्मिएको, जातै ब्राम्हण हो मनोगत विचार मौलाएको छ । परम्पराको मान्यता पाउन सकेको छ यो नितान्त वस्तुवादी अथवा तथ्यपरक होइन । तार्तिक तुक वा यथार्थवादी तर्क रत्तिभर नरहेको यस्ता भ्रामक प्रचारद्वारा श्रृजना भएको भ्रमलाई सबैले फाल्नु पर्दछ । जबसम्म यस्ता प्रवृत्तिले प्रश्रय पाइरहन्छ तबसम्म सामाजिक गतिमा समाजले विकास गर्न सक्दैन । जातीय उच्चताको विचार हिजादेखि भाङ्गिएर आएको वर्तमान अवस्थामा जातीय अहंकारवादीले मुलुकलाई आक्रान्त पारी राष्ट्र विष्फोटित हुने अवस्थासम्म पुऱ्याइसकेको छ । राष्ट्रियता रूघ्न अवस्थामा पुगेको छ भने राष्ट्रियता एकता र जातीय सहिष्णुता जगैदेखि उखलिने प्रवल सम्भावना बढ्दै छ । मुलुक आज सामुदायिक सद्भाव वरकरार राख्न नसकि अत्यन्त कमजोर भइसकेको छ तसर्थ सांमुदायिक सद्भावलाई कायम राख्नका लागि नेपालमा समस्याको रूपमा जातीय अन्तर्विरोध वा जातिगत अन्तर्विरोध रहेको छ । यसको सही समाधान गर्ने राजनीतिक उपाया 'जातीय मुक्ति आन्दोलन' हो । जातीय मुक्ति आन्दोलनलाई मानवअधिकार बहाली गर्ने आन्दोलनकै अभिन्न अङ्गको रूपमा विकसित गरेर लैजान जरूरी छ ।

जातीय मुक्ति आन्दोलनको क्रमसँगै मुलुकको वर्गीय सत्ता अर्थात वर्गीय अन्तरविरोधलाई अत्यन्त निकट राखेर त्यसको समाधान गर्ने उपायलाई अध्ययन गर्दै लैजानुपर्दछ । अर्ध औपनिवेशिक तथा अर्ध सामन्ती राष्ट्रमा गरिने जातीय मुक्ति आन्दोलन मूलतः साम्राज्यवाद र शान्मवाद विरोधी न्याय प्राप्तिको जनताकै संघर्ष हो । नौलो जनवादी क्रान्तिद्वारा स्थापित जनवादले जातीय समस्यालाई समाधान गर्न सक्दैन यसका लागि वर्गीय सत्ता प्राप्त गराउने राजनीतिक पार्टी छुट्टै कार्यक्रम ल्याउन सक्नु पर्दछ । एउटै उद्देश्यबाट फरक प्रकृतिका दुई लक्ष्य प्राप्त गराउँछु भन्नु क्रान्तिप्रति नै भ्रम श्रृजना गराउनु हो तसर्थ नेपालमा कम्युनिष्टहरू सदैव असफल भइरहेका छन् ।

जातीय मुक्ति आन्दोलनको अवसरमा नेपाली जनताको सार्वभौमिकतामाथि खतरा गर्ने युद्ध वा आक्रमण अथवा बहुदलीय खुला समाजको मान्यतालाई घाँटी निमोठ्ने कार्य कहिबाट भयो भने जातिय मुक्ति आन्दोलनलाई स्थगन गरेर राष्ट्रका दुश्मनहरू विरूद्ध जाइलाग्नु पर्दछ । राष्ट्र र राष्ट्रियता गुम्ने सम्भावना पैदा भयो भने जातिय मुक्ति आन्दोलन गौण हुन जान्छ र राष्ट्रिय मुक्तिको संग्राममा सहभागी बन्नु पर्दछ ।

आधारभूत मनशायसँग मेल खाने व्यक्ति, संस्था र पार्टीबीच अन्तर्क्रिया, छलफल वा सहमतीको आधारबाट महान उद्देश्य प्राप्तिका लागि एकिकृत भई गोलबद्ध हुनुपर्ने राष्ट्रिय आवश्यकता भएको छ । यसो भएको खण्डमा मात्रा नेपाली जनताले वास्तवमा जातीय मुक्ति प्राप्त गर्न सक्छन् र "जातिय मुक्ति" नै वर्तमान नेपालको अवस्थामा ऐतिहासक अनिवार्यता भएको छ ।

## वर्णाश्रम सामाजिक व्यवस्था

सामन्तयुगीन हुकुमी शासनमा राजा महाराजाको स्वेच्छाचारी व्यक्तिवादी शासनको विरूद्धमा जब समाजमा न्यायको लागि विद्रोह हुन शुरू भयो । त्यसबाट डराएर राजा-महाराजा, राजपुरोहित, ऋषिमुनिहरू मिलेर समाजमा रहेका हरेक जातिहरू एक भएमा आफ्नो रजाईको शासन धेरै दिन टिक्न नसक्ने देखेर समाजलाई विभाजित गर्ने षड्यन्त्रको रचना गरे, त्यसैलाई हामी वर्णाश्रम व्यवस्था भनिन्छ । समाजलाई विभाजन गर्ने यस वर्णाश्रम व्यवस्थानुसार समाज चार भागमा विभाजन भयो ।

(क) पहिलो वर्ण अन्तर्गत ब्राह्मण जाति आए- उनीहरूको काम भनेको वेद वेदान्तका कुराहरू, स्मृतिपत्र, उपनिषद आदि पढ्ने रचना गर्ने मात्र थिए । कसैको काम कुटनीति, राजनीतिक, नीति, नियम बनाउने र राजा महाराजा मार्फत सर्वसाधारण जनतामा लागू गर्ने र कसैको काम राजदरबार, धार्मिक स्थलमा पूजापाठ गर्ने, दान दक्षिणा ग्रहण गर्ने थियो । यसरी यी ब्राह्मण जातिहरू राज्यका उच्च कर्ताकर्ता भई कुलीन जातिको रूपमा अगाडि बढे । यतिसम्म कि पछि पछि त यिनीहरूले आफूले आफैलाई आर्य भन्न थाले । ब्राह्मणले बोलेका वचन सब देव वचन हुन् भन्न पनि थाले ।

(ख) दोस्रो वर्ण अन्तर्गत क्षेत्रीय जातिहरू आए- क्षेत्रीको अर्थ लडभिर गर्ने व्यक्ति वा सुरवीर हुन्छ । त्यस समयमा राज्य शासन चलाउन शत्रु पक्षसँग लडभिर गर्ने लडाकुहरूको आवश्यक पर्दथियो । त्यसैले दोस्रो वर्ण अन्तर्गत राजा महाराजा, मन्त्रीहरू, दरबारिया, सेनापति, सिपाही र गाउँका ठूल-ठूला सामन्तहरू पर्दथिए । उनीहरूको काम राज्य शासन संचालन गर्ने र गराउने थियो । त्यसैले उनीहरूको जीवन सुखमय र भोगविलासमा डुबेको हुन्थ्यो ।

(ग) तेस्रो वर्ण अन्तर्गत वैष्य जातिहरू आए । उनीहरू ठूल-ठूला व्यापारी, धेरै जमिन भएको कृषक, प्रशस्त पशुधन भएका पशुपालक कृषक पर्दथिए । उनीहरू पनि राज्य शासन चलाउने राजा महाराजा, महासामन्तहरूको मूल सहयोगी नै रहन्थे । त्यसैले उनीहरूको जीवन पनि सुखमय र विलासी नै रहन्थ्यो ।

(घ) चौथो वर्ण अन्तर्गत शुद्र जातिहरू आए । उनीहरू भनेको समाजमा ज्यादै उपेक्षित र अपमानित जनता पर्दथिए । यिनीहरूले माथिका तिन जातिसँग कुनै किसिमको सम्बन्ध गर्न पाउँदैन थिए । कडा परिश्रम गरेर जीवन धान्न पर्दथियो । जस्तै शिल्पकार, हातहतियार बनाउने कालिगढ, घर बनाउने डकर्मी, चित्रकार, मूर्तीकार लगायत अन्य थुप्रै सीप भएका कामदारहरू पर्दथिए । उनीहरूले कुनै पनि धार्मिक प्रवचन, सभा, गोष्ठीमा जाने र सुन्ने अधिकार थिएन । राज्य शासन बारेमा सुन्ने, बुझ्ने र जान्ने कुनै अधिकार दिइँदैन थियो । सधैं भरि काममा मात्र व्यस्त रहनु पर्ने उनीहरूको जीवन थियो । यतिसम्म कि समाजमा उनीहरूलाई अछुत (पानी नचल्ने जाति) को रूपमा लिइन्थ्यो । राज्यका सम्पूर्ण शोषणका पहाडहरूले उनीहरूलाई थिचिरहेको हुन्थ्यो ।

## वामपन्थी दुष्साहसवाद र दक्षिणपन्थी अवसरवाद (Leftist Advanturism & Rightist Oppertunism)

क्रान्ति गर्ने क्रममा परिस्थितिभन्दा बढी भएर उग्र कुरा वा काम गर्नु वामपन्थी दुष्साहसवाद हो। वामपन्थी दुष्साहसवादीहरूले बेला न कुबेला क्रान्ति गर्न खोज्दछन् तर दक्षिणपन्थी अवसरवाद भने अवस्था राम्रो हुँदा वा क्रान्ति नगरी नहुने बेला हुँदा पनि संघर्ष मान्दैनन् र क्रान्तिबाट भाग्न खोज्ने नीति लिन्छन्। वामपन्थी दुष्साहसवादीहरूले रूखको टुप्पोबाट तल ओर्लनु छ भने बिस्तारै नओर्ली टुप्पोबाटै एकैचोटी हामफाल्न खोज्छन्, दक्षिणपन्थी अवसरवादीहरूले भने रूखमै चढ्न खोज्दैनन्।

## वामपन्थी र दक्षिणपन्थी (Leftist & Rightis)

फ्रान्सेली संसदमा फ्रान्सको राज्य क्रान्तिपछि सत्ताधारी दलको संसद सदस्य अध्यक्षको दाहिनेपट्टि र विरोधीहरू दलका सदस्य देब्रेपट्टि बस्ने गर्दथे। सत्ताधारी दलले पूँजिपति वर्गको स्वार्थलाई नै सहयोग गर्दथ्यो भने विरोधी दल मजदूर वर्गको पक्षमा बोल्दथ्यो। यसप्रकार देब्रेपट्टि बस्ने वामपन्थी र दाहिनेपट्टि बस्ने दक्षिणपन्थी भनिन थालिए।

**वामपन्थी** शब्द १७८९ को फ्रान्सेली राज्य क्रान्तिपछि त्यहाँ स्थापना भएको संसदको एउटा नयाँ चलनबाट विश्वमा चलनचल्तीमा आएको हो। क्रान्तिपछिको त्यहाँको नयाँ संसद-राष्ट्रिय सभामा समाज व्यवस्थाको आमूल परिवर्तन खोज्ने प्रतिनिधिहरूलाई संसदको अध्यक्षता गरिरहेको व्यक्तिको बायाँपट्टि बस्ने चलन चलाइयो। नरमपन्थीहरूलाई अध्यक्षको ठीक सामुन्ने भागमा बस्न लगाइयो। र, आमूल परिवर्तनको विरोध गर्ने कट्टरपन्थीलाई दायाँपट्टि राख्ने गरियो। यही चलनका आधारमा संसारमा पहिलो पटक 'वामपन्थी' र 'दक्षिणपन्थी' भन्ने शब्द प्रयोगमा आउन थालेको हो।

उन्नाइसौं शताब्दीसम्म निरंकुश राजतन्त्रको विरोधमा मजदुर वर्गमात्र होइन, मध्यम वर्गीय पूँजिपतिहरू र बुद्धिजीवीहरू समेत वामपन्थी भएर निक्लिएका थिए। तर बीसौं शताब्दीमा आएर, खासगरी रूसको अक्टोबर समाजवादी क्रान्तिपछि स्थिति बदलियो। मध्यमवर्गीय पूँजिपतिहरू निरंकुश राजतन्त्रको विरोधमा प्रजातान्त्रिक क्रान्ति शुरूआत गर्ने, तर क्रान्ति पूरा नगर्ने हुन थाले। क्रान्तिकारी मजदूर वर्गलाई सत्तामा आउन नदिन उनीहरूले सामन्त वर्गसित सम्झौता गर्ने थाले।

वामपन्थी र दक्षिणपन्थी शब्दहरू हमेशा तुलनामा र गतिमा बुझ्नु पर्ने शब्द हो। एउटा समाज व्यवस्था रहँदा त्यसको आमूल परिवर्तन गर्न कस्सिएको वामपन्थी शक्ति नयाँ व्यवस्था आएपछि यथास्थिति थाम्ने दक्षिणपन्थी शक्तिमा बदलिएका उदाहरण छ्यास्छ्यास्ती भेटिन्छ। एक समयको वापन्थी शक्ति समाज व्यवस्था नबदलिँदै आफ्नो चरित्र बदलेर दक्षिणपन्थी हुन पुगेको उदाहरण पनि थुप्रै भेटिन्छ। त्यसैले, एक समयको वामपन्थी शक्ति सबै समयको अथवा सँधैको लागि वामपन्थी शक्ति ठान्नु गलत हुन्छ।

**दक्षिणपन्थी :-** यो शब्दको उत्पत्ति वामपन्थी शब्दसँगसँगै वामपन्थी शब्दको ठीक विपरित पक्षको रूपमा फ्रान्सको क्रान्तिकारी संसदको चलनबाटै भएको हो। दक्षिणपन्थी शब्दको सिधा अर्थ हो- दायाँपट्टि लाग्ने।

त्यसै बेलादेखि दक्षिणपन्थी भन्नाले त्यस्तो कट्टरपनी सामाजिक शक्तिलाई बुझ्ने गरिएको छ, जो प्रगति र आधारभूत परिवर्तनको विरोधी र यथास्थितिको पक्षपाती छ ।

संसारमा अनेकौं दक्षिणपन्थी शक्तिहरू छन् । संख्या र थरि जति वटा भएपनि उनीहरूमा भेटिने साझा चरित्र एउटै छ उनीहरू सबै प्रगति र क्रान्तिका विरोधी हुन्छन् र सानातिना सुधार र यथास्थितिका समर्थक हुन्छन् । उनीहरू सबै शोषण, अन्याय र व्यक्तिगत सम्पत्तिको राज्य ज्यूँका त्यूँ टिकाइ राख्न चाहन्छन् । उनीहरू कदापि त्यसको पूरापूर अन्त गर्न चाहन्नन् । उनीहरू सबै वैज्ञानिक चिन्तन प्रणाली र प्रगतिशील चालचलनको विरोधी गर्छन् र अन्य चिन्तन् र परम्पराको समर्थन गर्दछन् ।

भारतमा कांग्रेस (आई) र भाजपा दुवै नेपालमा कांग्रेस, नाम मात्रका कम्यूनिष्ट दक्षिणपन्थी शक्ति हुन् । अमेरिकाको रिपब्लीकन पार्टी र बेलायतको जोन मेजरको कन्जरभेटिभ पार्टी विश्वमै सबैभन्दा नामी दक्षिणपन्थी शक्ति मानिन्छन् । त्यहाँ उनीहरूको प्रतिपक्ष पनि दक्षिणपन्थी शक्ति नै छ ।

समाज व्यवस्थाको आधारभूत परिवर्तनको विरोध गर्ने ज्यूँ का त्यूँको समर्थन गर्ने सामाजिक शक्ति नै दक्षिणपन्थी शक्ति हो भन्न सकिन्छ ।

## विस्तारवाद (Expantionism)

साम्राज्यवादी राष्ट्रहरूले साना, गरीव, कमजोर, राष्ट्रहरूलाई प्रत्यक्ष वा अप्रत्यक्ष तरिकाबाट राजनैतिक, आर्थिक, सैनिक, सांस्कृतिक वा अन्य कुनै पनि कुटनैतिक तरिकाबाट आफ्नो अधिनमा राख्ने अथवा उपनिवेश कायम गर्ने नीतिलाई विस्तारवाद भनिन्छ । ती राष्ट्रहरूले कमजोर, गरीव, साना राष्ट्रको सार्वभौमसत्ता समेत खत्तम गरिदिन्छन् । विस्तारवादी राष्ट्रहरूले कमजोर, गरीव, साना राष्ट्रहरूलाई जबरजस्ती आफ्नो देशमा गाभ्ने र आर्थिक रूपमा दवाव दिने षडयन्त्रहरू पनि गर्ने गर्दछन् ।

## वैधानिक संघर्ष (Legal Struggle)

कुनै सरकार, संस्था वा व्यक्तिको विरूद्धमा कुनै व्यक्ति, समुदाय वा वर्गले हक, हितको रक्षा गर्न एवं माग पूरा गराउन विधान वा संविधानसंगत ढंगले संघर्षलाई वैधानिक संघर्ष भनिन्छ । "अभिव्यक्तिको स्वतन्त्रता" अन्तरगत पर्ने विरोध गर्न पाउने अधिकारलाई प्रयोग गर्दै यो संघर्ष गरिन्छ । यो संघर्षको अन्तिम चरणमा केही दवावमूलक क्रियाकलाप पनि गरिन्छ । वैधानिक संघर्षका केही चरणहरू यसप्रकार छन् ।

क) माग पत्र प्रस्तुत :- सम्बन्धित निकायको ध्यानाकर्षण गर्दै कुनै एउटा अवधि दिएर मागहरू प्रस्तुत गरिन्छ ।

ख) स्मरण/ज्ञापन-पत्र :- माग पत्रमा उल्लेखित समय भित्रै वा समय सकिनासाथ स्मरण गराउन र कार्यक्रम सम्बन्धी जानकारी दिने गरिन्छ ।

ग) प्रदर्शन :- सभा, गोष्ठी, र्‍याली आदिको आयोजना गरेर आफ्नो समस्याबारे सर्वसाधारण समक्ष जानकारी दिन प्रदर्शनहरू गरिन्छ । यसबाट जनताको समर्थन पाइने आशा गरिन्छ ।

घ) घेराऊ :- वार्ता गराउन दवाव दिने उद्देश्य सहित व्यवस्थापकीय पदाधिकारीहरूलाई घेराऊ गरिन्छ । यसो गर्दा कार्यालय समयसम्म मात्रै गरिन्छ । कार्यालय समयपछि घेराऊ गरिदैन ।

ङ) तालाबन्दी :- घेराउ गर्दा पनि वार्ता हुने अवस्था आएन भने काम रोकेर दवाव दिइन्छ । यसको लागि पहिले कसैलाई पनि काममा जान नदिन धर्ना दिइन्छ । यत्तिले पनि नपुगे ढोकाहरूमा ताला लगाएर धर्ना दिइन्छ । यसो गर्दा काम ठप्प हुने गर्छ ।

च) आम हड्ताल :- माथिल्ला चरणहरूबाट पनि समस्या हुन नसकेमा सम्बन्धित क्षेत्र बाहेक माथिल्लो निकायको ध्यान जाने हिसावले यातायात बन्द, पसल, बजार, कारखाना, उद्योगधन्दा आदि वन्द गराउने जनजीवन असामान्य बनाएर माग पूरा गराउन बाध्य पारिने चरण हो । यस क्रममा छिटपुट वा कहिलेकाहीं आम रूपमा अवैधानिक सघर्षका गतिविधिहरू संचालित हुन्छन् । एकले अर्कोलाई दोष लगाइदै गरिने यस चरणको कार्यक्रम छोटो अवधिको लागिदेखि लिएर लामो अवधिको लागि सम्म हुन सक्नेछ । यस अवधिपछिका गतिविधि शान्तिपूर्ण नहुन सक्दछ ।

## शक्ति (Power)

जनहित, जनकल्याणको निम्ति प्रयोग गरिने सामाजिक नियन्त्रण नै शक्ति हो । राजनीतिक विज्ञानमा शक्तिले एउटा प्रमुख र महत्वपूर्ण स्थान ओगटेको छ । राम्ररी केलाउने हो भने शक्तिलाई राजनीति विज्ञानबाट अलग गर्न सकिन्न । शक्तिबारे विभिन्न तर्क वितर्क प्रस्तुत गर्दै राजनीतिक शक्तिका लागि संघर्ष हो, भनिएको छ । राज्यको शक्ति सम्बन्धी सिद्धान्तको प्रतिपादन उन्नाइसौं शताब्दीमा जर्मनीका इतिहासविद् हेइनरिख भॉन ट्रीट्स्के र दार्शनिक फ्रेडरिक नित्सेले गरेका थिए । यिनीहरूले शक्तिका रूपमा राज्यद्वारा राखिने सैनिक शक्तिमाथि नै बढी बल दिएका थिए । विसौं शताब्दीको प्रारम्भमा इरीक काफमैनले १९११ इ. मा एउटा पुस्तक प्रकाशित गरे । जसमा उनले कोरेका छन्- "राज्यको सार हो शक्तिको विकास वृद्धि र प्रदर्शन ।" राष्ट्रिय राज्यको उदयले गर्दा राज्यको शक्ति सम्बन्धी सिद्धान्तले बढी प्रचार-प्रसार हुने मौका पायो । दोस्रो विश्वयुद्धपछि अमेरिकामा शक्तिलाई राज्य विज्ञानको सबैभन्दा आवश्यक तत्वका रूपमा स्वीकार गरियो र शक्ति सिद्धान्तका विषयमा धेरै लेखकहरूले विभिन्न लेखहरू तयार प्रकाशमा ल्याए । अमेरिकामा राजनीतिक विज्ञान र शक्तिका विषयमा अनुसन्धान गर्नका लागि चिकागो स्कूल खोलिएको छ । यस स्कूलका विभिन्न अनुसन्धानकर्ताहरूले राजनीति विज्ञानका अनेकौं विषयवस्तुलाई वैज्ञानिक आधार दिने प्रयास जुटिरहेका छन् । जनवादी गणतन्त्र चीनको सरकारले शक्तिलाई आवश्यक अपरिहार्य मानेको देखिन्छ । शक्तिबारे विभिन्न विद्वानहरूले आ-आफ्ना धारणा यसरी व्यक्त गरेका छन् :–

१) क्याटलीन :- राजनैतिक विज्ञान नै 'शक्तिको विज्ञान' हो ।

२) माओत्सेतुङ :- राजनैतिक शक्ति बन्दूकको नालबाट निस्कन्छ ।

३) आर.एम. मेकाइभर:- मानिसहरूको व्यवहारलाई नियन्त्रित गर्ने विनियमित गर्ने निर्देशित गर्ने क्षमता नै शक्ति हो ।

४) रोवर्ट वियर्सटटेड :- सरकारको जन्म शक्तिद्वारा भएको हो र त्यस शक्तिको छाप अहिलेसम्म पनि परेको छैन । यसैले शक्ति राज्यको निर्माणमा एउटा महत्वपूर्ण तर्क हो ।

६) गिलक्राइष्ट :- न्यायरहित शक्ति आफ्नो सर्वोत्तम रूपमा अस्थायी मात्र हुन्छ ।

| | |
|---|---|
| ७) वर्ट्रेन्ड रसेल :- | शक्ति चिताएका असरहरूको निर्माण हो । |
| ८) ग्राहम विल्सन :- | राज्य लक्ष्य हो वा साधन ? राज्य वास्तवमा साधन नै हो, जो नैतिक वा बल सिद्धान्तमा आधारित छ । राज्य आफ्नै लक्ष्यको रूपमा प्रतीक हुन्छ, चाहे त्यो असल होस् वा खराव । |
| ९) एम.जि.स्मिथ :- | शक्ति व्यक्तिहरू, समूहहरू, नियमहरू वा भौतिक अवस्थाहरूको प्रतिरोध हुँदाहुँदै पनि स्वतन्त्रतापूर्वक पाइला चाल्न सक्ने क्षमता हो । |
| १०) जाँ वोदाँ :- | सर्वोच्च शक्ति नागरिकहरू र प्रजामा प्रयोग गरिने परम शक्ति हो, जो कानूनद्वारा नियन्त्रित हुन सक्दैन । |

## शक्ति पृथककरण (Separtation of Power)

शक्ति पृथककरणको सिद्धान्तले निम्नानुसारका कुराहरुको ज्ञान गराउँछ–

– व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाको शक्ति पृथक पृथक व्यक्तिहरूको हात हुनुपर्दछ र पृथक पृथक प्रयोग हुनुपर्दछ ।

– सरकारको प्रत्येक अङ्गका शक्तिको सीमा निर्धारित हुनुपर्दछ र कार्य निश्चित हुनुपर्दछ ।

– आफ्नै क्षेत्रमा प्रत्यके अङ्ग स्वतन्त्र हुनुपर्दछ र एक अर्काको हस्तक्षेपबाट मुक्त हुनुपर्दछ र

– शक्तिको पृथककरण यसरी होस् कि एक अङ्ग अर्को अङ्गको शक्ति र अधिकारको सम्बन्धमा रोक र सन्तुलन कायम गरोस् ।

## शरणार्थी (Refugee)

राष्ट्र, जाति, भाषा, धर्म आदिको विषयलाई लिएर दुई पक्षबीच भएको लडाईमा प्रत्यक्ष शत्रुको अगाडि आत्मसमर्पण गर्न नसकिने र लडाई जारी राख्न पनि नसकिने स्थितिमा कुनै तेस्रो राष्ट्र, जाति, भाषा, धर्मका व्यक्तिहरू वा समुदाय सामु शरण लिन जाने व्यक्तिलाई शरणार्थी भनिन्छ । अहिले भुटानबाट नेपाली मूलका मानिसलाई दवाउन थालेपछि भुटानी सरकारसँग आत्मसर्पण गर्न पनि नसक्ने र त्यहाँ बसेर लड्न पनि नसक्नेहरू नेपाल आएर बसेका छन् । यिनीहरू शरणार्थी हुन् । प्यालेष्टाइनलाई इजरायलले खाएपछि प्यालेष्टाइन् शरणार्थीहरूले अरव मुलुकहरू ढाकेको छन् । अफ्रिकामा हुटु र टुत्सीहरूको व्यथा पनि यही हो । यसरी शरणार्थी हुन भनेको तेस्रो पक्षको लागि भार हुनु होइन । यो तेस्रा पक्षले पनि उक्त समस्या समाधानमा पहलकदमी गर्ला भन्ने हो । यस्तो अवस्थामा प्रायः जस्तो अन्तर्राष्ट्रिय समुदायलाई गुहारिन्छ र अन्तर्राष्ट्रिय दवावका कारण समस्या समाधान गरिन्छ । यो प्रक्रिया पनि अहिले पक्षपातपूर्ण भएको छ । क्यूबा, उत्तर कोरिया र चीनबाट बलजफत शरणार्थी बनाउने गरिन्छ । तर अन्य देशबाट वास्तविक शरणार्थी बन्न पुगेकालाई अन्तर्राष्ट्रिय जगतले ध्यान दिएको देखिंदैन ।

## शीत युद्ध (Cold War)

दुई देश वा शक्तिबीच एक अर्कासँग घृणा, सन्देह, षडयन्त्र जस्ता वाक युद्ध गर्नुलाई शीत युद्ध भनिन्छ । रेडियो, टेलिभिजन, अखबारबाट यो युद्ध गरिन्छ ।

## श्वेत पत्र (White Paper)

कुनै खास विषयको सम्बन्धमा सरकारबाट सम्पूर्ण जानकारी र विषयवस्तुको यथार्थ अवस्थासहित दिइएको जानकारीवाला पत्रलाई श्वेत पत्र भनिन्छ ।

## सत्ता (Authority)

सत्तालाई च्याम्वर्स डिक्सनरीमा "कार्यालयबाट प्राप्त हुने शक्ति" भनिएको छ । इन्टरनेशनल इन्साईक्लोपेडिया अफ सोसियल साइन्समा सत्तालाई कुनै कार्यालय वा व्यक्तिको सम्पदाको रूपमा स्वीकार गरिएको छ । सत्ताको परिभाषा बारे विभिन्न विद्वानहरूको आ-आफ्नै विचारहरू छन् । एकजना विद्वानको लेखाई अनुसार "सत्ता शक्ति प्रयोगको संस्थापक अधिकार हो, स्वयं शक्ति होइन" एवं निर्देशित गर्ने औचित्यपूर्ण अधिकारलाई सत्ता भनिन्छ । हरवर्ट साइमनको लेखाई अनुसार- "सत्ताको अस्तित्व तव हुन्छ, जव वरिष्ठ एवं अधिनत्वका बीच सम्बन्ध स्थापित हुन्छ ।" विद्वान लासवेल र काप्लानले सत्तालाई "औपचारिक शक्ति" भनेका छन् भने वी.सेलले "स्वतन्त्रताको प्रतिवाद" भनेका छन् ।

यी माथि उल्लेखित विभिन्न विद्वानहरूको परिभाषाहरूको आधारमा के भन्न सकिन्छ भने सत्ता औचित्यपूर्ण अधिकार हो र अर्काको व्यवहारमा परिवर्तन ल्याउने प्रक्रिया हो । यो औपचारिक, निश्चित तथा विशिष्ट हुन्छ, किनकि यसले राजनैतिक दावालाई प्रतिस्थापित गर्दछ ।

## सरकारी वित्त (Government Finance)

सरकारी आयव्यय, ऋण, बजेट र वित्तीय नीति आदि सम्बन्धमा अध्ययन गर्ने शास्त्रलाई सरकारी वित्त भन्दछ । सरकारी वित्तले सरकारका विभिन्न वित्तीय कार्यकलापहरू- आम्दानी गर्ने, खर्च गर्ने, ऋण लिने र तिर्ने, वजेट तर्जुमा गर्ने र लागू गर्ने आदिको अध्ययन गर्दछ । सरकारी वित्त अन्तरगत सरकारी आम्दानीका विभिन्न स्रोतहरू, विभिन्न किसिमका करहरू, करका सिद्धान्तहरू, असल कर प्रणालीका गुणहरू, सरकारी खर्चका सिद्धान्तहरू, सरकारी खर्चका शीर्षकहरू सरकारी ऋणका सिद्धान्तहरू, ऋण भुक्तानी ऋणको प्रभाव, बजेट तर्जूमा र लेखापरीक्षण आदिको अध्ययन हुन्छ ।

## समानुपातिक प्रतिनिधित्व

समान अनुपातमा अथवा बराबरी गरेर सबैलाई सम्पूर्ण क्षेत्रमा समान सहभागी दिलाउने अधिकारलाई समानुपातिक प्रतिनिधित्व भनिन्छ ।

राजनीतिक आधारबाट सम्पूर्ण जाति वा जातीय समुदायका व्यक्तिलाई राज्यसत्तामा प्रतिनिधित्व गराउनु समानुपातिक प्रतिनिधित्व हो । राष्ट्रलाई संचालन गर्ने राज्ययन्त्र (

शिक्षा, स्वास्थ्य, न्याय, प्रशासन, सेना तथा प्रहरी आदि) मा जातीय आधारबाट सम्पूर्ण जातजातिलाई समान सहभागिताको व्यवस्था गर्दछ । बहु-जातीय राष्ट्रमा सबै जातिहरूलाई अग्रसर गराई सहभागी बनाउन सकिने यो एकमात्र उपयुक्त बाटो हो । जसबाट सबै जाति वा जातीय समुदायमा जागरूकता, आत्मनिर्भर तथा कर्तव्यबोध हुन जान्छ र राष्ट्र र विकासमा टेवा मिल्न सक्दछ ।

## संघीय सरकार

बहु-जातीय, बहु-धार्मिक, बहु-भाषी र बहु-सांस्कृतिक राष्ट्रमा एकात्मक प्रणालीद्वारा शासन व्यवस्था संचालन गरिनाले हरेक सवाललाई समष्टिगत रूपमा समस्याको समाधान गर्न सकिँदैन । साथै ऐतिहासिक, भौगोलिक र सामाजिक विषमता भएका मुलुकमा एकात्मक सरकारभित्र विभिन्न व्यवधान र कार्यको बोझ थपिनाले उचित न्याय, प्रशासन तथा विकास, निर्माणको व्यवस्था गर्न सकिन्न र लोकतान्त्रिक सिद्धान्त विपरित भएकोले संघात्मक सरकार आजको आवश्यकता भएको छ ।

जनताको जागरूकता, केन्द्रीय सरकारको निरंकुशताको अभाव, आर्थिक दृष्टिमा उपयुक्त, नागरिक स्वतन्त्रताको रक्षा र शासन कुशलताको कारण संघात्मक सरकारमा आफ्नो शासन आफैले गर्न पाउने अधिकार एकात्मक शासन व्यवस्थामा भन्दा बढी सुरक्षित हुने हुनाले संघात्मक सरकार मुलुकको लागि बढी लाभदायी हुन सक्दछ र जनतान्त्रिक समाजवादको आधार भनेको यही हो ।

## सर्वहारा अधिनायकत्व (Prolatariat Dictatorship)

शासन सत्तामा सर्वहारा वर्गकै प्रमुख अधिकारलाई सर्वहारा अधिननायकत्व भनिन्छ । समाजवादी समाजमा सत्ताबाट हटाइएका शोषक वर्गका मानिसहरूले पुन: सत्ता कब्जा गरी पूँजिवाद नै उल्ट्याउन नसकून् भनेर सर्वहारा अधिनायकत्व कायम गरिएको हुन्छ । बहुसंख्यक जनताहरूले ठूलो कष्ट र बलिदान सहेर ल्याएको अवस्थामा शोषकवर्ग शान्तिपूर्ण जीवन बिताउनुको बदला अनेक षडयन्त्र गरी क्रान्तिलाई नै असफल गराउन खोज्छन् भने त्यसबेला मजदूर वर्गले कडाइका साथ शान्ति सुव्यवस्था कायम गरी क्रान्तिकै रक्षा गर्न अगाडि सर्नु पर्दछ । यस्तो कामलाई नै सर्वहारा अधिनायकत्व भनिएको हो । एङ्गेल्सले सर्वहारा अधिनायकत्व सबै देशमा एकै किसिमबाट लागू नगरी आ-आफ्नो परिस्थिति अनुसार लगाउनु पर्दछ भन्नु भएको छ । चीनमा यसलाई 'जनताको जनवादी अधिनायकत्व' भनिएको छ ।

## सर्वहारावर्ग (Proletarian Class)

सर्वहारा वर्ग पूँजिवादी समाजको सच्चा क्रान्तिकारी वर्ग हो । सर्वहारा वर्गले आफ्नो मात्र भलाई नहेरेर आम श्रमजीवी जनताको हितलाई ध्यानमा राखेको हुन्छ । आफूसँग जीविकाको, उत्पादनको हितलाई ध्यानमा राखेको हुन्छ । आफ्नो श्रम शक्ति बेचेर जीवन धान्न बाध्य भएका मंजदुर वर्गहरूलाई नै सर्वहारा भनिन्छ । सर्वहारा वर्गले बुर्जुवा प्रणालीलाई निर्मूल पारेर सर्वहारा वर्गको राज्य सत्ता स्थापना गर्ने लक्ष्य राखेर अगाडि बढेको हुन्छ ।

## समाजवाद (Socialism)

समाजवाद पूँजिपति वर्गको शोषणको विरूद्ध पूँजिवादकै गर्भबाट पैदा भएको सर्वोत्तम वैज्ञानिक व्यवस्था हो । सबैको सामूहिक मेहेनतबाट उब्जेको सम्पत्ति बाँडीचूँडी खाने एवं सबैले दुःख-सुख हेर्ने व्यवस्थालाई नै समाजवाद भनिन्छ । पूँजिवादी शोषण असह्य भएपछि सर्वहारा वर्गले हिंसापूर्ण क्रान्तिद्वारा यो व्यवस्थालाई अन्त्य गर्दछन् । यही पूँजिवादको गर्भबाट एउटा नयाँ व्यवस्थाको उदय हुन्छ जसलाई समाजवाद भन्दछन् । समाजवाद पूँजिवादको विनाश र साम्यवादलाई मेटेर नयाँ व्यवस्था कायम गर्न शुरू गरेको क्रान्तिलाई समाजवादी क्रान्ति भन्दछ । पूँजीवादी र साम्राज्यवादीहरूको शोषण, थिचोमिचो, गर्दा समाजवादी व्यवस्थाको खाँचो भएको हो । पूँजीपति वर्गले मजदूर वर्गलाई जति दुःख दिन्छन् उति नै मजदूरहरू पनि एकजुट हुन पुग्छन् । मजदूरवर्गले आफ्नो एकतालाई कसेर लामो समयसम्म गरिने संघर्षबाट नयाँ व्यवस्थाको जन्म हुन्छ जसलाई समाजवाद भनिन्छ ।

## समानता (Equality)

समानता बारे विभिन्न विद्वानहरूले प्रस्तुत गरेका परिभाषाहरूको अध्ययनबाट हामी समानताको वास्तविक परिभाषा यसरी प्रस्तुत गर्दछौं–

"राजनीति शास्त्रमा समानताको अर्थ यस्ता परिस्थितिहरूको स्थायित्वसँग हुन्छ जसबाट सबै व्यक्तिहरूको व्यक्तित्व विकास गर्ने समान अवसर प्राप्त हुन सकोस् र यसप्रकार त्यस समानताको अन्तय होस् जसको मूल सामाजिक वैषम्य छ ।"

"मनुष्य आफ्ना अधिकारहरूको सम्बन्धमा समान पैदा भएका छन् र समान रहेका छन् ।"

सामाजिक न्यायको दृष्टिले सबै समान छन् । सबैलाई मताधिकार प्राप्त छ । सरकारी नोकरी पाउने र चुनावमा खडा हुने सबै नागरिकलाई समान अधिकार छ । यसरी समाज तथा राज्यले प्रत्येक व्यक्तिलाई कुनै भेदभाव नगरी व्यक्तित्वको विकासका लागि समान अवसर प्रदान गराउनुलाई नै समानता भन्न सकिन्छ ।

समानताको सही परिभाषा हो । समाजमा व्यक्तिले समान सुविधा पाउनु । ठूलो, सानो, धनी, गरीव, शिक्षित, प्रशिक्षित आदीमा भेद नगरी समाज तथा राज्यले सबैलाई समान अवसर प्रदान गर्नुपर्दछ ।

## स्वतन्त्रता (Liberty)

स्वतन्त्रता बारे विभिन्न विद्वानहरूले प्रस्तुत गरेका परिभाषाहरूको अध्ययनबाट हामी स्वतन्त्रताको वास्तविक परिभाषा यसरी प्रस्तुत गर्दछौं ।

"स्वतन्त्रता व्यक्तिको त्यो मौलिक अधिकार हो जो उसको व्यक्तित्वको विकासमा सहायक सिद्ध होस र जसको उपभोगको क्रममा अरूको हक र हित कुनै किसिमको बाधा नपर्ने कुरामा विशेष ध्यान दिनुपर्दछ । यस दृष्टिले स्वतन्त्रताको सकारात्मक र नकारात्मक दुवै अङ्ग ग्रहण गर्दछ, सकारात्मक अङ्गको सम्बन्धमा हामी भन्न सक्छौं कि यस प्रकारको परिस्थिति हुनु, जसले गर्दा मानिसले आफ्नो व्यक्तित्वको विकास पूर्णरूपले

गर्न सकोस् । साथै उसको अधिकारको रक्षा पनि होस् । नकारात्मक अङ्गको विषयमा कामी भन्न सक्छौं कि यसप्रकारको परिस्थितिलाई मेट्नु, जसले गर्दा मानिसको सामाजिक उन्नतिमा बाधा परोस् । मानिस स्वतन्त्र रूपले विचार गर्न र नयाँ नयाँ कुरा सोच्न चाहन्छ, अरूको हस्तक्षेप उसको विचारमा बाधक हुन्छ । त्यसो हुँदा स्वतन्त्रताको अर्थ यस्तो परिस्थितिलाई रोक्नु पनि हो, जुन व्यक्तिको विकासमा बाधक सिद्ध होस् ।

कोलको परिभाषा यसप्रकार छ- "स्वतन्त्रताको अर्थ विना कुनै बाहिरी बाधाबाट व्यक्तिको व्यक्तित्व व्यक्त गर्ने स्वच्छन्दता हो ।"

## सार्वभौमसत्ता (Sovereignty)

सार्वभौमसत्ता सम्बन्धमा आधुनिक विश्वको राजनीतिक विज्ञानका विभिन्न लेखक तथा विद्वानहरूले विभिन्न दृष्टिकोणबाट परिभाषा प्रस्तुत गरेको पाइन्छ । परिभाषाहरू निम्न प्रकारका छन्:-

प्राध्यापक डिग्विटको परिभाषा- "सम्प्रभूत्व राज्यको आदेश दिने सर्वशक्ति हो ।"

विलोबीको परिभाषा- "राज्यको सर्वोच्च शक्ति नै सम्प्रभुत्व हो ।"

बोदाँको परिभाषा यस प्रकार छ- "सम्प्रभूत्व नागरिकहरूमाथि प्रयोग गरिने परम शक्ति हो, जो कानूनद्वारा नियन्त्रण गर्न सक्दैनन् ।"

बर्गेसले यस प्रकार परिभाषा दिएका छन्- "सार्वभौमसत्ता व्यक्ति वा व्यक्तिका सम्पूर्ण समुदायहरू प्रति मौलिक, निरंकुश तथा असीमित शक्ति हो ।"

ग्रोसियसले दिएको परिभाषा यस प्रकार छ- "सार्वभौमसत्ता त्यो सर्वोच्च राजनीतिक शक्ति हो, जसको इच्छाको उल्लंघन गर्न सकिन्न र जसको कार्य अरूको अधिनमा हुँदैन ।

आस्टिनको निम्न प्रकारले परिभाषा प्रस्तुत गरेको छ- "यदि कुनै राजनीतिक सङ्गठनभित्र कुनै यस्तो मानिस होस् जो देखापर्न सकोस् जो कसैको अधिनमा नरहेको होस् र सम्पूर्ण सङ्गठित समाजले जसका आज्ञाको पालना स्वाभाविक रूपले गरोस् त सोही मानिस राजा र संगठित समाजको एक स्वतन्त्र राष्ट्र मानिन्छ ।"

राजनीति विज्ञानको सिद्धान्तमा विश्वका विभिन्न विद्वानहरूले प्रस्तुत गरेका परिभाषाहरू मध्ये जोन आस्टिनकै सार्वभौमसत्ताको परिभाषालाई उच्चस्तर तथा राम्रो ठानिन्छ ।

## सामन्तवाद (Feudalism)

दास प्रथाको समाजलाई विस्थापित गरेर सामन्तवादको उदय भयो । सन् ५०० देखि १७०० सम्म संसारभरी नै सामन्तवादको जगजगी थियो । जमिनमा सामन्तहरूको पूर्ण रूपमा स्वामित्व र किसानहरू जीवन निर्वाहकै लागि सामन्तहरू माथि पूर्ण रूपले निर्भर हुनाले किसानहरू सामन्तका सम्पत्ति जत्तिकै थिए । राजनैतिक क्षेत्रमा आम-जनताहरूको हात नभएर दरवारिया सामन्ती र ठूला पूँजीपतिहरूको मात्र बोलवाला हुन्थ्यो । त्यसै कारण सामन्त वर्गहरूले आफ्नो वर्गको हित र स्वार्थ पूरा गर्नका लागि नै प्रथा, विचार सिद्धान्त, ऐन कानून र धर्म आदि बनाएका हुन्छन् । त्यसैलाई नै सामन्तवाद

भनिन्छ। धेरै जग्गा जमिन ओगटेर त्यसमा किसानहरूलाई लंदाएर धनी हुनेलाई सामन्त र जमिन्दार वर्ग भनिन्थ्यो। सामन्तहरूको व्यवस्थालाई नै सामन्तवाद भन्न सकिन्छ।

## साम्यवाद (Communism)

साम्यवाद समाज विकासको अन्तिम र उच्चतम खुड्किलो हो। यही आएर मानिसको श्रम अभिशापबाट जिन्दगी अभिन्न अङ्गमा परिणत हुन्छ। पूँजीवादको विनाशपछि क्रान्तिकारी सर्वहारा वर्गहरू समाजवाद हुँदै साम्यवादमा प्रवेश गर्नेछन्। साम्यवाद मानव विकासको सबभन्दा बढी चेतनशील र सर्वोच्च चरण हो। यसमा कुनै राज्य, सरकार, प्रहरी, अदालत र कानूनको आवश्यकता पर्दैन। सबै लोप हुन्छ। यसमा सम्पूर्ण व्यक्तिहरू पूर्ण चेतनशील, नैतिकवान र विवेकशील हुन्छन्। साम्यवादमा सर्वहारा वर्गको पूर्ण मुक्ति पाउँछ। सम्पूर्ण व्यक्तिका आफ्नो आवश्यकताहरू पुरा हुन्छन्। यसरी समृद्ध, सभान्तपूर्ण, स्वर्णिम समाजको स्थापना गर्न सिद्धान्तलाई नै साम्यवाद भनिन्छ मार्क्सवादले खोज गरेको साम्यवादको अन्तिमा उद्देश्य साम्यवाद हो। वास्तविक रूपमा पूर्ण शोषण विहीन समाज साम्यवादमा मात्र हुनेछ। साम्यवादमा पुग्नु अगाडि समाजवाद पार गर्नुपर्छ।

## साम्यवाद र साम्राज्यवाद (Emperorism) :

साम्राज्यवाद कुनै आधुनिक राजनैतिक पद्धति होइन। विशेषत: यो कुनै पनि शक्तिशाली राष्ट्रको विदेश नीतिलाई मानिन्छ। एक राष्ट्रले आफ्नो स्वार्थको लागि अर्को राष्ट्रको स्वतन्त्रता हनन् गरी आफ्नो प्रभाव वा आधिपत्य स्थापित गर्ने नीतिलाई नै साम्राज्यवाद हो। शक्तिशाली राष्ट्रहरूले आफ्नो धन, क्षेत्रफल तथा सैनिक शक्तिको आधारमा निर्वल साना राष्ट्रहरूमाथि साम्राज्यवादी नति लिएकोले नै विश्व इतिहास युद्धको विभत्स घटनाहरूले रँगिएका हुन्। साम्यवाद एउटा राजनैतिक परिपाटी र साम्राज्यवाद कुनै बलियो देशको विदेश नीति भए तापनि यी दुईमा आफ्नो किसिमको तादात्म्यता रहेको छ। सर्वहारा वर्गको अधिनायकत्वलाई स्वीकार गर्दै सर्वहाराको कुनै राष्ट्र हुँदैन भन्ने धारणा लिएको मार्क्सवाद (साम्यवाद) ले मजदुरहरूको अन्तर्राष्ट्रिय एकताको आव्हान गर्दछ। सर्वहारावर्गलाई अन्तर्राष्ट्रिय रूपमा एकताबद्ध राख्ने निहुँमा ठूला साम्यवादी राष्ट्रले साना राष्ट्रहरूमा हैकम जमाउँछन्। अपवादको रूपमा केही देशहरूलाई छोडी सबै साम्यवादी राष्ट्रहरू तत्कालीन सोभियत संघको कठपुतली रहन बाध्य थिए। त्यो एक किसिमको साम्राज्यवादी नीति हो। साम्यवादी ठूला राष्ट्रहरूको छिमेकमा रहेका अन्य साना राष्ट्रहरू साम्यवादी साम्राज्यवादको शिकार बनेका छन्। एक स्वतन्त्र राष्ट्र तिब्बतले सन् १९५९ मा छिमेकी राष्ट्र चीनको साम्राज्यवादी नीतिको परिणामस्वरूप आफ्नो स्वतन्त्र अस्तित्वलाई गुमाउनु पर्‍यो। सोभियत संघले स्वतन्त्र बाल्टीक गणराज्यहरूलाई आफ्नो भीमकाय क्षेत्रफलभित्र एक बनाएको थियो।

## साम्यवाद र अराजकतावाद (Anarchism) :

राजनैतिक दर्शनको शब्दकोषमा अराजकतावाद एक त्यस्तो राजनैतिक पद्धति हो जहाँ सरकारको आवश्यकतालाई स्वीकार गरिँदैन। अर्को अर्थमा सरकार बिनाको

राजनैतिक परिपाटी नै अराजकतावाद हो । मार्क्सवादी दर्शनमा कार्लमार्क्स र एन्जेल्सको भनाइ अनुसार साम्यवादी राजनैतिक पद्धतिमा राज्यको अस्तित्व बिस्तारै बिलीन हुँदै जानेछ र राज्यको कामकारवाही प्रशासनिक इकाईद्वारा चल्नेछ । यी दुई परिभाषा अनुसार साम्यवाद र अराजकतावाद राजनैतिक सिद्धान्तबीच कुनै भिन्नता भएको देखिँदैन । साम्यवाद र अराजकतावादबीच निम्न समानताहरू देखिएका छन् :-

(क) कम्युनिष्ट र अराजकतावादीहरू दुवैको एउटै लक्ष्य वर्गहीन तथा राज्यविहीन समाजको स्थापना गर्नु हो ।

(ख) यी दुवै राजनीतिक सिद्धान्तहरूले राज्यलाई अनावश्यक ठानी पूँजीपतिहरूको शोषण गर्ने अखडा मान्दछ ।

(ग) अराजकतावादी एवं साम्यवादी दुवैले आफ्नो राज्यविहीन समाजको निर्माणका लागि अधिकतर हिंसात्मक उपायको पक्षधर लिन्छन् ।

(घ) यी दुवै सिद्धान्तवादीहरू राज्यको समाप्तिपछि समस्याहरू हल हुन्छ भनी ठान्दछन् ।

## सामाजिक साम्राज्यवाद (Social Imperialism)

मुखले समाजवादी हुनु काम चाहिँ साम्राज्यबादी गर्नुलाई सामाजिक साम्राज्यवाद भनिन्छ । दोश्रो अन्तरराष्ट्रियका संशोधनवादीहरूले समाजबादी हूँ भन्दै पितृभूमिको रक्षाको नाममा साम्राज्यवादीहरूलाई सघाएका थिए । यिनीहरूलाई लेनिनले सामाजिक साम्राज्यवादीको नाम लिनु भएको थियो । विभिन्न देशको स्वतन्त्रता र आत्म निर्णयको अधिकारमाथि हमला गरेर रूस आफूलाई साम्राज्यवादी सावित गरिसकेको छ तर मुखको भने अझ पनि रूस समाजवादी नै छ । यस प्रकार मुखले समाजवादी भनी साम्राज्यवादी काम गर्ने रूसलाई सामाजिक साम्राज्यवाद भनिन्छ । सामाजिक साम्राज्यवाद विश्वकै सर्वहारा र उत्पीडित जनताको महान् दुश्मन हो ।

## साम्राज्यवाद (Imperalism)

पूँजीवादको उच्चतम अवस्थाको नाम नै 'साम्राज्यवाद' हो । शक्तिशाली देशले कमजोर देशमाथि आक्रमण गरी आफ्नो अधिनमा राख्ने नीतिलाई साम्राज्यवाद भनिन्छ । साम्राज्यवाद पूँजीवादको मरणासन्न बेला हो । साम्राज्यावाद पूँजीवादको मरणसन्न बेला हो । साम्राज्यवाद सर्वहारा क्रान्तिको पूर्व बेला हो, जे जसरी भएपनि वलियो देशले बजार विस्तार गर्न आफ्नो राजनैतिक हस्तक्षेप बढाउन अर्को कमजोर देशमाथि प्रत्यक्ष अप्रत्यक्ष आक्रमण गरी कब्जा, जन्माउने नीतिलाई साम्राज्यवाद भनिन्छ । कुनै पनि ठूलो शक्तिशाली देशले अन्य साना देशहरू र तिनीहरूको राष्ट्रियतालाई मिच्ने, लुट्ने, चुस्ने र पिछलग्गु बनाउने या आफ्नै देशमा गाभ्न खोज्ने र गाभ्ने नीति र सिद्धान्तलाई 'साम्राज्यवाद' भनिन्छ ।

## सून्य समय (Zoro Hour)

संसदीय व्यवस्थामा सांसदहरूले ऐन निर्माणार्थ विधेयक तथा सरकारका नीति तथा कार्यक्रममाथि छलफल बाहेक सार्वजनिक महत्वको विषयमा टिप्पणी गर्न एवं

जानकारी दिन वा लिनका लागि विशेष समय तोकिएको हुन्छ । त्यसलाई शुन्य समय भनिन्छ । वास्तवमा "शुन्य समय" भन्नाले योजनाबद्ध रूपमा दैनिक वा अन्य कार्वाही गर्न व्यवस्थित निर्णायक एवं रक्षात्मक समय भनिन्छ । यसै अर्थमा, यस समयमा पनि सांसदहरूले गोली चलाए झैं बोली चलाउँछन् र मन्त्रीहरूले पनि रक्षात्मक शैलीमा आलोचनाका झोला भर्छन् र फिस्स हाँसेर निर्णयात्मक जवाफ दिन्छन् । जसले प्रश्नकर्ता वा आलोचकको कहिल्यै सन्तुष्टि पूरा गर्दैन । यस समयमा सोधिने प्रश्नहरूका काम सत्य हो वा होइनमा उत्तर सकिने हुन्छ । मन्त्रीलाई केरकार गर्ने र जनताको अगाडि आफूले जनताको समस्या उठाएको देखाउन पाउने हुनाले शुन्य सभाको महत्व रहेको पाइन्छ । कुनै पनि नयाँ समस्याको हल शुन्य समयमा प्रस्तुत गरेर भएको उदाहरण अहिलेसम्म छैन ।

## सुपुर्दगी (Extradition)

जब कुनै व्यक्ति एक देशमा भीषण अपराध गरेर त्यसको सजायँबाट बच्नका लागि अर्को देशमा भाग्छ, त्यस देशको अनुरोधबाट अर्को देशले सो अपराधीलाई सुपुर्द गर्नुलाई सुपुर्दगी भनिन्छ । जघन्य अपारध गर्ने अपराधी जहाँसुकै भागे पनि उम्कन नपाओस, अपराध गर्नेलाई अपराध गरेकै मुलुकमा मुद्दा चलाउने भएमा प्रमाण बुझ्ने र कारवाही गर्न सजिलो होस् भन्नको खातिर सुपुर्दगीको चलन चलाएको हो ।

## सोसलिष्ट इन्टरनेशनल (Socialist International)

दोस्रो विश्वयुद्धताका कम्युनिष्ट पार्टीहरूको लोकप्रियता ज्यादै बढेको थियो । कम्युनिष्टहरूको लोकप्रियताबाट आत्तिएर अमेरिकी सहयोगमा ब्रिटिश लेबर पार्टीका दक्षिणपन्थी नेताहरूको नेतृत्वमा १९४४देखि विश्वका पूँजीवादी समाजवादीहरूमा सम्पर्क राख्ने काम शुरू भएको थियो । पछि १९५१ मा फ्रेंकफर्टमा भएको एक सम्मेलनले 'सोसलिष्ट इन्टरनेशलन' भन्ने सङ्गठन स्थापना गऱ्यो ।

## संघात्मक सरकार (Federal Government)

एकात्मक सरकारको ठीक उल्टो सरकार नै संघात्मक सरकार हो भनिन्छ । यस सम्बन्धमा फाइनर लेख्दछन- संघात्मक राज्य त्यसलाई भनिन्छ जसमा शक्तिको एक अंश स्थानीय क्षेत्रमा पाइन्छ बाँकी अंश एक केन्द्रीय संस्थामा पाइन्छ जसको निर्माण यसै उद्देश्यले स्थानीय क्षेत्रको सहयोगबाट गरिन्छ ।" प्राध्यापक डायसीले संघात्मक सरकारको परिभाषा प्रस्तुत गर्दै लेखेका छन- "संघात्मक व्यवस्था एक राजनैतिक सुविधा मात्र हो जसको उद्देश्य राष्ट्रिय एकता तथा राज्यको अधिकारी समन्वय स्थापित गर्ने हुन्छ ।" हेमिल्टनले लेखेका छन्- "संघ राज्यहरूको एक समुदाय हो जसले एक नयाँ राज्यको निर्माण गर्दछ ।" प्राध्यापक गार्नरको विचार यस्तो छ- "संघात्मक सरकार त्यसलाई भनिन्छ जसमा केन्द्रीय तथा स्थानीय संस्था दुवै नै आ-आफ्नो निश्चित क्षेत्रमा संविधानद्वारा निरिश्चत गरिएअनुसार स्वतन्त्र हुन्छन् ।"मन्टेस्क्यूको भनाईअनुसार- "संघात्मक सरकार एक सम्झौता हो जसअनुसार साना साना राष्ट्रहरू आफूले स्थापना गर्न चाहेको एक ठूलो अङ्गको सदस्य बन्न स्वीकार गर्दछ ।

सामान्यतया: संघात्मक सरकार भनेको त्यो सरकार हो जसमा अनेक स्वतन्त्र राज्य आफ्नो केही सामान्य उद्देश्य प्राप्तिको लागि एक केन्द्रीय सरकार सङ्गठित गर्दछन् र बाँकी विषयमा आफ्नो अलग अलग स्वतन्त्रता सुरक्षित राख्दछन् । केन्द्रीय सरकारलाई सङ्घीय सरकार भनिन्छ र राज्य सरकार संघीय एकाईएहरू भनिन्छ । राज्यहरू आफनो प्रभुत्व शक्ति नवनिर्मित संघीय सरकारलाई प्रदान गर्दछन् र त्यसैको एक अभिन्न भाग बन्दछन् । यस्ता एकाईहरूको भिन्नभिन्नै नाम रहेको पाइन्छ । स्विटजरलैण्डमा कैण्टन भनिन्छ भने संयुक्त राज्य अमेरिकामा राज्य भनिन्छ । संघात्मक व्यवस्थामा दुई वटा सरकारको व्यवस्था गरिएको हुन्छ जसको बीच संविधानद्वारा लिखित रूपमा शक्तिको विभाजन गरिएको हुन्छ । राष्ट्रिय हितको विषयको प्रबन्ध केन्द्रीय सरकारले गर्दछ भने स्थानीय निकायको प्रवन्ध राज्य सरकारले गर्दछ । संघीय व्यवस्थामा सरकारको शक्ति मौलिक हुन्छ र केन्द्र र केन्द्र प्रान्तीय सरकार बराबर जस्ता हुन्छन । आ-आफ्नो क्षेत्रमा केन्द्र तथा राज्य सरकार पूर्ण रूपमा स्वतन्त्र रहन्छन् । केन्द्रीय र प्रान्तीय कार्य क्षेत्रमा परिवर्तन गर्नुपर्ने भएमा संविधान नै संशोधन गर्नुपर्ने हुन्छ । संघात्मक सरकार भएको व्यवस्थामा दोहोरो सरकार हुने हुनाले यस्तो व्यवस्था केन्द्रमा आफ्नै व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका हुन्छ भने स्थानीय एकाईको पनि आफ्नै अङ्गहरू हुन्छन् । संघात्मक शासन व्यवस्थामा नागरिक दुई अधिकारीको अधिनमा हुन्छन्- एक केन्द्रीय र अर्को प्रान्तीय भारत, संयुक्त राज्य अमेरिका, बेलायत, मलेशिया, स्विटजलैण्ड, क्यानाडा आदि देशहरूमा संघात्मक सरकार छन् ।

## संविधान (Constitution)

संविधान कानूनको विशिष्ठ र मौलिक स्वरूप हो । राज्यको कुनै मौलिक सिद्धान्त हुन्छ, जसले सरकारको सङ्गठनलाई स्वरूप प्रदान गर्दछ । त्यसैलाई राजनैतिक भाषामा संधिवान भन्दछन् । राज्यको सगठनले गर्दा सरकारका विभिन्न अंगहरूमा प्रमुख शक्तिको वितरण सरकारको कार्यक्षेत्र र सम्पादन गर्ने तरिका आदि सरकार र जनताकाबीच सम्बन्ध सामेल गरिन्छ । संविधानले राज्यको निर्णय गर्दैन, बरू यसले राज्यको बाह्य स्वरूप प्रस्तुत गर्दछ । डाइसीको भनाईअनुसार- "शासन संविधान भनेका ती राजकीय नियमहरू हुन् जसले प्रत्यक्ष वा परोक्ष रूपले राज्यमाथि प्रभाव पार्छन् ।" गिल्काइस्टले यो कुरो यसरी उल्लेख गरेका छन्- "संविधानले ती कानून र काइदाहरू, जो लिखित वा अलिखित रूपमा शासन व्यवस्थाको निश्चित, त्यसका विरोधी अंगका अधिकारहरूको वितरण र यस्ता साधारण सिद्धान्तको निर्णय गर्दछ । जसअनुसार कुनै देशको सरकार चलाइन्छ ।" ब्राइसको भनाइअनुसार- सरकारको आकार प्रकारको निर्णय र उसप्रति नागरिकहरूको अधिकार र कर्तव्यहरूको निश्चित गर्ने नियमहरूलाई शासन-संविधान भन्दछन् ।" लीकक भन्दछन्- "कुनै राज्यको आकार वा ढाँचालाई यहाँको शासन विधान भन्दछन् ।" मिष्टर बुल्जेले संविधानका लागि यस्ता तत्वहरू आवश्यक ठानेका छन्-

१) सरकारको अंश र तिनीहरू शक्ति
२) नागरिकहरूको अधिकार र कर्तव्य
३) दुवैको उचित सम्बन्ध जसका निर्देशनतत्व पनि सामेल हुन्छ ।

यस प्रकार बुल्जेको परिभाषामा संविधानका लागि आवश्यक सबै लक्षण समाविष्ट भएकाले निजको परिभाषा सर्वोत्तम ठहरिएको छ । गेटेलको भनाइअनुसार- "ती मौलिक सिद्धान्त जसद्वारा कुनै राज्यका ती मौलिक स्वरूप निर्धारित हुन्छन्, संविधान भनिन्छ । यसमा राज्यको संगठन सरकार विभिन्न अंगहरूमा प्रमुख, शक्तिको वितरण, सरकारको कार्यक्षेत्र तथा सम्पादनको तरिका तथा सरकार र जनताका पारस्परिक सम्बन्ध सम्मिलित हुन्छन् । संविधानले राज्यको निर्माण गर्दैन, तर यो राज्यो बाध्य स्वरूपको अस्तित्व हुन्छ ।"

## संविधि (Statuate)

देशको व्यवस्थापिका सभाद्वारा बनाइएका तथा पारित गरिएका कानूहरूलाई संविधि भनिन्छ ।

## संसदीय व्यवस्था (Parliamentary System)

संसदीय व्यवस्था त्यस्तो व्यवस्था हो । जसमा राष्ट्राध्यक्ष नाम मात्रको प्रमुख वा सम्वैधानिक प्रमुख हुन्छ । सैद्धान्तिक रूपले राज्यको सबै कार्यपालिका सम्बन्धी शक्ति उसैमा निहित रहन्छ र उसैको नाममा सबै कार्य सम्पादन गरिन्छ । व्यवहारिक रूपले भने राष्ट्राध्यक्ष नाम मात्रको प्रमुख हुन्छ र प्रधानमन्त्री अर्थात् सरकार प्रमुख नै सर्वेसर्वा हुन्छ । व्यवस्थापिकाप्रति मन्त्रिपरिषद् उत्तरदायी हुन्छ । संसदका सदस्यहरू मात्र कार्यपालिकाका सदस्य बन्न सक्ने हुनाले कार्यपालिका र व्यवस्थापिकाको घनिष्ठ सम्बन्ध हुन्छ । वास्तवमा कार्यपालिका व्यवस्थापिकाको अभिन्न अंग हुन्छ। संसदीय व्यवस्था भएको कार्यपालिकालाई मन्त्रिमण्डलात्मक कार्यपालिका पनि भनिन्छ । व्यवस्थापिकाको विश्वास प्राप्त गरिरहुन्जेल मात्र मन्त्रीहरू पदमा रहिरहन्छन् ।

## संशोधनवाद र आधुनिक संशोधनवाद (Rivisionism & Neo Revisionism)

कुनै सामान्य सिद्धान्तलाई काँटछाँट गर्ने, बंग्याउने, बिगार्ने प्रकृयालाई संशोधनवाद भनिन्छ । बर्न्सटीन र काउत्स्की जस्ता नेता- हरूले मार्क्सवादका सिद्धान्तलाई बंग्याए नेपाल कम्युनिष्टहरुले वास्तविक सिद्धान्तलाई बङ्ग्याए । पेरिस कम्युनको असफलता पछि सर्वहारा वर्गले राजसत्तामाथि कब्जा क्रान्तिद्वारा मात्र गर्न सक्छ भन्ने सिद्धान्त सही साबित भयो तर बर्न्सटीनले शान्तिपूर्ण रूपबाट मात्र समाजवादमा पुग्न सकिन्छ भने । उनीहरूको यस्तो विचारलाई लेनिनले संशोधन भन्नु भयो ।

रूसमा स्टालिनपछि ख्रुश्चेभ नेता भए । ख्रुश्चेभले क्रान्तिको खाँचो छैन, कम्युनिष्ट पार्टी सर्वहारा वर्गको पार्टी नभई सबै जनताको पार्टी भन्ने विचार अघि सारे । उनको विचार आएपछि विश्वका कम्युनिष्ट पार्टीहरूले ख्रुश्चेभको नीतिलाई आधुनिक संशोधनवाद भन्न थाले । कुनैपनि सर्वहारावर्गको पार्टीभित्र वा मजदूर आन्दोलन भित्र अप्रत्यक्ष रूपले विकसित हुँदै गएको कुप्रवृत्तिहरू अर्थात् बुर्जुवाहरूलाई खुशी पार्नको निम्ति संशोधनवाद र तोमोड गर्दै उब्जेको प्रवृत्तिलाई नै संशोधनवाद र तोडमोड गर्दै उब्जेको प्रवृत्तिलाई नै संशोधनवाद भनिन्छ ।

## संघात्मक (संघीय) शासन

आज हाम्रो मुलुकमा बहुसंख्यक आदिवासी, जनजातिहरूको मूल समस्या राष्ट्रिय (जातीय) पहिचान नै रहेको छ । राष्ट्रिय पहिचानकै संकट रहेको अवस्थामा उनीहरूमाथि एउटा राज्यको अवधारणाद्वारा एकात्मक शासन वा नोकरशाहीतन्त्र र बेलायती प्रजातन्त्र लादिएको छ । एकात्मक शासनबाट निर्देशित प्रजातन्त्रले पछौटे जातिको स्वतस्फूर्त भावनालाई विकास गर्न सक्दैन । जनताको भावनालाई उचित संरक्षण दिन नसकिए मूल लक्ष्यमा कुनै पनि राष्ट्र राज्य पुग्न सक्दैन । अहिले पश्चिमी मुलुकको प्रभाव र हिन्दूवादद्वारा निर्देशित तथाकथित प्रजातन्त्रको आधुनिक राज्य प्रणालीमा राष्ट्र-राज्यको अवधारणा विकसित र मजबुत बनाउँदै लगिएको छ । एक समुदायले अर्को समुदायमाथि शोषण र दमन गर्ने खतरनाक हतियारको रूपमा राज्यसत्ताबाट प्रजातन्त्रलाई उपयोग गरिएको छ । आदिवासी, जनजातिहरूको प्रचलित समाजमा राष्ट्रिय राज्यको अवधारणा रहेको थिएन । उनीहरूमा संघीय शासनको अवधारणा रहेको र संघीय रूपमा स्वयत्तशासन वा स्वशासनको पद्धति विकसित र उन्नत अवस्थामा थियो । त्यसप्रकारको संघीय शासन समूहको प्रतिष्ठानमा आधारित तानाशाही वा नोकरशाह तन्त्रहीन व्यवस्था थियो । यो वर्तमान राजनीतिमा विभिन्न पार्टीहरूले वकालत गरेको वा गैर सरकारी संस्थाको धारणा भन्दा ज्यादै फरक मान्यता हो ।

यसर्थ जबसम्म मुलुकको बहुसंख्यक आदिवासी, जनजातिहरूलाई संघीय शासनको अधिकार प्रदान गरिँदैन तबसम्म उनीहरूलाई राष्ट्रिय पहिचान र राजनीतिक जागरण गराउन सकिँदैन । राष्ट्रिय राजनीतिमा ओझेल परेका जातिहरूलाई जातीय आधारबाट राज्यसत्तामा सहभागिता नगराएसम्म राष्ट्र र राष्ट्रियता दिगो रहन सक्दैन । आदिवासी, जनजाति र अति पिछडिएका जातीय समुदायलाई शिक्षा र रोजगार जस्ता आधारभूत आवश्यकताहरू संवैधानिक विशेषाधिकारद्वारा संरक्षण नगरे आदिवासी, जनजातिहरूलाई मानसिक रूपमा राजनीतिक, आर्थिक र सामाजिक विपन्नता वा अत्यन्त पछौटेपनबाट मुक्त गर्न सकिँदैन ।

आदिवासी, जनजातिहरूको सामाजिक जीवनमा राजनीतिक चेतनाको विकास गर्न नसके हिन्दूवादी र पाश्चात्य सांस्कृतिक एवं आर्थिक साम्राज्यवादको अतिक्रमणबाट सामाजिक प्रतिष्ठा र विकासको लागि बाधा सर्जना भइरहन्छ तसर्थ राष्ट्रिय (जातीय) मुक्ति आन्दोलनकै एक कडीको रूपमा संघीय सरकार रहेको छ ।

वर्तमान नेपालको एकात्मक शासन विभिन्न विषमताको कारण जनताको बहुमुखी आवश्यकतालाई हल गर्न सकिरहेको छैन । प्रत्येक समस्यालाई सर्वसुलभ तरिकाबाट निराकरण गर्न तथा जनताको आधारभूत मान्यतालाई अक्षुण्ण राख्न संघीय शासन निम्न कुराहरूले पनि उपयुक्त र अनिवार्य देखिन्छ ।

(क) भौगोलिक विषमताको कारण
(ख) जातीय विषमताको कारण
(ग) आर्थिक विषमताको कारण
(घ) धार्मिक विषमतको कारण
(ङ) सांस्कृतिक विषमताको कारण
(च) भाषिक विषमताको कारण
(छ) ऐतिहासिक विषमताको कारण

## स्टालिनवाद (Stalinism) :

सोभियत भूमिमा सन् १९२४ देखि १९५३ सम्म निरन्तर २७ वर्षको लामो निरंकुश अधिनायकवादी साम्यवादी शासन गर्ने स्टालिन साम्यवादी सिद्धान्तको वास्तविक शासक हो । आफ्नो २७ वर्षको उन्मत्तशासनकालमा के के मात्र गरेनन् भन्ने कुरा आतंकवादको शब्दकोषमा पाउन गाह्रो छ । साम्यवादी विश्व इतिहासमा सबैभन्दा बढी नरहत्याको उपाधि पाउने स्टालिन हेर्दामा एकदम डरलाग्दो देखिन्थे । रातो तथा तौंडा अनुहार भएको स्टालिनका आँखाहरू प्रायः क्रोधले जलिरहेको मात्र देखिनथ्यो । उनको आदेश नै साम्यवादी कानुन थियो । विरोधीहरूलाई क्षणभरमै भष्म पार्न सक्ने स्टालिनलाई सैनिक पोशाक खुबै प्यारो थियो । स्टालिनको एउटा महत्वपूर्ण कार्य थियो । गरीब र सामन्तशाही अवस्थामा रहेको सोभियत संघलाई एक समृद्धशाली र शक्तिशाली सैनिक राष्ट्रको रूपमा प्रस्तुति । यद्यपि त्यो शक्तिशाली सोभियत संघको वास्तविक जग जनताको हाडखोंडहरू र रगत-पसिनाको बलमा बनेको किन नहोस् ।

उनका कार्यहरू र विचारहरू नै स्टालिनवाद हो । स्टालिनवादलाई केही बुंदाहरूमा प्रस्तुत गर्दा :-

- सञ्चारका माध्यमहरू पूर्ण सरकारी नियन्त्रणमा लिई साम्यवादी मत प्रचारमा (Propoganda purpose) प्रयोग ।
- विरोधीहरूको व्यवस्थित रूपमा उन्मूलन ।
- नैतिकता र कानूनलाई पर्वाह नगरी मनोमानी रूपमा प्रयोग
- आफ्नो नेतत्वको वरिपरि लोकप्रिय समर्थन जुटाउन सफल ।
- पञ्चवर्षीय आर्थिक योजना (Five Years Plans) लागू गरी देशको आर्थिक विकासमा वृद्धि ।
- "एक देशमा समाजवाद" (Socialism in One Country) नीतिका प्रतिपादक ।

राजनीतिक विद्वानहरूको मत अनुसार स्टालिनवाद नै लेनिनवादको विस्तार हो । लेनिन पछि स्टालिन पहिलो साम्यवादी नेता हुन् जसले मार्क्सवादी सिद्धान्तलाई मूर्तरूप दिने प्रयास गरेका थिए । यस्तो भयङ्कर नेता स्टालिनको मृत्यु हुन्छ भन्ने बिर्सिन बाध्य भएका सोभियतवासीहरूका बीच सन् १९५३ मा उनको देहावसान भयो । रूसका कमजोर मन भएका शान्तिप्रिय जनताहरूले लामो सास फेरे ।

## स्थायी शत्रु र मित्र

राजनीतिमा स्थायी रूपमा कुनै पनि शक्ति शत्रु रहिरहँदैनन् । राजनीतिक परिस्थिति अनुसार शक्तिहरूबीच शमीकरण वा ध्रुविकरण भइरहन्छ । अर्थात आफ्नो शत्रुको पनि आफ्नो मित्र हुन्छन र सत्ताधारीको शत्रु सदैव सत्ता विहीनहरू हुन्छन् ।

## सट्टल डिप्लोमेसी (Shuttle Diplomacy)

कुनै राज्यको आन्तरिक समस्याको समाधानको लागि राज्य प्रमुख, सरकार प्रमुख वा उच्च नेतृत्व वर्गले अकस्मात एक राज्यबाट अर्को राज्यमा यात्रा गर्ने र फिर्ता आउने कार्यलाई (Shuttle Diplomacy) भनिन्छ ।

## संयुक्त भोगाधिकार (Condominium)

दुई वा दुईभन्दा बढी राज्यहरूले कुनै उपनिवेश वा भूभाग वा क्षेत्रमा आफ्नो आधिपत्य कायम गरी त्यसमा दुवै राज्यको सार्वभौमिकतालाई कायम गरिने विधिलाई संयुक्त भोगाधिकार भनिन्छ । संयुक्त भोगाधिकारको मुख्य विशेषता यो हो कि कुनै क्षेत्र, भूभाग वा उपनिवेश दुई राज्य अधिनमा रहन्छ र दुवै राज्यको राष्ट्रिय इलाकाको अभिन्न अंग ठानिन्छ । संयुक्त भोगाधिकार कायम गर्ने राज्यहरूले आपसी सम्झौता वा समझदारीको आधारमा स्थानीय प्रशासन चलाउँदछ र स्थानीय प्रशासकहरू नियुक्त गर्दछन् ।

## स्न्याप डिभिजन (Snap division)

संसद वा यसका समितिहरूमा विचाराधीन रहेको विषयमा अचानक मतदान गराउने कार्यलाई (Snap Division) भनिन्छ ।

## स्न्याप पोल (Snap Pool)

राष्ट्रपति, राजाबाट व्यवस्थापिकालाई राज्यपालबाट विधान सभालाई समय अगावै अकस्मात भंग गरी त्यसको केही समयभित्रै निर्वाचन गरिन्छ भने यस्तो प्रक्रियालाई स्न्याप पोल भनिन्छ ।

## हस्तक्षेप (Interference)

अरू देशको आन्तरिक मामिलामा चासो राख्दै यसो गर्नुपर्दछ उसो गर्नुपर्दछ भनी दवाव दिने र नमाने जाई लाग्ने नीतिलाई हस्तक्षेप भनिन्छ । आन्तरिक मामिलामा चासो राख्दै दवाव दिनु नै हस्तक्षेप हो । अरू देशको आन्तरिक मामिलामा हस्तक्षेप गर्नुहुँदैन ।

## श्रेणी समाजवाद (Guild Socialism)

१९ औं शताब्दीमा औद्योगिक क्रान्तिले औद्योगिक क्षेत्रमा उत्पन्न गरेको विकृतिको प्रक्रिया स्वरूप नै श्रेणी समाजवादको शुरूवात भएको हो । यो श्रेणी समाजवाद बुझ्नका लागि सबभन्दा पहिलो श्रेणीको अर्थ जान्न जरूरी छ । श्रेणी मध्युगीन यूरोपको एउटा विशिष्ट औद्योगिक एव व्यवसायिक संस्था थियो । त्यति बेला यूरोपमा प्रत्येक व्यवसाय अथवा उद्योगका प्रकृति अनुसार छुट्टाछुट्टै संगठन हुने गर्दथ्यो जसलाई श्रेणी भनिन्थ्यो । औद्योगिक क्रान्तिको फलस्वरूप बेलायतको आर्थिक र सामाजिक ढाँचामा पनि परिवर्तन आयो पूँजीपतिहरू दिनदिनै धनी हुँदै गए भने श्रमिकहरू गरीब तथा असहाय हुन पुगे । फलस्वरूप केही उदारवादी विचारकहरूले औद्योगिकरण विरूद्ध आवाज उठाए । यसैक्रममा श्रेणी समाजवादी विचारधाराको पनि विकास हुन पुग्यो। श्रेणी समाजवादले मजदूरी प्रणालीको अन्त गर्न औद्योगिक जनतन्त्रद्वारा उत्पादनमाथि मजदूरहरू (श्रेणीहरू) को नियन्त्रण हुनुपर्ने विचार व्यक्त गरेका छन् ।

श्रेणी समाजवादी विचारधारालाई प्रभावित पार्ने सिद्धान्तहरूमा मार्क्सवाद र फ्रान्सको श्रमिक संघवाद प्रमुख हुन् । श्रेणी समाजवादले श्रमिक संघवाद र विकासवादी समाजवादका मध्यवर्ती मार्ग अपनाएको छ ।

## हट लाइन (Hot Line)

सन् १९६३ अगष्ट महिनामा दुई शक्तिशाली राज्यहरूका बीच गल्तीबाट सम्भावित युद्ध नहोस् भन्ने उद्देश्यले सोभियत रूसको मास्को स्थित क्रेमलिनबाट वासिङ्टन स्थित ह्वाइट हाउससँग जोडिएको सोझो सञ्चार सम्पर्कलाई हट लाइन भनिन्छ ।

## हनिमुन पेरियोड (Honeymoon Period)

विपक्षी राजनैतिक दलका नेताहरूबाट नवनिर्वाचित राजनैतिक दल वा सरकार प्रमुख वा सत्ता पक्षलाई आलोचना, विरोध विना शासन सत्ता सम्हाल्न दिइने अवधिलाई (Honeymoon Period) भनिन्छ ।

## क्षेत्रीयताको मुक्ति

एउटा क्षेत्रभित्रको कुनै पनि जातिविशेषको मात्र अधिकारको निम्ति उठाइने सवाल हाम्रो विचारमा क्षेत्रीयताको आवाज हो । यो राष्ट्रका निम्ति आत्मघाती कदम हो । क्षेत्रीयताको स्वार्थले राष्ट्र विखण्डन हुन्छ र नेपालको अखण्डता हाम्रो सर्वोच्चता हो । कुनै एक निश्चित क्षेत्र वा जातिको मुक्तिको लागि गरिने राजनीति पृथकवादी र प्रतिगामी शक्तिबाट संचालन भएको राष्ट्रहित विपरित उत्पन्न षड्यन्त्र हुन् । तराई वा पहाडवासी समुदायहरूमा पनि आदिवासी जनजाति, दलित, जात, जातिहरू छन् र उत्पीडित जाति वा जातीय समुदायको मुक्तिको समस्या नै आज मूल रूपमा विद्यमान रहेको प्रमुख समस्या हो । तराइवासीहरूले "मधेसियाका हित के लिए" अथवा पहाडवासी राई, लिम्बू, मगर, गुरूङ, तामाङ, नेवार जातिको क्षेत्र वा राज्यको लागि मङ्गोल, किरातहरूको हीतको निम्ति भनेर राष्ट्रको मूलप्रवाहबाट एउटा अलग्ग धार लिएर बहनु राष्ट्रियताको निम्ति हानिकारक छ। पहाडवासी र मधेशवासी प्रत्येक समुदायका आदिवासी/जनजाति जातजाति र दलीतहरूलाई समाहित गर्न नसके लङ्गडो राष्ट्रियता हुन्छ । सबै जातिहरूको सहभागिता विना एउटा क्षेत्रको समस्या वा समाधानको उपाय राष्ट्रिय राजनीति हुन सक्दैन । राष्ट्रिय राजनीतिबाट ओझेल परेका सम्पूर्ण समुदायको समस्यालाई निराकरण गर्ने नीति लिन नसके मुलुकमा ठूलो राजनीतिक संकट आउन सक्दछ । एउटै क्षेत्रको अथवा क्षेत्र वा जाति विशेषको समस्या र त्यसलाई गरिने निराकरण आजको वास्तविकता होइन तसर्थ क्षेत्रीयताको मुक्तिको सवाल हाम्रो पार्टीको लागि स्वीकार्य हुन सक्दैन ।

# सन्दर्भ ग्रन्थ सूची


१. गोवर्धन राना- साम्यवाद

२. किरण राई- राजनैतिक शब्दावलीबारे प्रश्नोत्तर माला, भाग-१

३. टोपबहादुर सिंह- कानुनी शब्दकोष

४. सिद्धिश्वरमान श्रेष्ठ- महत्वपूर्ण राजनैतिक शब्दज्ञान

५. निर्देशिका पुस्तिका २०५४ - जनमुक्ति पार्टी नेपाल

६. कार्यक्रम तथा घोषणापत्र २०५६- राष्ट्रिय जनमुक्ति पार्टी

६. WORLD FACT FILE 1997 LONDON

८. वृहत नेपाली शब्दकोष

९. कमल छाराहाङ- राष्ट्रिय जनमुक्ति पार्टी आजको सन्दर्भमा

१०. जगन किरॉंत- राष्ट्रिय जनमुक्ति पार्टी विभाजन किन ?

११. News Letter 1908- AMNESTY INTERNATIONAL

१२. बृहद् शब्द ज्ञान

## सम्पादक तथा लेखक

| | | |
|---|---|---|
| नाम | : | विश्वास सुब्बा |
| जन्म | : | सन् १९७६,नोभेम्बर १२ |
| योग्यता | : | स्नातक |
| ठेगाना | : | पाख्रीबास–३ बजार<br>धनकुटा |
| सामाजिक सेवा | : | आजीवन सदस्य<br>किराँत याक्थुङ चुम्लुङ<br>कि. ध. तथा सा.उ. संघ<br>एवं विविध |
| भ्रमण | : | मलेसिया ब्रुनाई, भारत, बेलायत, चीन, सिंगापुर बाटोमा पर्ने बहराइन, दुबई, श्रीलंका, थाइल्याण्ड र जर्मन । |

